# काठमाण्डू-उपत्यकाको एक राजवंशावली

(चित्रकार :- डा.हेनरी एम्ब्रुस ओल्डफिल्ड, श्रोत :- ब्रिटिश लाइब्रेरीको वेभसाइट, सङ्कलन :- मोहन प्रसाद सापकोटा)



पुल्चोक, ललितपुरको ओरालोबाट देखिएको काठमाण्डौको दृश्य (वि.सं.१९१०)

सङ्कलन : मोहन प्रसाद सापकोटा
(sapkotamps731@gmail.com)

प्राचीन नेपाल
पुरातत्त्व विभागको मुखपत्र
संख्या ४, श्रावण २०२५

## काठमाण्डू-उपत्यकाको एक राजवंशावलीको सम्पादकीय टिप्पणी :

काठमाण्डू उपत्यकाको राजवंशावली अंग्रेजीमा अनुवाद गराई प्रचारित गर्नेहरुमा डाक्टर राइटको नाम सर्वाधिक प्रसिद्ध छ । यिनीद्वारा सम्पादित वंशावली १८७७ ई. मा कैम्ब्रिजबाट प्रकाशित भएको थियो ।

यसभन्दा अघि कर्नल कर्कपेट्रिकले लण्डनबाट १८११ ई.मा प्रकाशित गराएको वंशावली नेपालविषयक अंग्रेजीको सबभन्दा पहिलो ग्रन्थ होला । अनि काठमाण्डू उपत्यकाको वंशावलीको अंग्रेजी अनुवाद बम्बईबाट प्रकाशित हुने "इन्डियन एन्टिक्वेरी" नामक पुराअनुसन्धान पत्रिकामा प्रकाशित भयो । नेपालको प्राचीन इतिहास र संस्कृतिका अध्येताहरूले वंशावलीका यी अनुवादहरूबाट पर्याप्त लाभ पाएका हुन् । आज पनि यी वंशावलीहरूको सम्बन्धमा जसले जेसुकै भने तापनि तिनमा भएका कुराको खण्डन वा समर्थन गर्दै नेपालका इतिहास लेखिएका छन् । किन्तु, वंशावलीका यी अंग्रेजी अनुवाद ज्यादै अघि प्रकाशित भएकोले तिनको उपयोग गर्न पाउनु सर्वसाधारणको निमित्त उति सजिलो छैन । फेरी आफ्नू वंशावली अर्को कुनै भाषामा अनुवादद्वारा पढेर त्यसको उपयोग गर्दा हाम्रा स्वदेशी अध्येताहरूलाई अलि कस्तो कस्तो लाग्नु पनि स्वाभाविक भएकोले आफ्नै भाषामा प्राप्त आफ्नू वंशावलीको कुनै संस्करण वाञ्छनीय भएकोले यो वंशावली यहाँ प्रकाशित गर्नु उचित लाग्यो ।

वंशावलीको यो संस्करण सुब्बा भूपालमानसिंह प्रधानबाट प्राप्त भएकोले उहाँप्रति कृतज्ञता ज्ञापन गर्दछु ।

यसको प्राप्त प्रतिमा लेखाइको पुरानूपन हुनु स्वाभाविकै छ । वर्णनको शैली र त्यसको विषयको अनुरुपनै त्यसको भाषा पनि भएकोले सम्पादन गर्दा त्यसलाई यथाशक्य मूलकै नजिक राख्ने प्रयत्न गरिएको छ । शब्दका हिजजेमा परिवर्तन गर्दा मूलशैलीको विकृति नहुने भएकोले यथावश्यक स्थानमा यस्तो संशोधन गरिएको छ । मूलप्रतिमा जुन शब्द सन्दिग्ध लागे त्यस्ता शब्दका पछाडि कोष्ठभित्र प्रश्न चिह्न दिइएका छन् ।

वंशावलीलाई आधुनिक "इतिहास " नभन्ठान्नु भूल होला । किन्तु, विशेष गरी पूर्वी देशहरुको इतिहासको चर्चा गर्दा त्यसलाई कुनै महत्व नदिनु पनि त्यत्तिकै भूल होला । स्मरणीय छ, कुनै विषयको प्रतिपादनमा स्थानीय समाजको अवस्थाको मौलिकताको सबभन्दा ठूलो प्रभाव पर्नु स्वाभाविक छ । दृष्टान्तस्वरुप प्राचीन यूनानीहरुको जीवनमा भौतिकताको सर्वोपरि स्थान थियो । सानासाना नागरिक राज्यमा विभाजित त्यसको जनजीवनको सर्वोच्च आकांक्षा त्यसैले भौतिक शक्तिकै प्रदक्षिणा गर्दथ्यो । प्रभावशाली वक्ता, शक्तिशाली योद्धा, व्यवस्थापटु अधिकारीहरु यूनानी जीवनका सबभन्दा आदरप्राप्त व्यक्ति हुन्थे । उनको यो भूताश्रयी दृष्टि उनको कलाकौशल र लेखनशैलीमा पनि अभिव्यक्त छ । अतएव उनका इतिहासकारहरुले घटनाकाल, घटनास्थल, तिनका नायक, घटनाको प्रभाव आदिका सम्बन्धमा पनि मुख्य ध्यान राख्नु कुनै अनौठा कुरो होइन । किन्तु पूर्वी संसारको जनजीवन यसभन्दा भिन्न नै छ । यहाँ भौतिक जीवन गौण र आध्यात्मिक जीवन प्रमुख मानिंदै आएको छ , काहासम्म भने राजनैतिक जीवनमा पनि यसको यथार्थता कायम नै देखिन्छ । झन् नेपाल त दुर्गम पहाडका पर्खालभित्र अवस्थित देश हो, यहाँसम्म अन्यत्रका प्रभाव परिश्रमसाथ र ढीलै आइपुग्न सक्दछन् । यहाँको जीवन र त्यसका मान्यतालाई अरु कुनै देशका जीवन र त्यसका मान्यतासित यति सजिलैसित दाँज्नु युक्तिसंगत नहोला । यसै कारण जहाँ हेरेडोटसका लेखाइमा यूनानीहरुको प्राचीन पदार्थवादी जीवनको फोटो छ, त्यहाँ नेपालका वंशावली, राजस्थानका ख्यातिहरु र हाम्रा पुराणहरुमा समाजका धार्मिक जीवन एवं त्यसप्रतिको मोहको मनोभावको चित्रण छ । हामीले आफ्ना वंशावलीहरुको अध्ययन गर्दा त्यसका प्रणेताको यो मौलिक दृष्टिको विचार अवश्य राख्नुपर्दछ ।

विशेष गरी काठमाण्डू उपत्यकाको वंशावलीमा यहाँका देवीदेवताको यात्रा, यहाँका शासक र सर्वसाधारणको धार्मिक कृत्यको बडो उत्साहसाथ वर्णन गरिएको पाइन्छ । वस्तुतः यहाँको राजनीति र समाजनीतिको यही मुख्य पांग्रा थियो । वर्तमान काठमाण्डूलाई हेर्दा पनि यो कुरा राम्ररी बुझ्न सकिन्छ । आज पनि यस मौलिक दृष्टिकोणमा ठूलो अन्तर परेको देखिन्न ।

भनाइको तात्पर्य यो हो आधुनिक विचारले नेपालको इतिहास लेख्न बस्ता प्राप्त वंशावलीहरुलाई "इतिहास" नै नभन्ठानी त्यसलाई इतिहासको एक "सामग्री" को रुपमा अंगीकार गर्नु श्रेयस्कर छ । यसबाट राजमालाको धेरैजसो क्रमवद्ध श्रृंखला पाइन्छ जो इतिहासका अरु सामग्रीद्वारा जाँच्दा पनि धेरै अंशमा उपयोगी नै ठहर्दछ ।

वंशावलीको वर्णनले कमसे कम समाजको दृष्टिकोणको तस्वीर त अवश्य पेश गर्दछ, र यो देशको सांस्कृतिक जीवनको अध्ययनमा अवश्य नै काम लाग्ने विषय छ ।

नेपालमा आजसम्म ाइएका वंशावलीहरुका मुख्य विषयहरुमा पारस्परिक विरोध छैन । निश्चय नै कुनै वंशावलीमा बौद्धधर्मको केही बढ्ता रंग भेटिन्छ र कुनैमा हिन्दूधर्मको । यो वंशावलीका प्रतिहरु तयार पार्नेहरुको मौलिकतामा निर्भर भएको स्पष्ट छ । तर, जे भए पनि तिनमा कुनै धार्मिक पक्षपात अथवा कलह भेटिन्न । यी वंशावलीहरु पनि यसरी नेपाली जीवनको सबभन्दा ठूलो मौलिकताका समर्थक नै छन् जो धार्मिक सहिष्णुता हो ।

वंशावलीहरुको मौलिक एकरुपताको आधारका तिनको मूल लेखक एउटै व्यक्ति हो कि भन्ने जस्तो पनि लाग्दछ । सम्भव छ कुनै समयमा एउटा व्यक्तिले "गोपाल वंशावली" जस्तो कुनै वंशावलीको एक प्रति तयार पार्‍योहोला जसबाट परम्परागत रुपले पछिपछि विभिन्न थपघटसम्म भएका अनेक प्रति तयार भए । विचारणीय छ वंशावलीका प्रारम्भिक अंशमा देखिएको एकनासेपनाको निर्वाह पछिल्ला अंशमा भएको छैन । यो कुरा मल्ल वंशको अघि र पछिका अंहरुको विचार गर्दा अझै स्पष्ट हुन आउँछ । सम्भव छ जयस्थिति मल्लले लामू संक्रमण कालपछि आफ्नू बलियो हातमा सत्ता धारण गरेर नयाँ स्थिति बसाल्दा उनैले कुनै वंशावली तैयार पार्न लगाए अथवा त्यसैका परोक्ष प्रभावले नेपालको पुरानो व्यवस्थाको कुनै जिज्ञासुले कुनै वंशावली आफ्नै प्रेरणाले लेख्न थाल्यो होला । स्मरणीय छ लगभग यसै समय भारतमा पनि समाजको इतिवृत्तात्मक लेखप्रति आकर्षण उत्पन्न हुन लागेको थियो ।

तर, आश्चर्यको कुरो यो हो आजसम्म प्राप्त यस विशेष क्रमका धेरैजसो वंशावली नेपाली भाषामा लेखिएका भेटिन्छन् । निश्चय नै यसको प्रणेता काठमाण्डू उपत्यकाकै निवासी हो । कारण, गोरखा र बाईसे चौबीसे राज्यका महत्वपूर्ण घटनाहरुप्रति पनि यो वंशावली मौन नै छ ।

यसमा एक अर्को कुरा पनि विचारणीय छ, त्यो यो हो यसमा राणाशासनका अलिकति पनि विरुद्ध हुन सक्ने कुरालाई ज्यादै चतरताका साथ पन्छाइएको छ । उदाहरणस्वरुप चीन नेपाल युद्ध ज्यादै जोगाएर वर्णन गरिएको छ, अंग्रेजसितको युद्धको अति साधारण उल्लेख छ, गगनसिंह र माथवरसिंहको हत्याराको उल्लेख ज्यादै सावधानीसाथ पंछाइएको छ । यिनै आधारमा अनुमान हुन्छ चाहे वीरपुस्तकालयमा भएको "गोपाल वंशावली" जस्तो कुनै मूल रचनाको विस्तारमा प्रस्तुत वंशावलीहरुका विभिन्न प्रतिहरु तैयार हुन सके तापनि राणाकालको कुनै समयमा कारणवश तिनमा कुनै किसिमले

एकरुपता आयन गयो । यी प्राप्त वंशावलीहरुको भाषा र यिनका प्रतिहरुको प्राचीनताले पनि तिनलाई वंशावलीहरु लेखिने वा सारिने क्रमले राणा शासनको कठोर नियन्त्रणबाट त्यसको प्रभावसहित छिर्नु परेको स्पष्ट गर्दछ ।

"गोपाल वंशावली" हाम्रो देशबाट प्रकाशित हुने एक महत्वपूर्ण पत्रिकामा प्रकाशित भइसकेको छ । प्रस्तुत वंशावली त्यससित र अरु पनि प्राप्त ऐतिहासिक साधनसित दाँज्दै उपयोगमा ल्याइएमा नेपालको इतिहासमा जिज्ञासा राख्ने व्यक्तिलाई अनुसन्धानको नयाँ विषय र साधन उपलब्ध होला भन्ने आशा गर्दछु ।

-बालचन्द्र शर्मा

# काठमाण्डू-उपत्यकाको एक राजवंशावली

श्री गणशाय नमः । आदौ नेपालले सकल शास्त्र प्रसिद्ध आदि जुगान श्री श्री पशुपतिनाथ विराजमान भयाका छन् । यी नाथका आदि अन्तकन ब्रह्मा, विष्णु, शिवले पनि जान्न सक्तैनन् ।

यहाँदेखि उप्रान्त केही समयमा श्री महादेवकन दक्ष प्रजापतिले अपमान गऱ्याका सुन्न नसकी सतीदेवीले प्राण त्याग गरिन् र श्री महादेवले सतीदेवीकन बोकी फिर्दा समयमा यो पृथ्वीतलविषे देवीका शरीर जहांजहां खस्या तहांतहां पीठ रूपी शिवशक्ति भया र कामरूपी पीठमा वक्षस्थल खस्या र वछलादेवी भयिन् । त्यही क्रमले नेपालमध्ये गुह्यस्थान पतन हुंदा श्री गुह्यकाली भनी महापीठ भया । यिनै गुह्यकाली देवीले महादेवसित आदि शक्ति म हुं भनी विवाह गर्ना इच्छाले हिमालय पर्बतबाट मैनाका गर्भदेखिन् जन्म लिन गयिन् र पर्वतराजले श्री पशुपतिनाथकन पुत्री कन्यादान दी पशुपतिपुरमा पठाउँदा अनेक सुवर्णादि दाइजो दिई पठायाको यो नेपाल पुरी हो । यस पुरीमा शिबशक्ति भई मृगस्थलीमा आनन्दसित विराजमान भैरह्याका ब्रह्मादि देवताले सुनेर यस पृथ्वीमण्डलविषे आनन्दपुरी भनेको यही नेपाल पुरी हो भनी शास्त्रप्रसिद्ध ठहरायीकन ब्रह्माका आज्ञाले सबै देवता आयी तपस्या गरी यो पुरी गुप्त पुरी हो भनी आफ्ना आफ्ना सुगम हेरी सवै ब्रह्मादि देवता विराजमान हुंदा भया । तसर्थ यही नेपाल पुरी गुप्त पुरी हो भनी लेखियाको छ । वडावडा दिन तिथि भयामा अनेक मुनि आदि सवै देवतासहित गै वारंवार अनेक तीर्थयात्रा सदाकाल गर्दछन् ।

फेरी द्वापर युगका अन्तमा आर्यतीर्थमा मरण हुनाले नेपालविषय पश्चिम चन्द्रागिरि पर्वत भनी देवताहरुले वनाई राख्याका, सुप्रभा नाउं देशविषय धर्मद राजा भनी कहलायी जन्म हुन आयो । तिनले यस शहरमा राजा भै नेपाल पुरीका महिमा वताया । हे महाराज धर्मदत्त, यो नेपाल वडो प्रत्यक्ष पुरी हो । ब्रह्मादि देवता सव विराजमान भै रह्याका छन् । मनुष्यको गम कहिले पनि छैन । देव...मूर्ति चतुर्थ भैरह्याका छन् । आदि श्री गणेश मूर्ति ४, त्यसमध्ये चावहेलका स्वेतविनाक १, चोभारका चन्द्र विनायक २, दक्षिणकाली २, दोलखाको मोगकाली ३, गुह्यकाली ४ । यही क्रमले कुमारी ४ क्वाछे कुमारी १, ठिमी वालकुमारी २, मयमती वालकुमारी ३, कुमारी डोल वालकुमारी ४ । गंगा ४, वागमती १, मणिमती २, रुद्रमती ३, विष्णुमती ४ । खोलो ४, प्रभावती १, हनुमती २, सकुमती ३, भानुमती ४ । वाराही ४, श्वेतवाराही भन्याका उत्तर १, नीलवाराही पूर्व २, वज्रवाराही

दक्षिण ३, धनिल (धूमिक धूम्र वाराही) पश्चिम ४ । योगिनी ४, ब्रह्म कुमारी सि४ भै मिलन आयाकी हुन् १, वज्रजोगिनी २, नीलतारा गोगिनी ३, गुरु योगिनी ४ । नारायण ४, चांगु नारायण छिन्नमस्ता समेत १, शेषनारायण सेखुलिगणेश समेत २, इचंगु नारायण माहेश्वरी समेत ३, चयेंलु नारायण चण्डेश्वरी समेत ४ । महालक्ष्मी ४, वोडे महालक्ष्मी १, लुँभु महालक्ष्मी २, खोकना महालक्ष्मी ३, थछे पूर्वपट्टि लगनखेलका दिव्य पीठ महालक्ष्मी ४ । वैष्णवी ४, पंपा वैष्णवी १, त्वडल (टुँडाल देवी, चण्डोल ) वैष्णवी २, इचंगु वैष्णवी ३, भाजंगु (भाजंगाल, चोभार) वैष्णवी ४ । यति देवताहरु आदि युगदेखिका हुन् । फेरि यिनै युगमा मानसरोवरदेखि शिला नदी तरी कन आयी जयवागेश्वरी कहलायिन् । यी देवी श्री पशुपतिको पश्चिम भागमा विराजमान भयाकी छन् । यी देवीकन प्रमथगण आई वडा नियम गरी तीर्थका जलले आवाहन गरी शुद्ध तीर्थ साधन गरी वनायी दिया । यसै दिनदेखि यी यस पुरीको ग्रामदेवी अधिकारी भयाकी हुन् । पशुपतिका पश्चिमपट्टि ग्रामरक्षक काली तिनै हुन् ।

फेरी कामरूप देशदेखि कामाक्षा आई राजराजेश्वरी भनी कहलायी पशुपतिका दक्षिणतर्फ विराजमान भयाकी छन् । यिनी पछि नवदुर्गा भनी प्रकाश भयीन् । ब्रजेश्वरी १, कोटेश्वरी २, श्रृंगेश्वरी ३, भुवनेश्वरी ४, । मंगलेश्वरी ५, गुह्येश्वरी ६, वछलेश्वरी ७, राजेश्वरी ८, जयनागेश्वरी ९, यी देवी मूलमती भै रक्षा गरी विराजमान हुंदी भयिन् ।

तहांदेखि केही कालपछि प्रदक्षिणा कर्म गरी देवताहरु आई आफ्ना आफ्ना नाम गरी लिंग थापना गरी रहंदा भया ।

फेरि हिमाल पर्वतखंडयुक्त निर्मित चैत्यरूप भगवान् पद्मगिरि पर्वतमा आफैं आयी स्वयंभू भगवान् कहलायी प्रकाश भया । त्यस दिनदेखि महापीठ वन्यो । शिवलिंग-पशुपति, पीठ-वत्सला, चेत्य-स्वयंभू, मसान-करवीर यति ४-ले संयुक्त हुनाले शुद्ध महापीठ वन्याको हो ।

ज्योतिरूपसमं लिङ्गं वाग्मती च समा नदी ।
गुह्येश्वरीसमं पीठं नास्ति ब्रह्माण्डगोलके ॥

यस वचनले ऋषिमुनि देवताहरु आदि आयी यथाक्रमले तीर्थयात्रा, लिङ्गयात्रा, कुंडयात्रा, सवै यांहीं तीर्थ मैला गरी धेरै देवताहरु उद्धार भै गया ।

विरूपाक्ष

फेरि धेरै दिनपछि विरूपाक्ष नाम गरेका पापात्मा व्राह्मण यतिले गुरु नेमुनि पायी नियम गरी सवै तीर्थयात्रा लिङ्गयात्रा गरी श्री मृगरूप पशुपति पुग्दा सिद्ध भै उद्धार भैगया ।

यिनको सिद्ध भयाको मूर्ति मृगेश्वरका वायांतिर दक्षिण मोहोडा गरियाको अद्यापि छँदैछ भनी यति कुरा धर्मदत्त राजाले सुनी धन्य पशुपति भनी केही दिन गयापछि उनका पुत्रपरिवार धेरै भैगया ।

## धर्मदत्त

धर्मदत्तका पुत्रहरूको नांउं हो वीरकेतु १, अश्वकेतु २, मानकेतु ३, रक्तकेतु ४, यती पुत्रका राज्य गरायी आफूले यी नेपालपुरीका दर्शन गरूं भनी आउंदा अकस्मात शिवरात्रिका दिनमा रात्रिविषे धेरै तमाश देखियो र पशुपतिका समीपमा जांदा बाटो नपाई जान सकेन र तपस्याविना जान सक्ने छैन, तपस्या गरी जाउंला भनी धर्मेश्वर महादेवका स्थानमा जाई तपस्या गरी रहंदा महादेव प्रसन्न भै भेद वताया र धर्मदत्तले महादेवको आज्ञामा श्री गुह्येश्वरीमा गई फेरि तपस्या गरी तपस्या गरेका वेलामा महाष्टमीका दिन देवी प्रसन्न भै वरदान पाई देवीका आज्ञाले खड्ग वरदान पाई पशुपतिमा आई देवताहरूसित युद्ध गरी सवै देवताहरूकन जिती आफुले पुत्रपरिवारसहित गरी यो नेपालपुरीमा १०००० दश हजार वर्ष राज्य गरी पशुपतिको वडो उंचो गरी लिंगाकार देवालय वनाया । वासुकीका पनि माफिक देवालय वनाई अनेक द्रव्य चढाई खुशी गराया ।

फेरि पशुपतिका वायव्यपट्टि चैत्य नारायण वनाया । गण आवर्णसहित वनाया । कोही प्रजाहरूकन वौद्धचार चलाया ।

फेरि जयवागेश्वरी कन तीर्थ सुवर्णधारा वनाई सुवर्ण मिश्रित शिलाका आसन वनाई देवीकन खुशी गराई अनेक धर्म गरी प्रजापुत्रसहित उद्धार भैगया ।

## स्वयम्भू र चोभार

फेरि १००० हजार वर्ष वितिगयापछि दानासुर नाउं गऱ्याको कोही दैत्य मधेसतर्फबाट आई यिनै सुप्रभा नाउं  गरेको नगरको राजा भै १००० वर्ष राज्य गऱ्यो । यही दैत्यले आफ्नी पुत्री प्रभावतीकन, जलविहार निमित्त नेपाल खाल्डाभित्र चोभारमा वागमती थुनी पुत्री प्रभावतीकन खेलाई राख्यो । १६ वर्षसम्म पानी थुनी राख्दा समयमा यस पोखरीका मध्यदेखि १ कमलका फुल उत्पन्न भै सिंभूका मूर्तिमा सोभिन गयो र त्यो आदि पद्म कुसुम हो भनी सवै देवता ज्योतिशीहरूले भूप्रकाश गराया । यसै वेलामा मंजेश्वरी आई सिंभू प्रकाश भयो भनी अगले पारी जंगल गराई वस्ती भइन् । पद्मले छोयो भनी पद्मगिरि नाम भैगयो । यो पोखरी भयाको वेलामा वज्रजोगिनी, चांगुनारायण, फूलचोकी देवी, रक्षिणकाली, चोभार, सिंभू (स्वयंभूनाथ) पशुपतिका ज्योत्ति कत्ति वलेन ।

केही कालान्तरमा दोलखादेखि भीमसेन आई पोखरीमा डुंङ्गामा बसी भीमढुंगासम्म पुगी यसै खेल्दा डुंगाले मिची दैत्य पुत्री भगाया भन्या कुरा छ । डुंगा अद्यापि छँदै छ ।

यस्तो वागमती थुनी राख्दा श्री भगवान् नारायण श्री कृष्ण अवतार लियेपछि नेपाल आई दहवोकमा वसी छोरा प्रद्युम्नलाई सुदर्शन चक्र दिई प्रद्युम्नले पानी थुनी वस्ने कच्छपासुरकन छेदन गरेर चोभार फोरी पानी खोली वागमती मधेस पठाई वागमतीको वरदान पाई असुरपुत्री प्रभावतीकन हरण गरी पिता श्री कृष्णसहित द्वारका जांदा भया ।

तहाँदेखि नेपालपुरी अगम भैगयो । सुप्रभा नगर पनि उजाड भैगयो र १००० वर्षपछि भाटभटेनी भन्याको माता, पिता, पुत्र, देवता आकाश रूप भै आई विशालनगर नाम गरी शंखमूल आदि जलशयी नारायणसम्म गरी नगरमध्ये मार्गक्रम गरी वसाई ऋषिपुत्र क्षत्रियलाई स्वयंव्रत नाम राखी राजा तुल्याई नगरको रक्षा गराया ।

## राजा स्वयंव्रत

यी स्वयंव्रत राजाले नित्य वज्रजोगिनीमा गै नित्य कराहीमा तेल पकाई कराहीमा फालहाली डुवी पाक गरी आफ्ना मासु योगिनीहरूकन ख्वाई योगिनी खुशी गराई नित्यप्रति धेरै द्रव्य मागी ल्याई ब्राह्मणहरूकन नित्य दान गरी रहंदा भया ।

कोही दिनपछि यी योगिनी पीठमा १ वीर पुरुष जन्म भयो र तिनलाई रात्रिविषे स्वप्न भयो र यी वीर पुरुष नेपालमा आई स्वयंव्रत राजासित चाकरी गरी वस्ता भया । स्वयंव्रत राजाले आफ्ना नजीकमा राखी सोध्न लाग्या -"हे वीर पुरुष, तिम्रो नाम के हो ? पुरुषार्थ के छ ?" भनी सोद्धा, "हे महाराज ! मेरो नाउँ विक्रमादित्य हो, जो हुकुम होला म गरुंला" भन्दा राजाले ठहराई आफुसंग राखी फिर्दा भया ।

कोही एक दिनमा यी राजा (स्वयंव्रत) ले नित्य द्रव्य ल्यायाको विक्रमादित्यले देखी एक दिन स्वयंव्रत राजा नजाँदै आफु गै आफ्ना अंग सवै चिरी मसला हाली तेलपाक कराहीमा फाल हाली मासु पाक गरी देवीकन खुवाए । योगिनी खुशी भै विक्रमादित्यकन द्रव्यवृक्ष दियिन् । त्यसपछि कराही उल्टाई देवीहरु संतोष भै रहंदा भया । कराही उल्टायाको अद्यापि छँदै छ ।

फेरी पछि स्वयंव्रत राजा आउने दोस्रो प्रहरमा गै हेर्दा कराई उल्टाई राखेको देखेर अँदेशा गरी देवी छेउ प्रार्थना गर्दा देवीले आज्ञा गरिन्-"हेराजन्, अव तिमी आउनु पर्देन । तिम्रा सिपाही विक्रमादित्यकन द्रव्यवृक्ष दिपठायाको छ । त्यही धन लि नित्य दानधर्म गरी अंत्यकालमा तिमीलाई हामीले उद्धार गरुंला ।" भनी देवीले आज्ञा गरिन् र स्वयंव्रत

राजालाई फिराइन् । यी राजा अति खुशी भै "मेरो पुरुषार्थ धन्य हो"-भनी विक्रमादित्यकन गादी दिई आफु तपस्या गर्न गया । भगवतीका कृपाले उद्धार भै गया ।

## राजा विक्रमादित्य

यि विक्रमादित्यले विशालनगरका राजा भै धेरै दत्तकीर्ति ? ठूला ठूला गरी वडा पुरुषर्थी भै देवताहरूको व्रत सम्मान गरी रहंदा भया । यिनैको समयमा भूतल मार्ग गरी दक्षिण दिशादेखि श्री गोदावरी तीर्थ आई नीलवुद्ध पर्वतमनि प्रादुर्भाव भया । फेरी त्यही क्रमले त्रिशूल गंगाजी पनि नेपाल देवपुरी हो भनी जमा पर्वतमनि लुखुठी तीर्थ (वालाज्यू) कहलाई प्रादुर्भाव भयिन् । यिनै तीर्थका वायव्यआग्नेय कोणका सन्मुख यिनै राजाले नेपालका सवै देवतासित आज्ञा मागी गुह्यकालीको खड्ग हातमा राखी आफ्ना देशमा गै आफ्ना कुलदेवता हरिसिद्धि त्रिशक्ति रवि गण चरणसहित गरी कलशमा राखी नेपालमा ल्याई नीलताराका सन्निधानमा राखी जेष्ठपुरी नाम देश वनाई यी देवीका आज्ञावमोजिम गरी नेपालको सव देवता ल्याई विधान, सूत्र प्रवेश, नृत्यनाटक, जय शब्दले गीत वाजा वाद्यसहित गरी प्रमाणले मूर्ति प्रकाश गरी वसाया ।

वाणस्वर रसवाहु (२६७५) शेषे द्वापरकस्य च ।
मार्गे या सेतु नेपाल हरिसिद्धिः प्रवेषिता ॥

अर्थात द्वापर युगको वर्ष २६७५ वाँकी छंदा हरिसिद्धि नेपालमा प्रवेश गरायाको हो । हरिसिद्धि समो न भनी कहलाया । यसकारणबाट नेपालमा अनेक नट नाट्यादि प्रारम्भ भयो ।

फेरी यि राजाले आफ्ना दरवारनिकट पश्चिम स्थान गरी विधिपूर्वकले चार जलशायी नारायण एक शिलामा चार वाहु चतुर्मूर्ति भगवान्कन भगवान्का आज्ञामुताविक स्थापना गरी तीर्थसहित युग्म धारा वसाया । यस दिनदेखि यी नारायणका धारामा दूर्वासंयुक्त कुंद पुष्प वर्षप्रति वगी आउंछ । सो फूल पाउने मानिस निहाल हुन्छ ।

फेरी यी राजाले चतुर्थ स्थान आवर्ण संयुक्त गरी ठूलो देवालय वनाई भवानी स्थापना गरी वडो लिंगाकारका देवालय वनाई प्रतिष्ठा गराया । यी स्थानका दक्षिण स्थानमा वतीस लक्षणसंयुक्त देवीबाट पायाको सिंहासन राखी वैठक वनाई प्रजा पालन, देश नेपालको सेवा गरी १००० वर्षसम्म भोग गर्दाभया । यी राजाको महिमा अपार छ भनी भन्दछन् । यी राजा विक्रमादित्यले अन्तकालमा आफ्ना पुत्र विक्रमकेशरीकन राज्य दिई आफू श्री वज्रजोगिनीमा गै उद्धार भया ।

## राजा विक्रमकेशरी

यिनका शेषपछि विक्रमकेशरीले पनि वहुत नेमन्याय गरी प्रजा पालना गरी सुखसित भोग गर्दा भया । यी राजाले नौ तला गरी दरवार बनाया । ठूलो वगैंचा वनाई वागभित्र जलाशय पारी दरवार वनाया । तलाउ वनाई भंडारखाल वनाया । त्यही स्थानमा अगम निगम गरी स्वइष्ट देवतालाई श्रीमत् माहेश्वरी नाम गरी राजदेवी स्थापना गरी वर्षप्रति सबै प्रजाकन देवाली वनाई राख्या ।

केही दिनपछि आफ्ना वावा विक्रमादित्यको कीर्ति नारायण धारा अकस्मात् वन्द भै गयो र राजाले मनमा वडो फिक्री गरी मेरा वावाले चार जलाशयीका आज्ञा पाई वसायाका हुन्, म पनि जलशयी नारायणछेउ जान्छु भनी गये । प्रथमतः रूद्रमतीका आदि जलशयी १, वागेश्वरका जलशयी २, ज्ञानेश्वरका जलशयी ३, स्वस्थानका जलशयी ४, यी चार नेपालका जलशयी हुन् भनी जाई विनति गर्दा भया । श्रीभगवान्बाट ज्योतिषीहरूसित सोधी काम गर भनी आज्ञा भयो र राजाले ज्योतिषी ब्राह्मणहरु डाकी सोद्धा प्रश्न विचारी ज्योतिषीहरू नवोली रहे । राजाले फिक्री नमानी यथार्थ वनाउनुहवस् भन्दा ज्योतिषीहरूले भने हे राजन ! ३२ लक्षणयुक्त भयाका नरवली दिया उपरी हुन्छ । धारा वह्वा प्रकाशीयते राजन् इति वाक्यं श्रुत्वा तत् कार्य मया अवश्यं क्रीयते इत्यर्थं स्थापितम् मानसे ॥ केही दिन वितिगयापछि राजाले प्रजाहरु कोही संयुक्त भया पनि अपराधविना प्रजाहरूको हृदय विदीर्ण गर्नु छैन, मछेउ पनि केही लक्षण ता छन् भनी आफू नराधिपत्य अवस्था र रानी सुष्ठुशीला, सुशीलाहरु त्यागी, पुत्र भूपकेशरी डाकी गुप्त अर्थ वताए हे पुत्र ! आजदेखि चौथा दिनमा हाम्रा धारामाथि संपूर्ण शरीर छोपी सुतिरहन्या पुरुषलाई तिमीले गै मुख नहेरी चांडो काटी आउनु र ताहांउप्रान्त धारा वहनेछ भनी अऱ्हाया र सो रात धर्मका निमित्त आफै धारामाथि चढी मुखदेखि खुट्टासम्म सेतो कपडाले छोपी सुतिरह्या । छोरा भूपकेशरीले पिताको हुकुममा जाउं भनी, जांदा धारामा सोही वमोजिम सुतेको देखी झट्ट गै शस्त्र प्रहार गर्दा सुतेको जीव छिन्न भिन्न भै ठूलो शब्द गरी धारा चल्यो र भूपकेशरी खुशी भै हेर्न जांदा दुवै धारादेखि रक्त वगेको देखे । हीटी मंगल पनि पितृहत्या गर्न्याको मुख हेर्नु छैन भनी फर्की गयाको अझतक छँदैछ । ताहांपछि पानी वह्यो । राजपुत्र भानुमती पुग्दा सवै किरा मात्र जलमा वगी आयाको आश्चर्य मानी दर्वारमा पुगे । भोलिपल्ट राजा पनि काटी राखेको, धारा पनि वगिरहेको भन्ने हल्ला उठ्यो । राजा भूपकेशरीले पनि सुनी वावाले छलकार गरी पाप वोकाये भनी अफसोससाथ पिताको पितृकार्य गरी, मुमाकन राज्यभार दिई पितृहत्या भोचन गर्न वाजे विक्रमादित्य उद्धार भएका स्थान वज्रयोगिनीका शरणमा पुगे । प्रभु तारिणीका शरणमा गै प्रार्थना कल्पना

गर्दा श्री देवीले करुणा गरी योगिनीहरु पठाई शिक्षा गरिन् "हे वालक ! केही कीर्ति वनायस् र पाप मोचन होला । यांहादेखि पश्चिम कलिंग उडी गयाको हेरी सो ठाउंमा बौद्ध मन्दिर वनाउ भनी श्री तारिणीका हुकुमले श्री योगिनीहरूले कलिंग पक्षी उडाइदियाको हेरी राजपुत्र पछि पछि आया । पंछी एक स्थानमा आई वस्यो र सो ठाउं ठहराई तांही बौद्ध मन्दिर वनाउन आरम्भ गर्दा भया । ठूलो भक्त राजा विक्रमकेशरीको शिर मेरा स्थानमा ल्याई राखिदेउ भन्ने श्री तारिणीको हुकुम पाई सो शिर गणहरुले गै ल्याई तारिणीका मन्दिरमा राखिदियाको अद्यापि सांखुमा छँदैछ ।

## भूपकेशरी

वहांपछि भूपकेशरीले तारिणीक आज्ञावमोजिम मन्दिरको प्रारम्भ गर्दा पितृहत्याका पापले यी राजपुत्र वस्याका ठाउँमा मेघशून्य भै जल वृष्टि भएन र राजपुत्र अत्यन्त दुःखित भै धेरै कपडा मगाई रात्रीमा सवै कपडा फिँजाई शीतले भिजाई नित्य सो शीत निचोरी त्यै पानीले माटो भिजाई नित्य सो शीत त्यही पानीले इंट पारी १२ वर्ष लगाई वौद्ध मन्दिर वनाई सिद्ध गराई प्रतिष्ठा गराई ती राजा भूपकेशरी श्री वज्रयोगिनीमा गै श्रीमाइको स्तुती गरी वस्ता भया । त्यस वेला श्रीदेवी खुशी भै आज्ञा गरिन् "हे राजपुत्र ! तिमीदेखि म अत्यंन्त खुशी भयां । मैले भनेवमोजिम मंत्राकार बौद्ध मन्दिर सिद्ध गरी आयाकोले तिम्रो सबै पाप मोचन भयो । तिमी धन्य छौ । अव तिम्रा वाजे विक्रमादित्यलाई मैले दियाको द्रब्यवृक्षको धन ली तिम्रा भरमुलुकमा विक्रम सम्वत्सर नाउं गरी संवत्सर फिराउनू । कलियुगका ३१४२ वर्षा जव होला तव तिम्रो संवत्सर पैकाश होला" भनी हुकुम दिई देवी अंतर्ध्यान भयिन् ।

यी राजपुत्र भुपकेशरीले उद्धार भै रहेका वाजेको शिरकन प्रमाण गरी स्वस्थान प्राप्त हुंदा भया । आफ्नी महतारीकन प्रणाम गरी सवै वार्ता सुनाई देवीका आज्ञावमा[जिम द्रव्यवृक्षको धन ली संवत्सर फिराउन भनी भूपकेशरी गया ।

तहांपछि रानीले पनि अति धर्मव्रती भै प्रजा पालन गरी लोकमा धन्य धन्य कहलाई कीर्तिहरू धेरै गरी अनेक देवता स्थापन र नवसागर भगवती स्थापित गरी आफ्नू नाउंबाट प्रकाश गर्दी भयिन् । ती भगवती कस्ती भनया पलांचोक भगवती १, नक्साल भगवती २, स्वभा भगवती ३, नवसागर भगवती ४, यी चारै भगवतीको मूर्ति एकै कालीगडले बनायाको हो । पलांचोक भगवती वनाइसक्दा त्यस्तै भगवती अन्त वनाउला भनी ( त्यसका) दुवै हातको दुवै अंगुल कलम गरिदिया । तै पनि नालाको भगवती वनाया र एक हातै काटियो । त्यसपछि स्वभा भगवती वनायो र दुवै हात कलम गरिदिया । दुवै हात

कलम गर्दा पनि नवसागर भगवती वनायो र नवसागर रानी खुशी भै "धन्य कालीगड" भनी त्यसलाई धेरै धन दिई निहाल गरायिन् । यसपछि केही कालमा नवसागर रानी आदि सवै उद्धार भैगया ।

भोजदेव

त्यसपछि विशालनगरको राजा भोजदेव नाउं गरेको एक पुरुष हुन आये । तिनले विक्रमादित्यका महिमा सुनी मैले पनि त्यस्तै पराक्रम गर्नु पऱ्यो भनी बहुत गुमान गरी देवदत्त (देवीबाट पायेको) सिंहासनमा वस्न तयार हुंदा त्यस वेला सिंहासनका ३२ लक्षणहरू सवै पुतली भै विक्रमादित्यको अनेक ज्ञान, धर्म, पुरुषार्थ, विवेक धैर्यको वर्णन सुनाये । राजा सिंहासनमा बस्न जांदा बस्न नदी सिंहासनसमेत आकाश मार्गले उडी स्वस्थानमा प्राप्त भयो र भोजदेव चकित भये । यी राजा अति अभिमानी हुनाले देवका योगले एक रात्रिका बीचमा नवसागर भगवती कोप भै आफ्ना अगाडिका इनारदेखि आगो उठाई रातभरमा नर, जीवजन्तु धेरै भस्म गरायिन् र विशाल नगरका राजा, प्रजा नगर जली उजाड भै गया । त्यसै कारणले यो नेपालमा साना साना गाउँमात्र भयाको अद्यापि छँदैछ । ठूलो देश सोही वखत उजाड भयाको हो । यिनै वर्षमा रुद्रमती हट्खोल भै रह्याका शून्य देशमा जान मन गरी बूढानीलकंठसंधि वहन गया । अनेक तीर्थ ईशानेश्वर ज्ञानेश्वरका मध्य गरी वग्यो । सहर उजाड भयेपछि ज्ञानेश्वरमा पारसमणि छ भन्ने कुराले धातु लगी छुवाउंदा धातुमात्र सुवर्ण भयो, पारसमणिको पत्ता लागेन ।

मैजुवहाल

त्यसका २००० वर्षपछि पश्चिम मारवाड देशकी पिङ्गला नाभ गरेकी १ रानीले आफ्ना पुरुषबाट धेरै अपमान गर्दा स्वप्नाका प्रभावले ती रानी श्री गुह्येश्वरीका शरणमा आई नेपाल पुरीमा प्राप्त भयिन् । यी रानीले श्री गुह्येश्वरीमा गै निराहार गरी कठिन तपस्या गरी देवी प्रसन्न भै वरदान दियिन् "हे रानी ! तेरो मनोरथ पूर्ण हुन्छ । तैले चावहेल भन्याका ठाउंमा वडो नेम गरी वाहाल वनाई बसी नित्य यहां आई मेरो काजल लाइरहनू कोही कालमा तेरो पुरुष यहीं आई वश्य होला भनी ईश्वरी अन्तर्ध्यान भयिन् । रानीले देवीका आज्ञावमोजिम देवीगणबाट काम गराई लक्षणक्रम गरी मयेजु वाहाल कोट वनाई चारैपट्टि भिन्न गरी चार धारा जल शोधन गरी वनाइ बसी नित्य देवीका स्थानमा जाई दर्शन गरी काजल लगाई आनन्द गरी वस्ती भयिन् । मैजु वाहालचाभेल नाउं गरी देश वनाया । फेरि लौहका वाणहरू प्रहार गरी देवताहरू खेलेका वाण शिला भै गयाका

लोहशीला नाम कुमारी अति भयंकर भयिन् र देवीछेउ विनती गरी श्री श्वेत विनायक जमाया । यी गणेश वौद्धप्रिय हुन् ।

केही कालपछि रानीका धर्मब्रतले मारवाडाधिपति सुदर्शनको चित्त चंचल हुनगयो र राजाले रानी खोजी आउंदा, देवताहरूले दिव्य परमसुंदरी भै रह्याकी पिंगला रानी कन छेकी समात्न लाग्या र रानीले देवताहरूदेखि मधुर वचन गरी गुह्येश्वरी देवीकन पुकार्दी भयिन् । पिंगला रानीका वचन राजाले सुन्या र राजाको मनमा अंधेर भै मेरी रानी ता अघि यस्ती सुन्दरी थिइनन् भनी राजाका मनमा उठ्दा रानीले म पिंगला रानी हुं भनी पुकारिन् र यि रानी ता मेरै हुन् भनी नजिक जांदा रानीले राजाकन प्रणाम गरी अघिको दुःख समझी केही नवोली देवीका समीपमा वस्न गयिन् । त्यस वेला सवै देवताकन सुनाई ठूलो स्वर गरी वोल्न लागे “अहो देवता हो ! यी मेरी रानी हुन् । तिमीहरूले कसरी लान्छौ” भन्दा सवै देवताहरू मिली राजा सुदर्शनकन घेरी “मिथ्या हो । मिथ्या हो, यस्ती सुंदरी स्त्रीकन मेरी हो भन्ने”-भनी मार्न तयार हुंदा ठूलो युद्ध भयो । राजाले पनि धेरै शस्त्र प्रहार गर्‍या । देवताहरूले पनि राजाकन घेरी शस्त्र प्रहार गर्दा राजा मरणांत भया र श्री देवी आई देवताहरूलाई “यी रानी राजाकी हुन्”-भनी वुझाई रानीवाट पुरुषको सम्मान गराई स्त्रीपुरुष मिलाई पठायिन् । केही कालमा ती दुवै जना स्त्रीपुरुष भै नित्य देवीको सेवा गरी धेरै वषएसम्म मैजु वाहाल कोट नगरमा वसी ईश्वरीका आज्ञाले आफ्ना देश मारवाड....उद्धार भैगया ।

अघि देवताहरु गमन गर्‍याको संख्या । धर्मदत्त पछि शून्य वर्ष १०००। फेरी दानासुरको भोग वर्ष १०००। फेरि पुण्य वर्ष १०००। विशालनगरका स्वयंब्रत राजाको भाग वर्ष ३००। विक्रमादित्यको भोग वर्ष १०००। विक्रमकेशरीको भोग वर्ष ३५०, फेरि नवसागर रानीको भोग वर्ष ५०। यति वर्ष गयापछि द्वापर युगको शेष ९५०। अवउप्रान्त कलियुगका दृश्य भोग भनी राजाविना हुने छैन भनी सवै देवता मिली मनुष्कन राजा गर्न इच्छा गर्दा भया ।

## अथ नरमाला लिख्यते

नीलकंठ प्रकाशस्य क्रमेण प्रवर्तमान कलियुग भूपाल मालिका चरणात् वज्रस्य राज्ये श्री नित्यारामो हिमवत शैल पर्वत महारथी भूतमण्डले मृगस्य भंडारकात्प्रादुर्भूते तदनु नेमेत्यादिभिः ऋषिभिः प्रत्यक्षीकृता देवताः प्रति स्थापिताः पशुपतिश्वर भट्टारकश्लेष्मांतककानने विराजमानः स्थितः गोपालो नाम भूपालस्य कपिला गौः

कीर्तिपुरात् वाग्मती तीरे गत्वा तया क्षीरेण प्रदेशात् पशुपतिः प्रकाशितः । तेन नेपाले प्रथमं राज्यं भुंजीत गोपालाः क्रमेण राज्यं प्रसशास ।

## पशुपतिनाथ

श्री पशुपतिको अधिको लिंगको देवालय भत्की छोपी रहंदा कीर्तिपुरदेखि कैली गाई नित्य आई दूध चढाई गयाकी गोठालाले देख्या र हेर्दा श्री पशुपतिनाथ प्रकाश भया । त्यस गोठालाकन मुनिऋषि आदिले अनेक क्रमले वुभाई "कलियुगमा राजा हुन्या छैन" भनी ब्राह्मण गोठालाकन राजा तुल्याइकन वसाया । यी राजाको नाउं भुक्त नंद (वर्ष ८८) । यी राजाका पालामा श्री पशुपतिनाथ प्रकाश भै व्यापक वनमा नित्य जाई किरात रूपले खेल्दथ्या ।

अस्य पुत्र भीम गुप्त (वर्ष ८५) । अस्य पुत्र जय गुप्त वर्ष (वर्ष ९२) । अस्य पुत्र यक्ष गुप्त (वर्ष ८२) । अस्य पुत्र हर्ष गुप्त (वर्ष ९३) यति राजा ५ पुश्तासम्म सवै ब्राह्मण गाई पाली मातीर्थका समीपमा ठूलो गोठ बनाई देवता प्रकाश भै रक्षा गरी वसी रहंदा भया । यति राजा ५ पुश्ता मुनिऋषिले जमायाका हुन् ।

## गोपालवंश

यसपछि यक्ष गुप्तको सन्तान भएन र मध्येसका अहीर गोपालकन ल्याई राजा गर्‍या । राजाको नाउं वर सिंह (वर्ष ७५) । अस्यपुत्र जयमति सिंह (वर्ष ७५) , अस्य पुत्र यलंव ( वर्ष ५०) अस्य पुत्र पवि (वर्ष ३५) । यी राजाका पालामा कलियुगका प्रभावले पृथ्वीकन छोयो भनी चारै दिशाका पंडित ज्योतिषीहरूले सुनाई दिया र दिनंदिन सवै दिशाका जीवजन्तुकन पाप चेष्टाले संयुक्त भै गया । यहांदेखि अघि देवतावर्ष द्वापर युगको शेष हो ।

## किरात

नेपालमा तहांदेखि देवताको महिमा गयो भनी ४ भैरवहरू मिली सम्मत गर्न लाग्या । प्रथम नुवाकोटका भैरव १, भक्तपुरका भैरव २, टीका भैरव ३, महापीठ पचली भैरव ४, यी पश्चिम दिशा आगं चोकदेखि आयाका भैरव हुन् । यी भैरव आई प्रकाश भै नेपालमा कलियुग दृष्टि हुन लाग्यो । विना राजगृहले हाम्रो रक्त पान हुन्या छैन भनी राजा तुल्याउन इच्छा गर्दा भया । यो वृत्तान्त इन्द्राणीघाटका देवीले जानी नेपालमा सदा सर्वदा राजी हुन्या छ भनी नेपालमा मनाजु कहलाई नेपालका उत्तर दिहामा विराजमान हुंदी भइन् । कुमारी देवी आयाको सुनी दिग् कुमारीहरू पनि प्रकाश भयिन् । पूर्व ठिमी वालकुमारी १, दक्षिण क्वछे वालकुमारी २, पश्चिम वल वालकुमारी आई ज्ञानेश्वरसन्धि मयमती

वालकुमारी अघि विशालनगरका संनेश्वरी मयाकी हुन् ३, उत्तर मंगल पुरकी वालकुमारी ४, यति नेपालका राजाका देवता आदिदेखिका हुन् । यी देवहरूको महिमा सवै द्वापर युगका भित्रै हो ।

युग भोग संख्या:- सत्यको १७२८००० । मनुष्यको आयु १०००० । धर्मज्ञ । प्राण वायु । शायान मेद संधि । त्रेता युगको भोग १२९६००० । मनुष्यको आयु ५०० । प्राण वायु । अस्थि संधि । द्वापर युगको भोग ८६४००० । प्राण वायु । रक्त मांस चर्म संयोग । मनुष्यको आयुर्दा १००० । कलियुगको भोग वर्ष ४३२०००। मनुष्यको आयु प्रथम पक्ष १२० वर्ष । प्राण अन्नमय । द्वितीय आयु वर्ष १००। स्थूलाहारी । तृतीय आयु वर्ष ५० । मयंत्रितानि पुष्पफलानि । चतुर्थ आयु वर्ष १६ कलियुगस्य भाग ।

सम्भल देशे विष्णु शर्मा ब्राह्मणः स्वपुत्रेण विजयाभिनन्दनेन राजा यापी समहा षडंगेन क्रीतं तेल तिमुष्पाती  सर्वेषां दास्य तस्य यम सहश्रम् यजिवंती सवै कलकी । नृणाम् प्राणाः कृतौ मेधे त्रेतायां सन्धि संस्थिताः । द्वापरे रक्तमांसे स्यात् कलावन्ने व्यवस्थिता:-पाराशरी स्मृतिः पशु मृतौ तु । कृतावस्थिगताः प्राणास्त्रेतायां मांससंस्थिताः । द्वापरे रुधिरे प्राणाः कलावन्ने सुसंस्थिताः ।

नेपालमा अघि धर्मदत्त राजा हुन आउंदा द्वापर युगको भुक्त वर्ष ८४८०००, भोग वर्ष १६०००, संस्थित धर्मदत्त राजाले भोग गरेका वर्ष १००० सम्म रजाईं गऱ्या । कलियुग वर्ष चतु:पाद् मध्ये अग्निपादेन संस्पर्शो जातः । अव कलियुग वर्ष ५, अत्र स्कंध वर्ष ३६, अस्य पुत्र वलंव वर्ष २१, अस्य पुत्र हति वर्ष १९ । अस्य पुत्र नमी वर्ष २६ । यी राजाका पालामा पंचपांडव वनवास हुंदा वनदेखि अर्जुन किरातरूप महादेवसित युद्ध गरी शिव प्रसन्न गराई पाशुपतास्त्र पाई गये । अस्य पुत्र नित्यदस्ती वर्ष ५९ । यिनका बखत पाण्डवहरूको युद्ध कुरूक्षेत्र हुन लाग्यो भनी अर्जुनका हुकुमले धेरै सिपाही युद्ध गर्न गया । अस्य पुत्र कयुग वर्ष ६१ । अस्य पुत्र तुष्क वर्ष ६ । अस्य पुत्र सुयस्य वर्ष ४५ । अस्य पुत्र पंच वर्ष ३७ । अस्य पुत्र केको वर्ष ३८ । अस्य पुत्र सुनद् वर्ष ४१ ।  अस्य पुत्रथुंको वर्ष ५८ । अस्य पुत्र सुप्र वर्ष ५८ । अस्य पुत्र गिध्री वर्ष ७१ । अस्य पुत्र त्वते वर्ष ४९ । अस्य पुत्र लुके वर्ष ५३ । अस्य पुत्र सुप्र वर्ष २९ । अस्य पुत्र गंस वर्ष ३२ ।  अस्य पुत्र गुनंज वर्ष ३५ । अस्य पुत्र सियु वर्ष ३७ । अस्य पुत्र गस्ती वर्ष ३१ । यति सवै किराती राजा भै वस्ता तिनीहरूका दरवार ग...र्ण (गोकर्ण) का जंगलमा अगम गरी वसायाका थिया । यी राजाका पालामा दरवार....श्वरका शरणमा वडो थुम्को वनाई लिंग छोपी वस्यो र जंवुक डोल वा.....

## सोमवंश

फेरि यिनका पालामा पश्चिमदेखि सोमवंशी राजा आई किरातीहरूकन जिती नेपालभित्र ठूलो योगमणि गोदावरी संधि दर्वार वनाई बस्दा भया । किरातीहरू सबै भगाया । किरातीहरूले कलिगत वर्ष ११०८ सम्म राज्य भोग गरी माझ किरातमा बस्न गया ।

किरातीहरू भगायापछि सोमवंशी राजा भया । राजाका नाम-निमिष राजा, वर्ष ३० । यी ब्राह्मण गाईका वहुतै रक्षक थिया । यिनका पालामा दक्षिण गोदावरीमा वगाई लगेको कोई १ सिद्धको सुमेरनी, सोटा, झोली, तुंबा, विभूतका गोला, बश्ंबर यो नेपालका गोदावरीमा पुग्दा वहां बगेको सुमेरनी आदि यहां प्रकट भयाकाले उनै गोदावरी नै रहिछन् भनी जगाया । अस्य पुत्र मलय वर्मा वर्ष ४१ । अस्य पुत्र काक वर्मा वर्ष ४६ । अस्य पुत्र....प्रद वर्ष ८६ । यी राजाले ४ वर्ण वसाए । श्री पशुपतिनाथको लिंगाकार देवालय भत्की बिग्रेको समेत पांच तले सुनका छाना बनाई गजुर चूडामणि सहित गरी बसाया । यिन दिनदेखि श्री पशुपतिनाथको देवालय वडा ऊंचो भयाकोले तल्लादेखि मन्दिर दर्शन भै गयो । यी राजाका बखत कलिगत वर्ष १२३९ । अस्य पुत्र भास्कर वर्मा वर्ष ७८ । यी राजा शिशुपालका अवतार हुन् । श्री पशुपतिनाथको नित्य प्रसाद खाईमात्र भोजन गर्थे । यिनले धेरै सिपाही साथमा ली चार समुद्रान्त सेतुवंध रामेश्वरसम्म गै पाशुपत मंत्र जगाई धेरै सुवर्ण खर्च गरी....हरूलाई पनि व...पशुपतिनाथकन स्नान गराई वागमतीमा बगाई सुवर्णपुरी नाम गरी ठूलो देश बनाई चारै वर्ण बनाई सो सुवर्णपुरीमा बसाया । फेरि यी राजाले मेरा शाखा सन्तान रहोस् भनी पशुपतिनाथसित मागी एक सूर्यवंशी क्षत्रिय ल्याई राजा गरी शांत भै गया ।

## सूर्यवंश, बूढानीलकण्ठ

यी स्थापित भयाका सूर्यवंशी राजाको नाउं भूमि वर्मा वर्ष ७१ । यी राजा गादीमा बस्दा कलिगत वर्ष १३८९ । यी राजाले गोदावरीका दरवार छोडी वानेश्वरमा दरवार बनाई बस्दा भया । अस्य पुत्र चन्द्र वर्मा वर्ष ६१ (९?) । अस्य पुत्र सर्व वर्मा वर्ष ७८ । अस्य पुत्र पृथ्वी वर्मा वर्ष ७६ । अस्य पुत्र ज्येष्ठ वर्मा वर्ष ७५ । अस्य पुत्र हरिदत्त वर्मा वर्ष ८१ । यी राजाले इचंगु, चांगु, चयेजु, सिखा नारायण-चार नारायण नित्य गै धाई दर्शन गर्दा एक दिन राती स्वप्नमा जलशायी आदि रूपी भगवान्ले दर्शन दी आज्ञा गरे-“हे राजन्, तिमी चयंजुसम्म पुग्नु पर्दैन, जयंजुका सट्टा म हुं । मकन शतरुद्र पर्वतपहिरा छोपी राखेको धेरै दिन भयो, म विशालनगरको आदिरूपी हुं । तसर्थ ढुंगा माटा पन्साई हेर” ।-भनी आज्ञा भयाबमोजिम राजाले खनाउंदा भगवान्का नासिकामा धक्का लागि हेर्छन् ता श्री जलशयी

रूपी दर्शन भया । नासिकामा लागेको चोट अद्यापि छँदैछ । यी राजा खुशी भै नीलकंठका उपमाले भगवान्का तलाउ बनाई दिया । त्यस दिनदेखि चार नारायण प्रसिद्ध हुन् भनी जगाया । अघि ४ नारायणको देवालय नहुनाले ४ नारायणका देवालय बनाई दिया । अस्य पुत्र वासुदेव वर्मा वर्ष ६३ । अस्य पुत्र पति वर्मा वर्ष ५३ । अस्य पुत्र शिववृद्धि वर्मा वर्ष ६५ । अस्य पुत्र वसंत वर्मा वर्ष ६१ । अस्य पुत्र शिव देव वर्मा वर्ष ५७ । अस्य पुत्र किकांद्री वर्मा बर्ष ६५ । अस्य पुत्र वृषदेव वर्मा वर्ष ६१ । यी वृषदेव वर्मा राजा गादीमा बस्दा कलिगत वर्ष २५०८ । यी राजा नित्य वज्रजोगिनीमा गै दर्शन गर्थे । एक दिन यिनलाई आदि रूपी भगवतीले दर्शन दी आज्ञा भयो “हे राजन्, म बाहाल पोखरीमा पिंगला रानीले मैजु बाहाल नाम गरी देश बसाउंदा आई बसिरहेको हुं । धर्मदत्तका पालामा मेरो नाम शतरुदैभगवती देवी हो । अब तिमीले मकन यही स्थानमा नगरा र आवरणसहित गरी मन्दिर बनाइदेऊ । यो स्थान मलाई अति रमणीय छ । मेरा धन मन्दिरभित्र राखी....मेरो नाम धनदा देवता भनी प्रकाश गर । राजाले सोही आज्ञाबमोजिम गरी भगवतीको पोख्ता गरी बनाई  धनदा भनी प्रख्यात गऱ्या । फेरि यी राजाले विचार गरे-नेपालमा देवताहरू चतुष्कर्म गरी विराजमान भयाका हुन्” -अब...मूर्ति गरूंला गोदावरीमा संधि ग ( यसपछिका केही पृष्ट नष्ट छन्) । हरूलाई पनि वलिदान चलाई दिया । यस दिनदेखि नेपालमा शिवमत, विष्णुमत, देवमत, वेदमत प्रवल गरी चलाया । अकेक पीठमा वडा विघ्न हुन्या कर्ममा पनि ठूलो कुलधर्म नाश गरी “अहिंसा परमो धर्मः” भन्ने यस्तालाई पनि हिंसा क्रम लगाई चलाई गया । यस दिन देखि जैनहरू कोही कोही मात्र रहे । यस्ता तरहसित शंकराचार्य स्वामीले सबै दिशा प्रदिशा पीठपीठमा जाई दिग्विजय गरी आफ्नू शंकरमत चलाया । श्री वज्रजोगिनीका वचनले सिर्फ उत्तर दिशामात्र छाडी दक्षिण समुद्रका तीरमा बस्न गया । शंकराचार्यले यति गरी गयाकाले नेपालमा अद्यापि पनि सबै मार्ग बराबरी छँदैछन् ।

बुद्धदेवका पुत्र शंकराचार्य देव आउँदा यिनको जन्म भयाकोले सोही नामले प्रख्यात भया । वर्ष ६५ । यी राजाले धेरै कष्ट गरी बहुत धन खर्च गरी श्री पशुपतिनाथका उत्तरपट्टिमा ठूलो लोहाको त्रिहूल बनाई चढाया । फेरी राजेश्वरी संधिमा पूर्व पश्चिमको छाया देखिन्या कुआ थियो । पछि राजा प्रजादिकन कष्ध होला भनी यी कुआ सबै पुऱ्या । अग्र भागमात्र जातिस्मरण नाम गरी ठूलो महाविराटेश्र स्थापना गरिदिया । फेरि श्री पशुपतिनाथका पश्चिम ढोकाभित्र नन्दी मूर्ति बनाई राखिदिया । यस दिनदेखि शिवको र नन्दीको अन्तर्दोष निवारण भयो । अस्य पुत्र धर्मदेव वर्ष ५५ । अस्य पुत्र नामदेव वर्ष ४९

। अस्य पुत्र महादेव वर्ष ५१ । अस्य पुत्र वसंत वर्ष ३६ । यी राजा गादीमा बस्याको वर्ष १५ जांदा कलि २८०० वर्ष गत भयाको थियो ।

श्लोकः-दश वर्षसहस्राणि विष्णुनामनि गोचराः । तदर्धं जाह्ववीतोयं तदर्धं ग्रामदेवताः ॥

यी नेपालपुरी हुनाले भविष्य पुराणका श्लोक भन्दा ३०० वर्ष अघिसम्म भाषण भै गया । त्यसपछि बडा कष्टले मात्र भयो । अस्य पुत्र उदयदेव वर्ष ३७ । अस्य पुत्र मानदेव वर्ष ३५ । अस्य पुत्र गुणकामदेव वर्ष ३०। अस्य पुत्र शिवदेव वर्ष ५१। यी राजा कलिगत वर्ष २९२३ मा गादी बसेका हुन् । यिनले वानेश्वरका दरवार छाडी देवपाटन देशमध्ये ठूलो नौ तला गरी काट बनाई बस्दा भया । यी दरवारमा बस्दा शतरुद्र पर्वतमा गै त्यहांका भूशुक भन्याका नित्यनाथ ल्याई श्री पशुपतिनाथका पश्चिम भागमा बसाया । यी नित्यनाथ बहुत प्रत्यक्ष छन् । फेरि यी राजाले नौ ढोल बनाई नन्द (नौ) गोटा गणेश बसाया । फेरि पूर्व दिशा दोलखाका भीमसेनदेखि भीमसेन आवाहन गरी श्री पशुपतिनाथका पश्चिम दिशामा बसाया । फेरि आफू बस्याका कोटसंधिमा भैरवशिला गोल मूर्ति देशरक्षा निमित्त शिवपुरीदेखि मगाई बसाया । अदिति शिला प्रजाहरुको ऋण सबै तिरी मात्र हेर्न निमित्त मगायाको, शिला भै गया । फेरि देवताहरु गणेश ४, भैरव ४, नित्यनाथ ४, महादेव ४, कुमारी ४, बौद्ध ४, खम्म ४, गगनचारी ४, अश्व ४, चतुः पंचभूत मूर्तिले संयुक्त गरी ४ मार्ग पूर्ण कर्म गरी देश लक्षण क्रम साधना गरी नौ बाहाल आदि नाम बसाया । फेरि यी पतनमा आवर्ण देवता ढोल प्रमाण तुल्याई शिव मूर्ति बसाया । अल्पमृत्यु हरण निमित्त महामृत्युंजयेश्वर जगाया । फेरि टोलको पृथक् गरी नौ इश्वरी जगाई, ढोका, इनार, धारा, नित्यनाथ, डबली, टोल, ईश्वरी, आगं, गणेश ४ यी नौ प्रकारका संयुक्त गरी भूगोल नाम गरी सुवर्ण पुरी महानगर नेपाल देश कर्म गरी बसाया । फेरी धर्मदत्तका पालामा देवताहरूसँग युद्ध गरी देवताका सैन्यलाई दांतमा अड्केको हाड, हातका औंलाले झिक्न लागेको ध्यानले प्राप्त गरी जंगलभित्र विराजमान भैरहेकी वनकाली प्रकाश गराया । सोही संधिमा त्रिनेत्र गरी जंगलभित्र ठूलो कायाले युक्त गरी गणेश बसाया । फेरि ती राजा महाज्ञानी हुनाले नगरभित्र अघिका चैत्य मूर्ति गुप्त गरी राखेको पनि खोजी देश उत्तरपट्टि सारी दिया । यिनले ठूलो नगर बसाई प्रजाहरु खुशी गराया । प्रजाहरूका मरणकाललाई तणा मार्ग बनाई लगी व्रजेश्वरीका पूर्व भाग वागमतीका किनारमा जातविशेषका स्मशान जगाई चलाया । देवीका आज्ञाबमोजिम देशमा पिशाच चतुर्दशीका दिन सबै प्रजा जम्मा गरी देवी रथ बनाई प्रतिवर्ष देश घुमाई रथ यात्रा गर्ने गरे । द्वादशीका दिन चतुर्वर्ण जम्मा गरी महिषवलिसहित पूजा, त्रयोदशीका दिन कुमारीगण भोजन, चतुर्दशीमा देश र

महादेवस्थानमध्ये रात्रिभर अखंड अग्नि जलाई यात्राकर्म संयुक्त गरी देवरथ देश घुमाया ।

फेरि नेपाल श्री वत्सला मूर्ति हो भनी जानी पशुपतिनाथको सेवा गरी श्री पशुपतिनाथमय गराई श्री पशुपतिनाथकन पताका चढाई आफ्ना दरवारसम्म ल्याई बांधी चार दिन राखी विसर्जन गरी वत्....पीठमा विधिक्रम प्रारम्भ....निमित्त कोटेश्वरका देवी पठि रूप स...आठ दिन अघि श्री पशुपतिनाथले निमंत्रणा गर्न पठाई प्रेतचतुर्दशीका दिनमा कुमारीगण युग्म आवाहन गरी देवीका स्थानमा बसाई भुवनेश्वरी, जय गंगेश्वरी, वत्सला आदि अनेक पीठ अर्जन गरी आचारहरू आविष्कार क्रम स्थापन गरी देवीका आ...शास्त्रोक्ताभि संकट विधि नरसिंह आवाहन गरी नृवाहन देवी प्रमाणपूजा गरी नरमांस मातृका क्रमले गण भक्षणले संतुष्ट गरी प्रतिवर्ष चलाया । फेरि क्षेत्रपालेश्वर विविध अनेक द्रव्य धेरै मगाई आचार भुगाल पीठका मंत्र जगाई नेपाल रूपी देवता आवाहन गरी दिप्रा विशेषका विधिले प्रतिवर्षदेखि सबै पीठकन संतोष गराया । यस कारणले नेपाल पीठमा नाना द्रव्य बलिदान प्रकाश भयाका हुन् ।

एक दिन यी राजाले कौने मुनिबाट स्वप्नतीर्थमा कुनै सिद्ध आई नित्यस्नान गरी जान्छन् भन्ने सुनी राजा गै हेर्न जांदा एक भयंकर योगीको दर्शन पाया । राजाले ती सिद्धकन ठूलो प्रार्थना गरी ल्याई ताम्रेश्वरमा बसाया । फेरि तिनै सिद्धसित मत गरी ग्रामदेवी जयवागेश्वरीकन शांत गरी चित्रकार मगाई अनेक विधिले विजयन्यास संकष्टमय विधिक्रमले गर्दामा सिद्धले गुप्त गरी म दुर्वासाको अंश हु भनी राजाकन सुनाया । देवीका गण बडो प्रबल प्रत्यक्ष भैरव नौ लिंगका मुनि पंच मूर्ति स्थिर गरी बसाई आदि पूजित गजकर्ण (गणेश) प्रकाश गरी बसाया । फेरी यी राजा योगी दुबै गै वज्रयोगिनीमा पनि यही विधिक्रमले बडो कष्ट गरी देवीका चित्रकार विजयन्यास विधि जगाया । यति क्रम गरी यी योगिनी गोदावरी संधिलाई श्री लक्ष्मीनारायण नाम गरी शालिग्रामका प्रमाणले गुफामा गुप्त भै रहेका विष्णुनारायण नाम गरी पर्वतविषे विष्णुकन प्रकट गरी जगाया । सिद्ध त्यहींबाट अन्तर्धान भै तपोवनमा जांदा भया । यसपछि राजाले यो चित्रकारविधि कुकर्म ठहराई प्रतिवर्ष कष्ट हुन्छ भनी द्वादश मार्ग चलाया । सिद्ध गुरुको आश्रम ताम्रेश्वरमा कर्मशाला बनाई महादेवकन नित्यार्चना गरी जगाया । त्यसपछि धेरै भोग गरी यी पुरुषार्थी राजा शान्त गै गया ।

अस्य पुत्र नरेन्द्रदेव वर्ष ४१ । अस्य पुत्र विष्णुदेव वर्ष ४७ । अस्य पुत्र भीमदेव वर्ष ५१ । यी राजाले वत्सलामा नरबलि अति कष्ट हो भनी देवीकन शान्ति पूजा गरी शास्त्रका

प्रमाणले शुद्ध छागयुग्म बलिदान गरी कर्म चलाया । नरसिवाको अपराध गर्‍याका यी राजाले हेरी हांसी ठट्टा गरी बस्दा नरसिवाले राजाकन समात्न गयो र राजा खुशी भै धेरै खेत बर्ति दियाको अभ्रतक छँदैछ । फेरि यी राजाले ग्रामदेवी जयवागेश्वरी मानसरोवरदेखि शिला नदी तरी नेपाल आयाको दिन विचार गरी वैशाख शुक्ल पूर्णेका दिन ठहराई त्यस दिनदेखि देवी प्रसन्न निमित्त कौमारीगण बसाई अनेक यज्ञादिक्रम बसाई क्रिया गरी बलिदान पूजा निमित्त नवदुर्गा बसाई बाह्याभ्यंतर कर्म प्रति वर्ष चलाया । यी राजाका संतान भएन र पुत्रीकन १ बुद्ध वैश्य ठकुरी अंशुवर्मा नाम राखी कन्यादा दी राजा तुल्याई आफू शान्त भै गया ।

## अंशुवर्मा

कलिगत वर्ष ३१५७ मा अंशुवर्मा गादीमा बसे ! अंशुवर्मा वर्ष ६८ । यी राजाले देवपाटनमध्येका दरवार छाडी मधेलव (?) भन्याको ठाउमा गै बडो शुद्ध रमणीय धेरै चीज संयुक्त गरी दरवार बनाई बस्न गया । काजीहरूकन त्यहीसंधि घर बनाई बसाया । यी राजा बडो चंचल, महा भयंकर, तामस मूर्ति, ठूलो पुरुषार्थी थिया । यिनले आफैं प्रयाग तीर्थमा गै भैरबनाथकन यथाविधिक्रमले डाकी ल्याई भैरव खुशी गर्ना निमित आफ्ना दरवारसंधि मन्दिर बनाई प्रतिवर्ष आहुति गरी बसायाका अभ्रतक छँदैछन् । यस राजाका पालामासम्म देवताहरू प्रत्यक्ष देखाइदिन्थे । त्यहांपछि देवताहरू स्ववस्य सो स्थानमा सो स्थानमा लोप भै गया ।

## कुम्भेश्वर

अस्य पुत्र कृत वर्मा वर्ष ८७ । अस्य पुत्र मियार्गन वर्ष ९३ । अस्य पुत्र नन्द देव वर्ष ९५ । यिनै राजाका पालामा विक्रम सम्वत् अघि नचलायाको पूर्व कथा सुनी चारै दिशामा चलाई दिया । अस्य पुत्र वीरध्वज वर्ष ९५ । यी राजाका पालामा कोही १ घांसी ज्यापु कुष्ठी भयाको यिनका दरवारसंधि घांस काट्न आउने गरेको देखिंथ्यो । एक दिन सोही कुष्ठी घाँस काट्न लागेको लक्षण संयुक्त सुंदर मूर्ति भयाको राजाले देखी डाकी मित तुल्याई सोधे “हे मित्र ! हिजो ब्याहानसम्म कुष्ट भयाको शरीर, तिमिले के काम गरी आज यस्तो निर्मल सुंदर मूर्ति गरायौ ?” राजाको यस्तो वचन सुनी गोठालो विनति गर्न लाग्यो “हे महाराज ! म हीजो हिउंसो वागमती पारि ललितपुरमा घांस काट्न गयाको गर्मीले प्यास लागी पानी खोज्न जाउं भनी घांस बोकन्या नोल त्यही भूमिमा गाडी पानी खोज्न गया । एक स्थानमा पानी उमर्‍याको देखी पानी खाई सोही जलमा स्नानसमेत गर्दा मेरो शरीर निर्मल भयो र आश्चर्य मानी नोल लिंउ भनी जांदा नोल पनि सिद्ध भै झिक्न भएन”

भनी राजालाई सुनायो । धन्य ललितपुरको तीर्थ ! सो तीर्थमा स्नान गरी तिम्रो शरीर निर्मल भयाकोले तिम्रो नाउं ललित भन्छु भनेर तीर्थ देखाउने राजाको हुकुम पाई तीर्थ र नोल सिद्ध भयाको देखाइदिया । राजा खुशी भै धेरै घन खर्च गरी तीर्थ र नोल सिद्ध भयाको बीचमा ललितपुर नाम समतल बनाई, ललितपुर नाम गरी २४ हजारको शहर बसाई दिया । चौबीस तत्वका कारणले चौबीस टोल बनाई चौबीस हजारका शहर बनाया । राजाले शहर बनाउनुअघि यी तीर्थको नाउं कसरी थाहा पाउनु-भन्ने ध्यान गर्दा राजालाई स्वप्नावस्थामा देवता आई भने- हे राजन् ! यो तीर्थको नाउं गौरीकुण्ड हो ।

यो कुण्डका भागमा सर्वेश्वर शिवलिंग हुन् । मेरा अंगदेखि २० हात उत्तरमा नागह्रद तीर्थ हो । गोठालाको नोल सिद्ध भयाका कुंभेश्वर हो । तैले त्यहीं श्री यंत्राकार पांच थुम्का गरी ललिपत्तन नाम राखी चौबीस टोल गरी शहर बसाई त्यहीं गै बस्नु र तेरो उद्धार होला भन्ने आज्ञा हुंदा बसायाको ललितपतन (पाटन) शहर हो । यी राजा सर्वेश्वरका आज्ञाबमोजिम गरी पाटनमा राजधानी गरी सकल परिवारसमेत उद्धार भै गया । यो ललितपत्तनमा स्वयंभू, कामेश्वर....कामदेवको मूर्ति बनाई राख्नु हुंदैन । राजा रवि देव गादीमा बस्ता कलिगत वर्ष ३६०० । चार वर्षपछि ललितपत्तन बसायाको हो ।

## नरेन्द्र देव

अस्य पुत्र नरेन्द्र देव वर्ष ९८ । यी राजाका पालामा गोरक्षनाथ नेपालमा आई भिक्षा गर्दा कसैले पनि भिक्षा दिएनन्  र गोरक्षनाथ बडो कोप गरी नेपालमा दुर्भिक्ष गर्ना खातिर नव नाग आसन गरी मृगस्थलीमा बसी तपस्या गरी रहंदा नेपालमा मेघ शून्य भै ३१द्द वर्षसम्म पानीको छिटा पनि परेन र राजाले ज्योतिषी पण्डितहरू डाकी सुध्याया र सज्जनहरूले विचार गरी प्रश्न विनति गरे-हे महाराज ! गोरक्षनाथले नेपालमा दुर्भिक्ष गर्नाका निमित्त नेपालका नागहरू सबै आफुले आसन गरी तपस्या गरेकोले मेघशून्य भै गयाको हो । तिनी नउठाई पानी नपर्ने हुनाले तिनका गुरु मछेन्द्रनाथ आयामात्र गुरुका सत्कार निमित्त उठ्नेछन् भनी सुनाया । राजाले सो यत्न गर्ना निमित्त सिंभुकार  वज्राचार्य नाम गरेको पुरुषार्थीकन गुरु पदवी गरी कामरुप पीठ गै बडो कष्ट साथ मछेन्द्रनाथ प्रसन्न गराया । फेरि ललितपुरका श्री पूर्णचण्डीको आज्ञा विना मैले नेपाल जान हुंदैन भन्ने आज्ञा भयो र श्री पूर्णचण्डीको सेवा गरी आज्ञा पाई लगन टोलमा बसी कोटी जप गर्दा मछेन्द्रनाथका मूल रूपी पीठ देवी भ्रमर रूपले आई कलशभित्र पस्दा राजा नरेन्द्रदेव निद्रावश भै कलश ढाक्न नसक्दा उडीगया । पछि वज्राचार्यको लातको चोट खाई भ्रमर रूपी मछेन्द्रनाथ कन कलशमा ढाक्न समर्थ भया । त्यहांपछि गोरक्षनाथ तपस्या गऱ्याका

स्थानमा पंचकुमारीबाट गुरु पाल्नुभयाको खवर गोरक्षनाथले सुनी दर्शन गर्नालाई उठी जांदा नागहरू सबै उठी आफ्ना आफ्ना स्थानमा गया । त्यसपछि नेपालमा ठूलो वर्षा बर्स्यौ । कोटी जप गरेको स्थानमा डोलपीठ भनी पीठ जगाया । यी राजाले मछेन्द्रनाथ ठूला सहकालमा देवता हुन् भनी अनेक विधिकर्म गरी मछेन्द्रनाथकन स्थापित गरी खुशी गराया ।

प्रतिवर्ष रथयात्रा गरी मीननाथका रथ अगाडि गरी देश घुमाई रथारोहण गर्दा सबै देवता आया । पंचायन देवताले विलंब गर्दा गोरक्षनाथकन मेरा संघि बस भनी मछेन्द्रको आज्ञा भयो  र गोरक्षनाथले पनि गुरुको आज्ञा शिरोपर गरी देशका उत्तर भाग शंखमूल का तीर्थमा स्थान तुल्याई बस्दा भया । नेपाल प्रवेश हुंदा मछेन्द्रको आज्ञा भयो-नेपालमा सहकाल गर्नालाई श्री पशुपति मान्नु, आसमुद्रांत त्रिभुवनपर्यन्त सकल लोकमा अधिपति उनै हुन् । देवताहरू सबै तिनैका हुकुममा छन् । सबै ब्राह्मण संग गरी वैशाखमा शहरमा आर्यातीर्थका जलले अभिषेक गर्नु र वर्षा सुफल होला ....

यसै दिनदेखि वैशाख भर पानी चढाउने चलि आयो । मछेन्द्ररथयात्रा भयाका वर्षमा चोभारका रथयात्रा प्रतिवर्ष देवपाटनमा भैरहेको गरी चोभारै फर्काई लैजांदा दाना (?) खाडल खोलामा रथ डुबिगयो । देवता जलमा उत्रेकाले लगी सो स्थानमा राखिदिया । त्यस दिनदेखि चोभारको रथयात्रा बन्द भयो । मछेन्द्रनाथ आयाको संख्या अतीत कलिवर्षेषु स्वाङ्ग स्वर रसकरान्विते (२६७६) नेपाल विजये श्री मानाचार्यो वलिकेश्वरः ।

फेरि मछेन्द्रनाथ राख्नाकन अमरापुर नाम गरी १ देश यथाक्रमले बसाया । मैह्ना ६ ललितपुरमा देवालय बनाई बसाया । यिनै रीतले मार्ग मैह्नादेखि वैशाखसम्म उत्तरायण...फेरि जेष्ठदेखि कार्तिकसम्म दक्षिणायन अमरपुरमा सदा सर्वदा भै गयो ।

## नरदेव

अस्य पुत्र नरदेव वर्ष २३ । यी राजाले अघिका देवताका पालामा भै गयाको हरसिद्धिको नाच बन्द भै गयो र वंधुदत्त आचार्यकन बुझाई उठाउंला भनी काम लाउंदा बौद्ध मतले सकेनन् । फेरी कोही पुरुषार्थी ब्राह्मण खोजी यो नाच प्रकट गराया । यी राजाका पालामा शंकराचार्य स्वामीको पुनरागमन भै आफूले चलाई गयाको धर्म चले नचलेको हेरी शंकर स्वामी फर्की गया । हरिसिद्धिको नाच निज स्वामी आउंदा उठायाको हो । यी स्वामी आउँदा जन्मेका राजपुत्रकन शंकरदेव नामले प्रख्यात गराया ।

## गुणदेव

अस्य पुत्र शंकरदेव वर्ष १३ । अस्य पुत्र वर्धमान देव वर्ष १३ । अस्य पुत्र जय देव वर्ष १५ । अस्य पुत्र बालार्जुन देव वर्ष १७ । अस्य पुत्र विक्रम देव वर्ष १२ । अस्य पुत्र गुण देव वर्ष ५१ । यी राजाले महालक्ष्मीको व्रत गरी सेवा गर्दा राजाकन स्वप्नामा आज्ञा भयो-हे राजन् ! परापूर्वमा नेमुनिले नेमुनेश्वर नाम नै गरी महादेव स्थापना गरी गयाका स्थान वागमती र विष्णुमतीको संगमको वानेश्वर बस्याका छन् । त्यही स्थानमा इन्द्रादि देवता नित्य आई लोकेश्वर भेटी अनेक पुराण सुनी जान्छन् । त्यो बडो उत्तम स्थान हो । त्यसै स्थानमा कान्तिपुर नाम गरी देवीका खड्गाकारले पुरी बनाऊ दशहरामा नित्य लाख रूपैयांको कारवार हुनेछ । यति भयासम्म म पनि त्यही शहरमा बसुंला । सो आज्ञा शिरोपर गरी राजाले प्रसन्न भै शुभ साइत पारी अठार हजारका शहर बसाया । सो बखत कलिगत वर्ष ३८२५ थियो ।

फेरि यस शहरका रक्षानिमित्त करवीर आदि मसान यथाक्रम गरी बसाया । त्यही क्रमले त्यसका पश्चिमपट्टि विष्णुमतीका तीरमा कंकेश्वरी नाम गरी नवदुर्गा गण बसाया । यस देश दक्षिणका मुलुक क्षेत्रपाल पचली भैरवकन जगाया । देशका उत्तरपट्टि इन्द्राणी देश रक्षाकारी गरी लुमडी पीठ र मनमैजु पीठ बसाया । फेरि मखन टोलकी ब्राह्मणपुत्री आकासचारिणी तारा योनिमा मिल्न गएकी वीजेश्वरीकन जगाई बसाया । फेरि लोकेश्वरको रथयात्रा गरी चलाई फेरि शहरका उत्तर भाग टोल गरी ठवहिल ग्राम बसाया ।

फेरि यी राजाले धेरै सिपाही संग्रह गरी गै चारै दिशा लडाई गरी जिती धेरै धन ल्याई पशुपतिनाथकन सुवर्णका धारा युग्म बनाई सुवर्णमिश्रित जलले एक पक्षसम्म अभिषेक गरी स्नान गराया । श्री पशुपतिनाथको अघिको छाना बिग्रेकोले धेरै सुन राखी तीन छप्पर तीन तलामात्र छाना बनाइदिया । फेरि नेपालमा अघि नभयाको ताम्रमिश्रित गरी सिंह छाप गरी सुकिला चक्की बनाई चलन गऱ्या ।

अस्य पुत्र मानदेव वर्ष १० । अस्य पुत्र नरसिंहदेव वर्ष २२ । अस्य पुत्र नन्ददेव वर्ष २१ । यी राजाले देवपाटनका सुनन्दाचार्य नाउं गऱ्याका आचार्यसित मत गरी भुवनेश्वरी देवीका अघि भयाका वाह्याभ्यंतर गरी आगम निगम गरी ३ पत्रको ठाउं गरी अघिका तीनहरूलेमात्र प्रवेश कर्म चलाया ।

## आनन्द मल्ल र बनेपा

अस्य पुत्र शुद्धदेव वर्ष १९ । अस्य पुत्र मित्रदेव वर्ष २१ । अस्य पुत्र अरिदेव वर्ष २२ । यी राजाले मल्ल खेल सिकिरहंदा पुत्र जन्म्यो र मल्ल पदवी राखिदिया । अस्य पुत्र

अभय मल्ल वर्ष १९ । अस्य पुत्र जयदेव वर्ष १३ । अस्य पुत्र आनन्द मल्ल वर्ष ३५ । यिनका पुर्खाहरूले दुबै शहरको मात्र भोग गर्थ्या । यी कान्छा राजा आनन्द मल्ल बडा पुरुषार्थी हुनाले आफ्ना दाज्यैकन दुबै शहरको भोग गराई आफू पूर्व भागमा गै काशीबाट अन्नपूर्णा देवीकन आवाहन गरी ठूलो शक्ति  गरी सुसाइत पारी अघि साना गाउंमात्र भयाको भक्तपुर नाम गरी भैरवकन मध्य पारी बाह्र हजारको शहर बसाया । फेरि यी राजाले दाज्यूका बराबरी गरुला भनी शहरका पूर्व भागमा पर्वतभित्र गयी श्री चंद्रेश्वरीका आज्ञा पाई वनपुर आदि गरी देशहरू ७ प्रकार गरी ठाउं ठाउं वसाया । फेरि चंद्रेश्वरीका पीठ बनेपा नाम गरी बसाया १ । कोही ग्राम सहस्र प्रसिद्ध नेपालका प्रयागतीर्थ इन्द्रेश्वरका संधि गरी पनौती नाम २ । कोही ग्राम नाला भगवती ३ । कोही नारायणसंधि सुलखेल ( घुलखेल) ४ । कोही ग्राम धनेश्वर नाम खड्पु ५ । कोही ग्राम ऋषिका आश्रमसंधि चौकोटू ६ । कोही ग्राम नासिकका पीठ संधि सागर ७ । यति ७ प्रकारको गाउं बसाया र फेरि भक्तपुर आई सबै लक्षणक्रमले दरवार बनाई रहंदा नवदुर्गा देवीहरूले सफेद क्रमले राजाकन देखाया र राजाले थिर क्रमले गरी देशका वाह्यांतरले देवीहरूकन बसाया । फेरि वासुकीमा पनि, श्री पशुपतिमा पनि अघिका तामापात्र छानामा सुवर्ण खचित गरी छाना बनाई चढाया । बांकी रहेको धन अचल पर्वत कोठा बनाई बावन करोड संख्याले कोठामा राखी वासुकीकन भंडारे गरी सौंपिदिया ।

यी राजाले दुबै शहर भोग गरी रहंदा एक दिन स्वप्नामा स्वामी स्कंदकुमार आई आज्ञा गरे-हे राजन् ! तिमीले नेपालका राज्य थिर गर्ना निमित्त कुमारहरू जम्मा गरी कंकेश्वरी कालीका स्थानमा जाई १ पक्षसम्म ढुंगा प्रहारले खेलाई राख्नु र म अत्यन्त खुश रहनेछु । प्रजाहरूको पनि परचक्र शत्रु भय नाश होला । यो खेल मकन बाबाले जेष्ठ मासमा आरम्भ गरी खिटीसम्म खेल्न सिकायाको हो । राजाले स्वप्नाको विचार गरी ईश्वरको आज्ञामुताबिक बालकहरु जम्मा गरी प्रतिवर्ष ढुंगा प्रहार कर्म चलाया ।

नेपाल सम्वत्

यी आनन्द मल्लको भोग वर्ष ३५ । यी राजाका पालामा भक्तपुरवासी कोही १ सिद्धले सुवर्ण कर्षणको वेला देखाया । राजाले सबै अर्थ बुझी प्रजाहरूकन गुप्त गरी अर्थलाइ पठाया । भरियाहरू आई आज्ञाबमोजिम गरी भद्रमती र विष्णुमतीको सङ्गम लखु तीर्थ गै राजाका हुकुमबमोजिम धेरै जनाले बालुवाको भारी बोकी ल्यायाको वेलामा कांतिपुरवासी कोही एक साख्वाल नाम गरेको शूद्र जातिले देखी ल्यायाको कारण थाहा भयाकोले भरियाहरू सबलाई फकाई बुझाई लालचवश गराई बालुवाको भारी सबै आफ्ना

घर लग्यो । भरियाहरूले फेरि बालुवा सट्टा बोकी भक्तपुर लगे । सो बालुवा सुवर्ण कर्षणको मुहूर्त टरी ल्यायाकोले सुवर्ण भएन । साख्वालको घर पुग्याको बालुवा मुहूर्तका प्रभावले चौथो दिनमा हेर्दा सबै सुवर्ण भयाको देखियो । यस सुवर्णले साख्वालले नेपाल भरको सम्वत् चलाई दियाको नेपाली सम्वत् हो । आफु पशुपतिका दक्षिण दरवाजामा शिलाको मूर्ति बनाई प्रादुर्भाव गरी उद्धार भै गया ।

## जयकामदेव

अस्य पुत्र भोज देव वर्ष ८ । अस्य पुत्र लक्ष्मीकाम देव वर्ष २२ । अस्य पुत्र जयकाम देव वर्ष २० । यी राजाले आफ्ना बाजेका धन धर्मकार्य निमित्त अनेक नागादि-भय-निवारण वासुकी जगाई  साफ मर्यादा गराई तत्वमसि तत्तम् भनाई बाजा बजाई शब्द बोलाई चढाया । यस दिनदेखि पुरीमा चौरादि भय नाश भयो । यी राजाको अर्थ बहुत गुप्त थियो । यी राजाहरू वैश्य कुलमा उत्पन्न भए तापनि बडा पुरुषार्थी हुन् । यी राजाको सन्तान भएन र नुवाकोट पर्वतवासी वैश्यहरु ल्याई नेपाल पुरीमा राज तुल्याया ।

## भाष्कर वर्मा

नुवाकोटबाट आयाका वैश्य राजाको नाम भाष्कर वर्मा वर्ष १३ । अस्य पुत्र नागार्जुन वर्मा वर्ष ३१ । अस्य पुत्र पद्मदेव वर्ष ११ । अस्य पुत्र शंकरदेव वर्ष ११ । यी राजाले दुबै शहरका गुरु पुरोहितको आज्ञा ली कुल देवता स्थापना गराया । फेरि पाटनमा अग्निहोत्र, कान्तिपुरमा कुल देवता स्थापना गराई घर बनाउदा समेत देवताहरूको गजूर नघाई घर नबनाउनू भन्ने किताब गरिदिया ।

फेरि यिनैका पालामा अघि विशालनगरका मध्य स्थानमा शंकराचार्य स्वामीले मार्‍याका रीसले बांडाहरू १००० मिली ७०० ब्राह्मणहरू मार्‍या र ती ब्राह्मणहरूका ७०० ब्राह्मणीहरू सती जाँदा शाप गरी गया । हजारौं ब्राह्मणी नष्ट हुंदा पनि शाप साम्य नहुंदा सतीहरू जागी त्यो मार्गमा कोही जान सकेन । तसर्थ ठूलाठूला पण्डितहरू ल्याई नंदीवाहन स्थापना गरेको हुनाले  यी महादेवको नाउं ज्ञानेश्वर नंदी भयाको हो । नंदी नाम ब्राह्मण भाटभट्‍यानी भैगयाकाले नंदिकेश्वर भयाका हो ।

फेरि यी राजाले सुखशान्ति निमित्त नवसागर भगवतीकन प्रेतचतुर्दशीका दिनमा विधिक्रम प्रति वर्ष रथयात्रा गराया । यी भगवतीको अघिको मूर्ति उपर भएकोले खाडलमा गाडी ढुंगाले छोपी राख्या । यी भगवती विश्वकर्माका अवतारले बनायाको हो । यस दिनदेखि सात मूर्ति स्थापित भो ।

७०० ब्राह्मण मार्‍यापछि बाँकी रहेका ब्राह्मण सबै देवपाटनमा गई कंकेश्वरी संधिका नौ चोक भयाको घर बनाई बसाया । ७०० ब्राह्मण मार्‍याको हुनाले पापी गाउँ छोडी जाऊँ भनी अझतक नाउँ चलेको छ । यस गाँउँमा ब्राह्मण ऋषिहरूका श्रापले भात पकायाको अद्यापि उडेको देखिंदैछ ।

## यामदेव

यति बैश्यहरू राजा भैरहँदा समयमा कोही अघिका नेपाली राजाका संतान शुद्ध क्षत्रिय जातले दुबै शहर ललितपुर कान्तिपुरका मुख्य मुख्य मानिल भेटी सबैलाई राजी गरी वैश्यहरू सबै धपाई दुबै शहरको राज्य गर्‍या । यी राजाको नाउँ यामदेव वर्ष ३ ।यिनका समयमा वैश्य सबै भागी नुवाकोटमा बस्न गया । अस्य पुत्र हर्षदेव वर्ष १५ । अस्य पुत्र सदाशिव वर्ष २१ । यी राजाले दुबै शहरका नजीक गरी पर्वत काष्ट गरी त्रिकोण पारी ठूलो १ देश बसाया । देशको नाउँ रख्न विचार गर्दा अघिका युगमा यसै स्थानमा बसी ग्वालका गाई गै श्री पशुपतिमा नित्य दूध चढाई श्री पशुपतिनाथ प्रकाश गर्‍याको स्थान हुनाले ठूलो कीर्ति स्थान भनी ठहराई कीर्तिपुर नाउँ गरी बसाया । केही दिनपछि वहाँका देशवासी गोठालाहरू वनमा गाई चराउन जांदा केटाकेटीहरू खेल्दामा भेडाकांडाको एक बाघको मूर्ति बनाई जिभ्रो हाल्नलाई पात खोज्न गै आउंदा त्यो बनायाको बाघ जागी संपूर्णलाई खाई भैरवको प्रादुर्भाव भएकोले बाघभैरव प्रकाश भै गया । गोठालाहरू पनि त्यहीं सिद्ध भै गयाका अझ तक छँदै छन् । (भाग ४ बाट)

## नान्यदेव र नेवार

यहांदेखि नेपाली सम्वत् २१८ शाके संवत् १०१९ दक्षिण कर्णाटक देशदेखि नान्यदेव राजाले नेपालका दक्षिण मध्येस सिमरौनगढमा प्रवेश गर्दा भया ।

नन्देन्दुशून्यशशिसम्मितशाकवर्षे ।
तद्धापणस्य धवले मुनी तर्क्षा हस्ताद् ।
स्वात्यां शनैश्चरदिने रिपुमर्दलग्ने ।
श्रीनान्यदेवनृपतिर्विदधात्तु राज्यं ।

श्री राजाले शाके संवत् ल्याई चलाया । यी राजासित आएका आएका नायाब भन्याका नायर देशवासी नेवारहरू ब्राह्मणपुत्र क्षत्रिय जातदेखि उत्पन्न भयाका आचार्यहरू अनेक जातसंग गरी बीमाजु देवता स्वइष्ट देवतासहित गरी आफू नेपालका राजासित लडी जिती राजाहरू भगाई भक्तपुरमा बसी नित्य हजारका राज्य गर्दा भया । मल्ल राजाहरू यिनका पालामा भागेका उत्तर बस्न गया । यी मान्यदेव राजाको भोग वर्ष ५० ।

अस्य पुत्र गंग देव वर्ष ४१ । अस्य पुत्र नरसिंह देव वर्ष ३१ । अस्य पुत्र वमनदेव वर्ष ३९ । अस्य पुत्र रामसिंह देव वर्ष ५८ । यी राजाका पालामा पाल्पाका राजा महावीर पुरुषार्थी मुकुन्द सेन आई सवा कोटि लश्करसाथ नेपाल जिती प्रवेश गरी शहर शहरमा ठलमल भए । यिनका लश्करले खेतको मूला काटी खाडल खनी राखी धान काटी कुनियो लाई ठाउं ठाउंमा देवताहरू सबै डाकी भैरव भगवती आवाहन गरे । यहांपछि मछेन्द्रनाथका रथअगाडि राख्ने भैरव उखेली आफ्ना स्वदेश पाल्पा (बटोली) मा दिपठाया । सो अद्यापि छँदैछ । यी राजा ललितपत्तन पुग्दाका दिनमा मछेन्द्रनाथजात्रा लगनखेल डबली पुगी स्नान कर्म गराउंदा राजाको लश्कर आयाको देखी मछेन्द्रनाथ छाडी भागी गया । सो बखत मच्छेन्द्रका सुनको चंदुवामा झुन्ड्याइराखेका नाग ५ का मुखबाट आयाको पानीका धाराले मच्छेन्द्रनाथका स्नान मै रहेको राजा मुकुंद सेनले देखेर यी बहुतै प्रत्यक्ष देवता रहेछन् भनी आफुले चढेका घोडाका गलाको सुनको सिक्री झिकी डबलीमा रहेका मच्छेन्द्रतर्फ फाली चढाउंदा आफुले गलामा थापी लिनुभयाको सिक्री अद्यापि छँदैछ । यी खस मगरहरू साह्रै दयाशून्य हुंदा नेपालमा अकीर्ति गरेकोले श्री पशुपतिनाथ आदि सबै देवता कोप भै श्री पशुपतिनाथका मुहारमा दाह समेत निस्की आयाको सबै राजा प्रजाहरूले देख्या । त्यसपछि नेपालमा महामारी प्रवेश भै १ पक्षका भित्र राजा मुकुंद सेनका लश्कर सबै साफ पारी यमलोक पठाइदिया । राजा एकलै फकीरको भेष गरी पूर्व दिशा गै त्यहींबाट आफ्ना स्वदेशमा गया । यी राजा मुकुंद सेनका प्रवेशदेखि नेपालमा खस मगर प्रवेश भयाका हुन् । (खाडल खनी राखेको मुलाको सिन्की र कुनियो धान हकुवा बनी गयाकोले सो चलन अद्यापि चलेकैछ) ।

कर्णाटक राजाले पांच पुस्ता राज्य गरेपछि मुकुंद सेन आई साफ गरेकोले नेपालमा राजा शून्य भएको सुनी नुवाकोटवासी वैश्य ठकुरीहरू धेरै आई सबै शहरको भोग गर्‍या ।

ललितपुरमा वैश्यहरू २४ टोल टोलमा राजा भया । यिनै वर्ष वारह टोलमा एक एक राजा भया । यही वर्ष श्री भीमसेनले कान्तिपुरमा बस्न इरादा गरी दोलखादेखि आई क्वाठ बाहालमा वैश्य ठकुरीका घरमा मनुष्यरूपले चकटी गरी बसिरहंदा भया । केही कालमा कारणवश फर्पिङका ठकुरीका घरमा काम पठाउंदा फर्पिङमा लखेट्ता भीमसेन भन्ने ठहराई पसल छेका लाई सत्य कबुलाई लुंपी टोलमा टोका मूर्ति बनाई चित्रकारले भरी देवालय बनाई स्थापना गरीदिया । केही कालपछि क्वाठ बहालमा ठकुरीले पनि केही प्रत्यक्ष पाई भीमसेन देवालयमा ठूला चित्रकारी गरी मूर्ति बनाई विराजमान गराया ।

फेरि यही वर्षमा नेपालदेखि १५ कोस पश्चिम मजीपात शहरका राक्षस आई कांतिपुर दक्षिणपट्टिको छिपानीसित क्रीडा गरी जान्छ भन्ने १२ ठकुरीहरूले सुनी अनेक युक्तिपूर्वक राक्षस बुझाई आफ्ना राजरक्षा निमित्त मजीपाट टोल नाम गरी घर बनाई प्रतिवर्ष इन्द्रयात्रामा ठूलो यात्रा गरी बसायाको अझतक छँदैछ ।

ललितपुरमा मंगलका १ ठकुरी लवट स्त्री जाति घरका खोपामा भीमसेन भनी पुजी राखेको मूर्ति जागी कोपेश्वर महादेवका दक्षिण मेरु शिलामा बलि फाल्न ल्यायाको बलि खाई कहतारा त्यहीं खोपामा अगाडि छाडी राखेछ र भीमसेन जागे भनी बलि चोरी माथि ल्याउदा बौस्वंचघा नाम राखी माटाको ठूलो मुर्ति चित्रकार गरी विराजमान गराया । खोपामा जागेका हुनाले सो खोपा मास्न नसकी अद्यापि छँदैछ ।

यही वर्षमा चावाहालको गणेश मूर्ति सुवर्णको बनाई यात्रा चलाई आफु ज्यापुनीपट्टिका छोरालाई काहसो नाम राखी सो मूर्तीको सुसारे गरिदिया । चिरुआदारतिरका छोरालाई दुर्गा जनाई दशैंमा ठूलो विधानपूर्वक खड्गयात्रा गरिदिया ।

यिनी ठकुरीहरु राजा भैरहंदा भक्कु भन्या जात धेरै नेपालमा आई मानिस समाती मारी खप्पर हातमा लिई जान्छ भन्ने ठकुरी राजो सुनी प्रजाहरूका रक्षा निमित्त भक्कु मार्नुपऱ्यो भनी थछे महालक्ष्मी जगाई सब भक्कु नाश गऱ्या । यस पापक्षय निमित्त सबै ठकुरीका दरसंतान प्रतिवर्षका कार्तिक मैनाभर निराभिष व्रत गर्न चलायाको अद्यापि छँदैछ ।

यी वैश्य ठकुरीहरूको भोग जम्मा वर्ष २२५ (धेरै राजा हुनाले लेखिएन । यिनीहरू सबै लुच्चा हुन्) ।

त्यहांपछि सूर्यवंशी राजा श्री रामचन्द्रका वंशमा उत्पन्न भएका रामसिंह देवका छोरा हरिसिंह देव नाम केही कारणले अयोध्या छाडी सिमरौनगढी आई ठूलो मेहनत गरी कोही लंकाका राक्षसले यथाक्रम गरी बनायाका गढ्मा बसेका थिए । तुलजा देवीका आज्ञामुताबिक ती राजा हरिसिंह देव नेपालपुरीमा प्रवेश भए ।

अथ सूर्यवंशी राजाका वंशावली क्रमः- आदौ शून्य १, जल २, नारायण ३, ब्रह्मा ४, मरीचि ५, सूर्य ६, मनु ७, इक्ष्वाकु ८, शशाद ९, ककुस्थ १०, अनेना ११, पृथु १२, विश्वरंध्री १३, चन्द्र १४, युवनाश्व १५, कुवेराश्व १६, च्यवन १७, देव १८, विजया १९, उल्लूक २०, चक २१, वाहुक २२, पांचजन्ने २३, अंशुमान् २४, दिलीप २५, भगीरथ २६, ऋतु २७, नाभाग २८, अंवरीष २९, सिंधुद्वीप ३०, अयुतजित् ३१, शुतर्ण्ण ३२, सुदास ३३, कलभाष ३४, नारीकवच ३५, दशरथ ३६, वज्रनाभ ३७, अलर्क ३८, खगनाश्व ३९, विधृत ४०, हिरण्य

४१, पुष्प ४२, ध्रुववंशी ४३, अग्निवर्ण ४४, महाश्वन ४५, मरुत् ४६, प्रशक्त ४७, शंतनु ४८, अमर्षण ४९, महाश्वन ५०, विश्ववृहज्जल ५१, अमृतजित् ५२, वृहत्भानु ५३, वाहा ५४, ऋतुंजय ५५, वल्लभ ५६, साक ५७, शुद्धोदन ५८, लाङ्गूल ५९, प्रसेनजिन् ६०, हुण्ड्रक ६१, सुमित्र ६२, जित् ६३, नृसिंह ६४, नान्यदेव ६५, गांगदेव ६६, भयनृसिंह ६७, शक्तिसिंह ६८, ऋमाचसिंह ६९, जित् ७०, नृसिंह ७१, भद्राश्व ७२, ........७३, हर्षण ७४, दशक्रिया ७५, वसुवृद्धि ७६, प्रतीचि ७७, भानु ७८, दिवाकर ७९, वाहिनीपति ८०, सहदेव ८१, वीर ८२, बृहद्श्व ८३, निकुंभ ८४, बहुरश्व ८५, ऋमाश्व ८६, सेनजित् ८७, युवनाश्व ८८, मान्धाता ८९, पुरुकुत्स ९०, संभूत ९१, अरण्य ९२, हर्यश्व ९३, त्रिज्यारुत ९४, नीलकण्ठ ९५, त्रिशंकु ९६, हरिचश्चन्द्र ९७, रोहिताश्व ९८, हरित ९९, पात्रयित्री १००, वासोशंका १०१, खट्वाङ्ग १०२, दीर्घबाहु १०३, रघु १०४, अज १०५, दशरथ १०६, रामचन्द्र १०७, कुश १०८, अतिथि १०९, निषाद ११०, नल १११, नभ ११२, पुंडरीक ११३, क्षेमधन्वा ११४, दमनक ११५, अहित ११६, साधना ११७, पारिपत्र ११८, बल ११९, थल १२०, वहद्श्व १२१, भानुमान् १२२, प्रतीकाश्व १२३, सुप्रीति १२४, मरुत्देव १२५, सुरक्षत्रे १२६, पुष्कर १२७, अपरीक्ष १२८, सुतपा १२९, रामसिंह १३०, हरसिंह देव १३१

वाणाब्धियुग्मशशि (१२४५) संम्मित शाकवर्षे
पौषस्य शुक्लनवमी रविसूनुवारे ।
त्वक्त्वा स्वपत्तनपुरीं हरिसिंहदेवो
दुर्दैवदेवविपरीतगिरिं प्रविष्टः ।

नेपाली सम्वत् ४४४ शाके संम्वत् १२४५ । विक्रम सम्वत् १३८०, पौष शुल्क नवमी शनिश्चरवारका दिन प्रारंभ गरी हरिसिंह देव राजाले श्री तुलजा भवानी देवीसहित गरी आई भक्तपुरमा बस्नुभयो । यिनै राजासंग कनौजिया ब्राह्मणहरू छ थर १ आचार्य, २ खड्गी ( कसाई), ३ रजक (धोबी पानी चल्ने), ४ वैद्य, ५ नेवार, ६ तेली यी जातसंग हुनाले र तुलजा देवीका कृपाले भक्तपुरवासी वैश्य ठकुरीले आफ्नु गादी सौंपिदिया ।

फेरि तुलजा भवानीकन दर्वारभित्रै देवालय बनाई राखिदिया । तुलजा भवानी राजाले ल्यायाको थाहा पाई देवी हेर्न भोटेहरू आउंदा दर्शन पाएनन् र धूमधाम गरी तिनीहरूले बसाई गयाको थुम्का अद्यापि छदैछ । रजक जाति राजासित आई संकट कालमा कपडा धोइदिने रजक नाम बनियां जाति हुन् । ती रजक जाति राजाज्ञाले कोही भक्तपुरमा कोही देवपाटनमा आई बसे । यी राजाका वैद्यमा १ वैद्य कर्कोटक नागले लगी

नागिनीका नेत्र रोगको इलाज गराउंदा निको भै गुणीजन् रहेछन् भनी नाग खुशी भै शेषनारायणसंधि बसाया ।

यी राजा सिमरौनगढदेखि आउंदा बाटोमा खानेकुरा केही नमिली तुलजा भवानीछेउ विनती गर्दा बाटोमा भयाको वनजन्तु पक्षी मलाई धोग बलिक्रम गरी खानू भन्ने देवीको आज्ञा पाए । वनविषे आउंदा १ ठूलो वनभैंसी भेट भयो र बांधी ल्याई खड्गप्रहार गर्ने मानिस नहुंदा सूर्योदयका समय पूर्व दिशा गुदद्वार गरी झाडा फिर्ने खड्गी जाति रहेछन् र यी खड्गी (कसाई) का हातले महिषकन भोग दी रक्तधारा पारी सबैले महिषमांस भक्षण गर्‍याका हुन् । त्यहांदेखि यिनै रीत गरी महिषमांस चलाया । नागदेशको देशवासी नेवार जातिमा यो प्रथा अझ तक चलेकै छ । यी नेपालवासी नेवार जातिका जनलाई कोही १ सिद्ध आउंदा महिष मांस खानेलाई जनै हुंदैन भनी झिकी फालिदिया । केही दिनपछि द्विभाजुबाट यी राजा हरिसिंह देवलाई नान्यदेव राजादेखिको गण सौंपिदिइन् र राजा खुशी भै द्विभाजुकन इष्टदेवता भनी प्रतिवर्ष देवाली पूजा गरी मेष संक्रान्तिका दिन ठूलो यात्रा गरी देश घुमाउने प्रथा चलाया । यी हरिसिंह देव राजाका भोग वर्ष २८ ।

अस्य पुत्र मति सिंह देव वर्ष १५ । अस्य पुत्र शक्तिसिंह देव वर्ष २७ । अस्य पुत्र श्यामसिंह देव वर्ष । यी राजाका पालामा नेपालभर बडो उग्र दिन आयो । नेपाली संवत् ५२८ अधिक भाद्रपद शुक्ल १२ उत्तरषाढा नक्षत्र सौंबारका दिन बडो उत्पातसंयुक्त भूमिकंप आई मच्छिन्द्रनाद बन्द भै दिशा दिशामा भत्की सबै साफ मैदान भयो । जीवातु जंतु असंख्य नाश भए ।

यी श्यासिंह राजाका पुत्र भएनन् र अघि नान्यदेव राजाले भगाई राखेको मल्ल राजाका संतान जयभद्र नाम क्षत्रियकन तिरहुतबाट ल्याई आफ्नु एकमात्र पुत्री कन्यादान दी राजा बनाई आफू शान्त भया ।

जयभद्र मल्ल वर्ष १५ । यी अघिदेखिका राजाले भक्तपुरको राज्यपद पाया भनी नवदुर्गा गण खुशी भै देशका आग्नेय भागमा ठूलो रास गरी अन्न राखेको थुम्को अद्यापि छँदैछ । अन्नका रास हुनाले भक्तपुरमा बहुत अन्न स्थित भयाको हो ।

अस्य पुत्र नाग मल्ल वर्ष १५ । अस्य पुत्र जयमल्ल वर्ष १५ । अस्य पुत्र नागेन्द्र मल्ल वर्ष १० । अस्य पुत्र उग्र मल्ल वर्ष ११ । अस्य पुत्र पुत्र मणि मल्ल वर्ष १३ । अस्य पुत्र अशोक मल्ल वर्ष २१ । यी राजाले ललितपुरका रक्त बालकुमारीको सेवा गरी देवी प्रसन्न गराई ललितपुरका वैश्य ठकुरीहरू जिती ललितपुर भोग गर्‍या । 'नेपाल' मा धेरै बाहाल यिनै ललितपुरका वैश्य ठकुरी राजाहरूले बनायाका हुन् । देवपाटनमा पनि वैश्य

रनजाकी २ रानीले २ बाहाल बनाई ललितपुर च्यासल टोल चलाई धेरै गुठी राखिदिया । फेरि अशोक मल्ल राजाले कुमारी देवी ठूली हुन् भनी सेवा गरी रहंदा समयमा कुमारी नजिक बगी रह्याका बागमती मनमतीका संगम धाराले जगा फराक गरी छाडी उत्तरपट्टि बग्न गयाको अद्यापि छंदैछ । यी राजादेखि बागमती बालकुमारी खुशी भै शुभ लक्षण भयाका पुत्र जन्माइदियिन् । यी राजा अशोक मल्लका नेवारनीतर्फका छोराहरूले ज्योतिषी पण्डितहरूकन धेरै ३ूस खुवाई साइत छैन भनी टारिराख्दा अशोक मल्ल राजा शान्त भै गया र रानी सती गयिन् । नेवारनीका छोराहरूले राजपुत्रकन धपाई काजीहरू सबै वश्य गरी राजधानी चलाई राज चौतरिया भै रहंदा दाजुले मुलाढल कुलो भाईले एक पोखरी वनाया । पछि मध्यमा देवालय बनाउनलाई प्रजाकन झारा उठाई काठ लिन पठायाका थिए सो काठ बोक्न पठायाका प्रजाहरु बडो हांस ख्याल गरी आउंदा कमारो काम गरी आउनेहरूको बडो हांसी खेल भनी बूढा बूढाहरूले भनेके सुनी प्रजाहरूले राजा कसका कमारा भनी बूढाहरूसंग सुध्याउंदा बुढाहरूले अर्थ बुझाइदिया । सो सुनी बूढाहरूका साथ सबै प्रजा मिली बनबाट स्याउला ली धपायाका राजपुत्रकन खोज्न जांदा खान नपाई वनैपुरका पसलमा चिउरा मागिरहेका राजपुत्र हुन् भनी बूढाहरूले ठहराई प्रजाहरूले बोकी भक्तपुरका दर्बारमा लगी नेवार्नीहरूका दुवै छोराहरू स्याउलाले थिची मारी असली राजपुत्रकन गादीमा राख्या ।

यी राजालाई प्रजाले गादीमा राख्दा वर्ष ९ का उमेर थिया । यी राजाले प्रजाहरू सबै मिली बाबाका गादीमा राखिदिएको भन्नाले सबै प्रजालाई अनेक थिती बांधिदिएकाले राजाको नामै जयस्थिति मल्ल भन्ने नाम चल्यो । यिनले ४३ वर्षसम्म प्रजा शांति गरी राज्य गरे । यी राजाले आफ्नू सुना घर, सुना खेत भनी किन्न बेच्न हुन्या गरी चलाइदिया । ४ वर्षका भित्र ३६ जातको निर्णय गरी जात वातका कर्म गरी चलाइदिया । फेरि अघि अघिका राजाका पालामा हस्त प्रहार, छीक्वान्न २ मात्र डण्ड थियो । अबका पापका समयमा यस डण्डले साधु जन, प्रजा जनको रक्षा हुन्या छैन भनी रुपैया लिन्या डण्डको मर्यादा गरी चलाया । फेरी राजाहरू मर्न्या वेलामा ३६ जात जम्मा गराई पलंग बनाई मुर्दा राखी लैजांदा दीपक रागले बाजा बजाई ३६ जातको ऊंचोनीचो कसैले ठहऱ्याउनुहुन्या गरी मसानमा लगी जलाउने प्रथा चलाया । सो पलंग भन्याको मीआनाको नक्साको बन्दछ । म प्रजाहरूका मरण समयमा कहार कसाई बाजा बजाई मुर्दा लैजाने र आफ्ना जातविशेषका मसान बनाई जल्यायन्या रीत चलाया । फेरि जातले पायाको कार्य नगरी अरू जातको कार्य गर्न्यालाई डण्ड गर्ने प्रथा चलाया । फेरि आफू

उद्धार निमित्त आर्यातीर्थका पानी एक शिला ३ मूर्ति लव, कुश, रामचन्द्रको मूर्ति प्रतिष्ठा इन्द्रदेवहरूका लिंगकन इष्ट देवता गरी सदार्चन गरिदिया । सिद्ध योगी भेटी मृगस्थली मध्यका गोरक्षनाथ जगाई पाउका मूर्ति बनाई राखी सबैले धन्य धन्य भनाया । गोकर्णेश्वरमा सनत्यार्चन सामग्री र अघिको जीर्णोद्धार गरिदिया । ललितपुरका बुंभेश्वरको अघिका देवालय दुइ तला छाना गरी गजुर चढाइदिया । फेरि कुंभेश्वरका देवालय बनाउनलाई तलाउ सोहर्दा यस तलाउमा शिलाका नारायणका मूर्ति १ गणेशका मूर्ति २, शिलाका मूर्ति ३, वासुकी ४, गौरी ५, वसाहा ६, कीर्तिमुख ७, आगम देवता ८ यी आठ मूर्ति तलाउभित्र पाइंदा स्थान स्थानमा स्थापित गरिदिया । शीतला शान्तिनिमित्त उन्मत्त भैरवका ठूलो मूर्ति प्रतिष्ठा गरी जगाई स्थापना गरी उन्मत्त भैरव शान्तिनिमित्त यिनका माथि आगमका मूर्ति स्थापना गरिदिया । नेपाली संवत् ५१५ मा यिनको बिस्तार सबै भैरवका शिलामा लेख्याको छ । यी जयस्थिति मल्ल राजाले नेपालमा धेरै स्थिति राखी अनेक धर्मपूर्वक ४३ वर्ष राज्य गरी शान्त भै गया ।

अस्य पुत्र यक्ष मल्ल वर्ष २० । यी राजा गादीमा बस्दा नेपाली सम्बत् ५४९ थियो । यी राजाले शंकराचार्य स्वामीदेखि दीक्षित भई ब्राह्मणहरूकन सुसारे पशुपतिनाथका भण्डारे देवपाटनका नेवार १ राखिदिया ।

अस्य पुत्र ३ जेठा राय मल्ल वनेपुरमा बसी ७ गाउंका राजा हुनगया । यिनको भोग वर्ष २१ । यी राजाका पालामा बनेपुरका नेवार तेली १ कोही मीरसिंह नाम गऱ्याकालाई कुमारी कुंडका देवीले सुवर्ण महिषका सिर १ दियिन् र श्री पशुपतिनाथका अघि नभयाका चांदीका कवच बनाई अनेक हीरा आदि रत्न जडी शंख, १ मुखी रूद्राक्षसहित गरी कंचनयुक्त कवच चढाइदिया । नेपाली सम्बत् ६२२ । तेलीले कान्तिपुरमा कवच चढाउंदा तेलका साल १ चढायाको कीर्तिपुरमा अझतक छंदैछ । यी मल्ल राजाका सन्तान नहुंदा वनेपुरका राजधानी यहांप्राप्त छुटिगयो ।

माहिला रत्न मल्लले दाज्यूसित विरोध गरी कान्तिपुरमा राजा हुन गया । परापूर्वकमा रामचन्द्र पातालमा गै महिरावण मारी तुलजा भवानी अयोध्या ल्यायाकोले भवानी खुशी भै तुलजा भवानी जगाउन्या मंत्र दान गरी आज्ञा भयो कि हे राम ! यो मंत्र राज्याभिषेक हुन्यामात्र अभिषेक समयमा दिनू, अरूलाई नदिनू, पुस्तकमा पनि नलेख्नू भन्ने भवानीको वचन भै यिनीहरूका कुलमा त्यही रीत चलायाका थिए । पछि यक्ष मल्ल आफ्नु बुद्धावस्थादेखि पुत्रकन टीका दिनानिमित्त साइत दुखाउंदा मन्त्री, गरु, पुरोहित सबै मतो गरी राय मल्ल राजपुत्र बहुतै उग्र छ, यो राजा भया हामीलाई सुख कदाचित् हुने छैन

भन्ने विचार गरी यो वर्षभित्र साइत छैन भनी ढांटी राजामा विनती चढाया । पछि नेपाली सम्बत् ५९८ मा राजा यक्ष मल्लको प्राण नाश समयमा गुरु पुरोहित सबै मिली माहिला रत्न मल्लकन मन्त्र सुनाउनलाई दिया । राजा शान्त भयापछि तुलजा देवी जगाउन्या मन्त्र पाउन्या रत्न मल्ल राजा गर्ने विचारका काजीहरूको र जेठो छंदै हामीले अरूलाई राजा गर्नु उचित होइन भन्ने काजीहरूको मतभेद भै आखिर जेष्ठ राजपुत्र राय मल्लकन गादीमा अभिषेक दिया । यहांपछि राजा रत्न मल्लले जब दाज्यूको र मेरो चित्त फरक भएको, सो दाज्यूका राज्यमा बसी परन्तुमा मेरो कल्याण छैन भन्ने विचारी भवानी तुलजा जगाई विनती गर्दा, मलाई ललितपुर लैजानू भन्ने देवीको आज्ञा पाए । सो आज्ञाबमोजिम एक रात्रिविषे कसैलाई पत्तै नदिई हरसिंह देवले सिमरौनगढदेखि ल्यायाका श्री तुलजा भवानी खड्ग ढाल समेत ली राजा रत्न मल्ल ललितपुर बस्न आया । राजा रत्न मल्लले कहिल्यै पनि तुलजा देवी खड्ग, ढाल नछाडी हमेशा आफुसंग राख्या , यस दिनदेखि भक्तपुरमा तुलजा जगाउने मन्त्र लोप भयो ।

केही कालपछि श्री हरिसिद्धिको १२ वर्षको नाच उठी अमरापुरी (बुंगमती) मा नचाउन लगेका बखत यी राजा रत्न मल्ल पनि त्यहीं नाच हेर्न जानुभएको रह्याछ र हरिसिद्धिका मूल देवताले यिनकन डबली डाकी हुकुम भयो 'हे राजन्, कान्तिपुरे त्वं गच्छ राजा भविष्यसि मा विलंवं कुरुष्वत्र । मया दत्तं न चान्यथा । यति देवीका हुकुम हुंदा राजा रत्न मल्ल त्यहींदेखि कान्तिपुर गै १२ ठकुरीका मुख्य काजीका घर पुगी देवीको आत्ता सुनाइदिया र काजीले हवस भनी राजपुत्रकन गुप्त गरी आफ्ना घरमा राख्या । केही दिनपछि जम गुठीका काजीले १२ ठकुरीको खाने वस्तुमा विष प्रयोग गरी सबलाई मारी रत्न मल्लकन राजा गऱ्या । राजा रत्न मल्ल बुंगमती जांदा ढाल चाहिं ललितपुरमा छाडी गयाकाले ढाल वहीं रह्यो, तुलजा र खड्ग साथमा हुनाले कान्तिपुर आयो । राजाले गादीमा बसी हुकुम चलाएपछि काजीले मेरा निमित्त १२ ठकुरी बराबर गरे मलाई पनि यिनका विरुद्ध भयापछि मार्नु बेर गर्ने छैनन् भन्या बिचार गरी केही दिनपछि केही कारण राखी काजीकन यमलोक पठाया ।

सर्पो व्याघ्रस्तथा राजा न विस्वासं प्रजायते ।
येषां विश्वासतो मन्ये शीघ्रं नश्यन्ति जंतवः ।
उन्मत्तानां भुजङ्गानां मद्यपानाञ्च दन्तिनाम् ।
स्त्रीणां राजकुलानां च विश्वासं नैव जायते ।

त्यहांपछि राजा रत्न मल्लले प्रजा सबै काबू गराई तांवाखानीबाट तांबा झिकाई अघि चलेका सिंहछाप बदर गरी आफ्ना टकको छापको पैसा बनाई नेपालभरमा पैसाको चलन गराया । यी राजाका पालामा भोट देशका कुकुर नाम गर्‍याको देवान भोटेजाति आई बहुत दुःख दिया र तिरहुतिया ब्राह्मण चार जना पाल्पा गै आफ्ना शिष्य सेन राजाका लश्कर ल्याई कुकुर जातिका भोटे मार्‍या । त्यसपछि नेपालका खस चार थरीकन खेत बिर्ता दी जग्गा जग्गगामा राख्या । यिनै वर्षमा यवनहरू नेपाल प्रवेश भयाका हुन् । खस चार थरी ल्याई भोट देशीय कुकुर जाति मराउने तिरोतिया ब्राह्मण चारै जना खिल्लत लिई आफ्ना देश गया । यी जातिका विषयमा कुकुस्यानाज्वल भनी अद्यापि नाम चलेको छ ।

फेरि यिनै राजाका पालामा दक्षिण देशबाट सोमेश्वरानन्द नामक एक सन्यासी स्वामी आयाकालाई श्री पशुपतिका पुजारी गराउना योग्य हुन् भनी पुजाहारी गरिदिया । अघि शंकराचार्य स्वामीले गरी गयाका दक्षिणी ब्राह्मण थिया । यिनका पालादेखि स्वामी पुजाहारी भया । यी स्वामी सुकुमार भयाकाले टहलुवाविना यिनले काम चलाउन गाह्रो होला भन्नाले बनेपुरका दुइ जना थरी ल्याई पहिलेका भंडारे टहलुआका साथ पाला साथ काम गर्नालाई राखिदिया । फेरि यिनै स्वामीकन गुरु पदवी गरी देश रक्षाका निमित्त दक्षिणकाली आवाहन गरी श्री पशुपतिनाथका नैर्ऋत्यकोण नवग्रहसंधिमा नवदुर्गा गण स्थापना गराया । फेरी ईश्वरीका आज्ञाले भंडारेहरूकन अघिका बौद्धका स्थानमा देवी देखाई प्रतिवर्ष इष्ट देवताका देवाली पूजा गर्‍या । फेरी स्वामीका आज्ञाले वीसेतहरूबाट पचलीभैरव थानका मतिली देवीको प्रतिवर्ष इष्ट देवताका देवाली पूजा गराया । ने.सम्वत् ६१० । अरू पनि धेरै कर्म गरी धेरै वर्ष सम्म श्री पशुपतिनाथका पुजाहारी मै मातृकासंधि समाधि गरी शून्य पदवीमा गया ।

यी राजा रत्न मल्लसित तुलजा जगाउन्या मन्त्र सिद्ध हुनाले नाना देवताका सन्धिमा सूक्ष्म मन्दिर बनाई तुलजा देवी स्थापना गरिदिया । यी राजाका पालामा नुवाकोटवासी वैश्य ठकुरीहरू अधीन गरी राज्य स्वाधिकार गरी चित्रकार कर्म गराया । नेपाल सम्वत् ६११ मा वैश्य ठकुरीहरूले कल गर्‍यो भनी यी राजाले धेरै सिपाही पठाई लडाईं गरी नुवाकोटवासी ठकुरीहरूकन जिती नुवाकोटका फलफूल ल्याई पशुपतिनाथमा चढाया । अरू पनि यता धेरै कर्म गरी वर्ष ५१ राज्य भोग गरी राजा रत्न मल्ल शान्त भै गया ।

अस्य पुत्र अमर मल्ल वर्ष ११ । यी राजाका पालामा वनेपुरका कुह्मालहरूले अनन्तनारायणको माटोका मूर्ति पशुपतिनाथका मन्दिरभित्र स्थापना गर्छु भनी विनती गर्दा

ठाउं दिएनन् र रात्रिका विषे आई कौनेले थाहा नपाई वत्सला देवीका उत्तरपट्टि स्थापना गरिदिया । यिनै राजाले मन्त्र शास्त्रमा प्रबल जाग्रत भयाका भुवनेश्वरी देवीका पुजाहारी मुनि आर्यसित मनन गरी मङ्गलेश्वरी, भुवनेश्वरी, जयवागेश्वरी, वत्सलेश्वरी पशुपतिनाथ खुशी गर्ना निमित्त असंभव गरी अनेक प्रकारका रथ बनाई मूशल १, श्रृंखल २, त्रिशूल ३, खड्ग ४, बलि ५, छुरी ६, पारा ७, आदिले गरी कुमार कुमारीहरू ९ जना रथमा चडाई शरीर छिन्नभिन्न गरी आषाढ कृष्ण अष्टमीका दिन ईणानेश्वर प्रदक्षिणा गरी देशमध्ये प्रतिवर्ष यात्रा गर्ने प्रथा चलाई लोकमा धन्य कहलाया । नेपाल सं.६२७ मा यी अत्यन्त गुणी मुनि आचार्य मृतसञ्जीवनी लिन जांदा लोप भै गया ।

फेरि ३ त्रिभुवनेश्वरीमा कोही आई मेरो बलिदान पूजा गरिदेऊ भन्न आयो र उनी आचार्यले आफ्नो बालक छोरा ली बलिदान दिंदा पुत्र सेरीवरी प्रजा आउनेलाई फर्काई ताला मारी आफ्ना स्वास्नीलाई नेम गरी कोठामा हेर्नु छैन भनी काशीमा अमृत लिन गै फर्की ललितपुरका बागमतीपुर पुग्या । देवपट्टनमा तिनका स्वास्नीले मेरो स्वामी छोरा कोठाभित्र पसेको निस्केनन् धेरै बेर भो भनी ताल्चा खोली हेर्दा बालक स्वामी दुवै मृतक देखी धिक्कार भनी मुर्दा उठाई मृतक बाजा बनाई स्मशान लिई गएको बाजाको शब्द सुनी सोद्धा मुनि आचार्यको शवयात्रा भनिदियाकोले मनमाफिकका भै अमृत भैंमा पोखाई ध्यानद भै आई कोठाभित्र आगमको दैलोको ताल्ला मारी आजदेखि तिम्रो बलिदान पूजा नहोस् भनी श्राप गरी त्यहींदेखि मुनि आचार्य लोप भया भन्ने भनाइ छ । अमृत थोपा खसेको ठाउं अमृतद्धा भनी आज तक भन्दै छन् ।

फर्पिङ् देखि आई ललितपुर बसेका दुर्गासंगमा आउने राजवैद्यकन ल्याई देवपाटन नवग्रहसंघि मूल स्थापना गरी यिनका कुलदेवताकन जगाई बसाया । यी राजाले हर्षपूर्वक मुनिजन खोजी गर्ने देवताहरूको पूजन-यात्रा गराई राज्य गरी बस्दा भया ।

अब भक्तपुरपट्टि

राजा राय मल्लपछि अस्य पुत्र सुवर्ण मल्ल वर्ष १५ । यी राजाका पालामा ने.सम्वत् ६३३ सालमा अनिकाल आई भक्तपुरका प्रजाहरू चारै दिशा फिंजिया । यी राजाले भाइसित विरोध गरी भक्तपुर बनेपुरका दुव शहर भोग गरी बसेमा कान्तिपुरका अनेक देवीगणको नाच भयो भन्या सुनी गुणीजनबाट नवदुर्गागणको अनेक विधान गरी राखी नाच प्रारम्भ गराइदियाको हो । यी प्पुंचाप्याखं भन्ने अझ तक छँदैछ । फेरि बोडे महालक्ष्मीको बडो नेम गरी बोडेको पनि भोग गऱ्या । यी राजाले धेरै ग्राम ठिमी, बोडे, नकदेश, सांखु, चागु आदि सम भाग क्रमले भोग गरी शान्त भया ।

अस्य पुत्र प्राण मल्ल वर्ष २१ । अस्य पुत्र विश्व मल्ल वर्ष १५ । यी राजा स्वप्नमा ईश्वरका आज्ञाबमोजिम देवपाटन आई कान्तिपुरका राजा बुझाई चार नारायणहरू आवाहन गरी श्री पशुपतिनाथका चारै दिशामा यथाक्रमले स्थापना गऱ्या । त्यसमा जलशयनका सट्टा वासुकी हुन् । यिनका पालामा श्री पशुपतिनाथमा यी चांगुका मूर्ति स्थापना भयाकै साल हिमालय पर्वत पैह्रो आई चांगुनारायण ढाकिया र इन्द्रलोक बस्ने सहस्र शिवानन्द कान्यकुज ब्राह्मण कौशिकी गोत्रले विष्णुमतीले बगाई ल्यायाका नारायणका मूर्ति ल्याई अघिका नारायण आसनमा थापना गरिदियाका यी चांगुनारायण हुनाले सहस्र शिवानन्दका दरसन्तानभर देवाली पूजा चांगुनारायणमा अझतक भयाकै छ । निजै शिवानन्दले इन्द्रचोकमा इष्ट देवता स्थापना गरी आफ्नू शिला सालिक राखी गयाको अद्यापि छँदैछ ।

अस्य पुत्र त्रैलोक्य मल्ल वर्ष १५ । यी राजाका पालामा पूर्वबाट मासको भारी ल्याउंदा त्यसमा मकै गेडा १ मिसी आयो र शास्त्रज्ञाता गुणीजनले दुर्भिक्ष गर्न्या अन्न भनी मकै पूर्वतर्फ फर्काई शान्ति निमित्त ब्राह्मणहरूले यज्ञ, पाठ, पूजा, ब्राह्मण भोजन गराई मेरासम्मत मैले यो दुर्भिक्ष अन्न नल्याउनू भन्ने हुकुम चलाया ।

फेरि यी राजाले तुलजा जगाउने विधि पुस्तादेखिनभै कान्तिपुरमा गऱ्यामा बहुत खेद गरी देवीछेउ धेरै भक्तिभाव गरी सेवा गर्दा देवीबाट स्वप्नामा आज्ञा भयो-हे राजा यस विधिले पूजा गरी थापना गराई स्त्री जातिलाई कहिल्यै पनि नदेखाई राख्न सक्छौ भन्या प्रति  दिन एक फेरा तिमीथैं म त्रिपाशा खेल्न आउन्या छु भन्ने आज्ञानुसार गुरुथौं सल्लाह गरी हीराको यन्त्र बनाई प्रतिष्ठा गराई पूजा गरी राख्यां । केही कालपछि यी राजाकी पुत्री गंगादेवीले छलकार गरी सांचो चोरी ताल्चा खोली भित्र पसी पूजा गरी ताल्चा मारी सांचो अघिका स्थानमै राखिदी छन् । पछि त्रैलोक्य मल्ल राजा सधैंका झैं गरी त्रिपाशा खेल्न तयार भै रहंदा देवी प्रकट हुनुभएन र बहुतै दुःख साथ विलाप गरी भक्तिपूर्वक विनती गर्दा आकाशवाणी भयो-हे राजन् मलाई तिम्री पुत्री गंगादेवीले छोई पूजा गरी गयिन् । अबदेखि दर्शन बोली हुन्या छैन । चण्डाल जातिका पुत्रीका अंगमा प्रवेश गरी मात्र बोल्नेछु भन्या नभवाणी सुनी पण्डितहरू बोलाई शास्त्रविचारबाट कर्मचाण्डाल जाति सुनार काम गर्न्या बांडा जाति ठहराई बांडाका छोरीहरूकन कुमारी तुल्याई पूजा गरी दुई वर्षको शुभाशुभ जान्या गरी राख्याको आजतक छँदैछ । फेरि यिनले भक्तपुरका आदिभैरवकन रथमा राखी ठूलो लिंगाकार बनाई शत्रुहन्ता कर्मले लिंग ढाली टोल टोलका गणेश, दुर्गाहरू सबै रथारोशण गरी मेष संक्रान्तिका दिन बीसक्याट नाम प्रतिवर्ष रथयात्राको प्रचार चलाया ।

फेरि यिनै राजाले आफ्ना लगायत ठिमी आदि ग्राममा पनि प्रतिवर्ष अनेक देवताहरूको यात्रा गराया । फेरि यिनैले भक्तपुरका काली पनि रथारोहण गरी भैरवनाथ अनेक शक्तिविषे साधन इच्छा गरी कालीकालेश्वर प्रकाश गराया । यिनै भैरवनाथको रथ बनाउँदा पांग्रा कान्तिपुरको राजा बक्साई श्री पशुपतिनाथमा भेटी चढाई देवपाटनमा कामीकन खाजा दी श्लेष्मांतक वनको रूख जीर्ण भयाको ल्याई बनाउने प्रथा चलाया ।

अस्य पुत्र जगत्प्रकाश मल्ल वर्ष २१ । यी राजाले देशमा पूर्व भागका नदीमा हनूमान् साधना गरी ठूलो घाट बनाई धेरै कीर्ति बनाया ।

अस्य पुत्र जितामित्र मल्ल वर्ष २१ । अस्य पुत्र भूपति मल्ल वर्ष ३४ । अस्य पुत्र रणजित् मल्ल वर्ष ३३ । यी राजासित गोर्खाका पृथ्वीनारायण शाह आई तीन वर्षसम्म रणजित् मल्लको चाकरी गरी निजका छोरासंग मीत लगाई बस्याका थिया । यी रणजित् राजाले भैरवनाथका देवालयमा सुनका छाना र दर्बारका ढोका सुनका बनाई धेरै चोक बनाया । फेरि कान्तिपुरका भैं बाबाको सालीक राख्न्या मन्सुवा गरी कान्तिपुरका राजा जयप्रकाश छेउ तेलकारहरू पठाइदियाको तेलकारहरूले खम्बा खडा गर्दा तीन टुक्रा गरी भांचिदिया । राजा रणजित्का मनमा बहुतै चिन्ता हुंदा यी तेलकारहरूले फेरि युक्ति गरी खम्बा जोरी खडा गरिदिया । रणजित् मल्ल खुशी भै तेलकारहरूकन धेरै खिल्लत दिया । जयप्रकाश राजाले पनि धेरै खिल्लत दिया । फरि यिनै राजाले धेरै खर्च गरी दर्बारको कोट्याहुति यज्ञ प्रारम्भ गरेमा यज्ञकुंड भरिएन र शास्त्रहरू विचार गरी नरबलि दिन सकेमात्र पूर्ण हुने ठहरी राजा चिन्तानुदेशी रहेका समय यिनै राजाका नेवार्नी भित्रिनीले राजपुत्र वीरनरसिंहको मरण भया मेरो छोरा राजा होला भन्ने विचार गरी द्रव्यद्वारा पुरोहितको चित्त बुझाई वीरनरसिंह रूपको पुतली बनाई रात्रि सोही यज्ञकुण्डमा होम्न लायाछन् र चार दिनपछि कुमार वीर नरसिंह मल्ल शून्य भैगया । यस प्रकारले आफ्नु सन्तान शून्य भयापछि राजा रणजित् मल्ल दिक्दार भै गोर्खालीलाई राज्य सौंपी त्रैलोक्य मल्लले बनाइराखेका तुलजा ली आफू पनि काशीवास गै शून्य भैगया ।

इति भक्तपुरपट्टि वंशावली-क्रमः ।।

वाणाब्धियुग्मशशिसम्मितशाकवर्षे<br>
पौषस्यशुक्लनवमीरविसूनुवारे ।।<br>
त्यक्त्वा स्वपत्तनपुरीं हरिसिंहदेवो ।।<br>
दुर्दैवदैवविपरीतगिरिं प्रविष्टः ।।<br>
तत्सुनुर्जलधाविवेन्दुरुदितो वल्लारसिंहस्ततो ।।

जातो देवगणोपगीतमहिमा श्रीभद्रमल्लो नृपः ।।
तस्याभूदथनागमल्लनृपतिस्तस्यापि जातः सुतः ।।
तस्य श्री जयदेवमल्लनृपतिस्तस्यांपि नागःसुतः ।।
तत्सूनुश्च मदोग्रमल्लरुदिततस्यापि मर्णिःसुतः ।।
प्रोद्यन्मूर्तिरशोकमल्लसुकृतिः कीर्तिप्रवापोन्नरः ।।
तस्यात्मयोनिजजयस्थितिमल्लदेवः ।।
तस्मादभून्नरपतिर्जययक्षमल्लः ।।
यो विश्वविश्रुतिमहोग्रतरप्रतापो ।।
धर्मानुरक्तमतिरस्य च रायमल्लः ।।
तस्मादभूद्भुवनमल्ल इति प्रसिद्धः
श्रीप्रमाणमल्लवसुकल्पतनूस्ततोभूः ? ।।
मार्तण्डवर्तनिरतोजनिविश्वमल्ल ।।
स्त्रैलोक्यमल्लनृपतिः पुनरस्य पुत्रः ।।
क्षीरार्णाविव चन्द्रमाःकिमुत वै उद्यत्प्रभामण्डलः ।।
श्री कर्णः किमुतार्जुनोजनि जगत्सारैः सदारैर्गुणैः ।।
एतस्माद्धिविधानवद्यविरसद्विद्यान्वितः श्रीजग ।।
ज्योतिमल्लनरेन्द्रवन्द्यतिलको भूतांघ्रिपंकेरुहः ।।
नरशेमल्लो नृपराट्बभूव
ततः सतांसंमतजन्महेतुः
मानी प्रजानां सकलागमानां
ज्ञातापि हर्ता रिपुसंततीनां
जगत्प्रकाशो नृपतिस्ततोभूत् ।
साक्षत् पृथिव्यामपरो महेश्वरः ।
दानेन कर्णश्च बलेन पार्थः ।।
विराजमानो नृपमंडलेषु ।।
तत्पुत्रः ख्यातकीर्तिः सुमतिजयजितामित्रमल्लो नृपाणां
इन्द्रोभूत्सर्वविद्यागमनिगमविधौ यस्य बुद्धिर्विशेषः ।।
दातृणामग्रगण्यो रिपुगणविजयी सर्वसिद्धार्थविद्यो ।।
नेपाले भूमिपालैर्मणिमयमुकुटैर्घृष्टपादारविन्दः ।

अथ तस्य सुतापि भूपतीन्द्रकरुरणावान
निधितहुतेन पूर्णः ।
रिपुमर्दनखंडनेपि शक्तः स्वकुले सूर्य इवापरो भवतः ।।
तस्यापि नरनिधिगुणिताप्राणोपराधे निधिः
स्वश्रे श्रीचरणारविन्दनिरतः कामारिसूनोपमः ।
नीतिज्ञः क्षितिपालभालतिलकः सौम्यः प्रजावल्लभः
तारानायकरूपभूपरणजित्मल्लाख्यसूर्यान्वयः ।
श्री मद्भूपतिवासवात्मजमभून्नेपालचूडामणिः ।।

अब कान्तिपुर महिमा वर्णन

अम्बर मल्ल राजाले नेपाल रक्षा निमित्त श्रीवीर विक्रमादित्य राजाले जमायाको हरसिद्धिको नृत्य ठूलो हो भन्ने विचार गरी प्रथम सो नृत्य सन्मानपूर्वक जगाउंदा भया । बौद्ध मतावलम्बी बांडाहरूले आफूले छुन नहुने देवताको राजा प्रजा सबैबाट ठूलो सम्मान भयाको देखी यीखले मान घटाउनका लागि मतो गरी सिंबुमा बसी अनुष्ठान न्यास, मन्त्र प्रयोग गरी रोपाईंका बेलामा पानी थुनी अनावृष्टि गरी अनिकाल पारी हरसिद्धिका हात्तीले अन्न खाइदियो भन्ने दोष लगाया । पछि सहकाल गर्नालाई खोकनाका महालक्ष्मी आवाहन गर्नुपर्‍यो भनी राजा बक्साई बौद्ध मतानुसार बांडाहरूले नाच उठाया । फेरि मनमयेजु त्रिशक्ति नाच चलाया । अमाल पर्वतवासिनी हलचोकदेवी, पचलीभैरवका नवदुर्गागण, लुमडी कालीका नवदुर्गागण, कंकेश्वरी आदिका नृत्य चलाई देशमध्येका डहाथश्वरी (?) का नृत्य चलाया । यी ईट ठप्पेश्वरी (?) का नृत्य चलाउंदा कीर्तिपुरमा पनि नृत्य गर्ने रीत चल्याको हो । यी राजाले अनेक स्थानमा गुणीजनहरू राखी देवतागण जगाई प्रतिस्थानमा नृत्य लीला गराउंदथ्या । एकपल्ट कंकेश्वरीका (विष्णुमती काठमाडौं गणेशस्थान तल) नृत्य प्रकाश गर्दा समयमा कोही दुर्जन मनुष्य पशुरूप भैरहंदा देवी कोप भै नरबलि भोग लिया र यहांदेखि नृत्यमा कष्ट होला भनी कालीपूजा गरी शान्त गराया । देवी कोप भयाकाले नरबलि दिएमात्र नृत्य हुने भन्नाले १२ वर्षमा मात्र देवीगणहरूको नृत्य गर्ने प्रथा चलाई दियाका अद्यापि छंदैछ ।

फेरि यिनै राजाले लुमडी, कंकेश्वरी, लुभुचली (?) आदिमा प्रेत चतुर्दशीका दिन यथाक्रमले होम गरी अमावस्याको दिन रथारोहण गरी प्रतिवर्ष शहरमा यात्रा गर्ने प्रथा चलाया । यी राजाले भक्तपुर राज्यबाट भाग पाई भोग गरेका ग्राम देश कान्तिपुर,

ललितपुर, बांडागाउं, थैव, हरिसिद्धि, लुभु, सानागाउं, सुनागुठी, थैचो, चापागाउं, लेले, फर्पिङ्ग, खोकना, पांगा, कीर्तिपुर, थानकोट, बलम्बु, सतुंगल, हलचोक, फुतुं, धर्मथली, टोखा, चपलीगाउं लेलेग्राम, धनग्राम, चुकग्राम, गोकर्ण, देवपत्तन, बंदीग्राम, वेदीशारण, मालीग्राम, चाबुमती आदि ३२ ग्राम देशहरू यिनका अम्बलमा थिया । अघि अघिका राजाहरूले यी ग्रामहरू ब्राह्मणहरूलाई आफ्ना पुत्रीहरू दान दियाका र कोही देश फाटी जाई बसेका कोही परापूर्वदेखिका देवताहरूले बसायाका हुन् । सांखु, शंकरदेव राजाले व्रजयोगिनीकन शंखाकार देश बनाई शंखपुर नाम राखी प्रजा बसाई चढायाको हो भन्ने सज्जन पंडितहरूले विनती गर्दा राजाले थाहा पाया । त्यसपछि कीर्तिपुर थेचोमा नौदुर्गागणको नाच बनाई प्रजालाई आनन्द दी सुखसित राज्य भोग गरी राजा अम्मर मल्ल शान्त भै गया ।

अस्य पुत्र सूर्य मल्ल वर्ष ८१ । यी राजाले भक्तपुरका अमलमा रहेका सांखु, चांगु बलात्कारले जफती गरी आफ्ना देश बनाई चलन गऱ्या । केही वर्षपछि श्री बज्रयोगिनी माताको धेरै वर्ष सेवा प्रार्थना गरी चैत्रका पूर्णिमादेखि अष्टमीपर्यन्त पंचप्रकारका रथारोहण गरी देवी देशमा राखी बडो उत्साहपूर्वक प्रतिवर्ष यात्रा चलाई देश घुमाउने प्रथा र चांगुनारायणको यात्रा चलाया । राजा आफू पनि ६ वर्षसम्म शंखपुरमा बसी कान्तिपुरमा आया । त्यस बखत देवपाटनमा बडो उत्पात भइरह्याको रहेछ । उत्पातको बयान देवपाटनमा कोही प्रजाको मरण भई स्मशानमा दाह गर्नालाई लगी दाहा गर्नेहरू जिम्मा लागी दाह हुंदा मुर्दाको मस्तक फुटी उछिट्टेको गिदीको छिटा पर्दा पोल्ने गोठ १ कोही शूद्र जाति बाला नाम गऱ्याका मानिसका मुखमा परेछ र सो रस नरमांसको स्वाद छोड्न नसकी गुप्त गरी मुर्दाको मासु चोरी खाँदै गरेका प्रभवले विकट राक्षस भै त्यहीं वनभित्र बसी प्रजाहरूको मृतक ल्याउँदा मुर्दा खोसी खाइदिने, कैले वनमा एकलै जाने मनुष्यकन पनि समाती मारी खाइदिने गरी बहुतै कष्ट दियाको राजाले सुन्या । यसपछि विचार गर्दा यही दैत्य बनेको बालाको मित्र १ तेलकारकन पंडितहरूबाट चित्त बुझाई लालचवश शास्त्रको प्रमाण राजाज्ञाबाट समेत मित्र मार्न कबूल गऱ्यो र मनवेगी लोहको शस्त्र बनाई खुवाउनलाई अनेक सर्जामसमेत आफूले लगी मित्र बाला दैत्यका खोजीमा वनभित्र पसेछ । केही दूर गएपछि मित्र फेला पारी स्वागत गरी भोजको सरजाम र रक्सीसमेत धेरै पारी अचेत भयापछि मनवेगी लोक शस्त्र प्रहार गरी मारी भागेछ । मरेको बाला दैत्य कबन्ध (मुर्कट्टा) रूपले मारी भाग्ने तेलकारलाई लगारी आउँदा खाडलमा परि उठ्न सकेनछ र सबैले माटोले पुरिदियाको बालागाल भनी अद्यापि देखाउँदैछन् ।

तेलीलाई बाला दैत्य मारी सबैको रक्षा गरिदिया भन्नाले अघि नभएको तेलीहरूको मुर्दा लैजांदा मृतक बाजा भनी सिरपाउ दियाको अझतक छँदैछ ।

अस्य पुत्र नरेन्द्र मल्ल वर्ष ५ । यी राजाका पालामा देवपट्टनवासी नेवार कोलोखा नाम गरेकोले नित्य चांगु जाई नारायण दर्शन गर्न्या नियम गऱ्याको रहेछ । एक दिन चांगुनारायण दर्शन गर्न जांदा मनमती असमेल गरी बढी आएकोले तरी जान नसकी खेद गरी बसेमा आकाशवाणी प्रभुको भएछ-'हे कोलोखा, अब तिमीले चांगुसम्म पुग्नु पर्दैन । मेरो बगी आयाको मूर्ति तिमीले लगी देवपट्टनमा चझकुंड स्वयम्भू ब्रह्ममूर्तिसंधि स्थापना गर', भन्ने सुनी भक्त कोलोखाले मूर्ति खोज्दा लक्ष्मी सरस्वतीसहित श्री भगवान्को मूर्ति मनमती नदीका पाखामा बगी आयाको देख्यो र यो स्वराज्ञानुसार ब्रह्ममूर्ति संझी स्थापना गरी कृष्ण अष्टमीका दिन जाग्रम आदि अनेक पूजा गरी स्थापित गरेको नारायण मूर्ति अझतक छँदैछ । यिनै राजाले अघिका त्रिशूलयात्रानिमित्त भुवनेश्वरीमा पनि युग्म देवालय बनाइदिया ।

अस्य पुत्र महीन्द्र मल्ल वर्ष २१ । यी राजाले आफ्ना दर्वारका उत्तरपट्टि पशुपतिनाथको देवालय बनाई महीन्द्रेश्वर नाम राखी स्थापित गराया । फेरि दिल्लीका बादशाहकन स्वेत हंस र बाज चढाई बादशाह खुशी गराई महीन्द्र मल्ल राजाका साथ गयाका मोहरसिंह काजीका सल्लाहले आफ्ना नामको छ मासाको टक मागी ल्याई मोहरमा छाप राखी महीन्द्र मल्ली अधेली मोहर नाम चलाई भरमुलुकमा फिंजाया । महीन्द्र मल्ल राजाले ल्यायाकाले महीन्द्रमल्ली, छमाशा टक मारेकाले अधेली, मोहरसिंह काजीका सल्लाहबाट मागेकोले मोहर भन्ने नाम चल्याको सो आजतक नेपाल नेपाल राज्यमा प्रचलित छ । फेरि यिनै राजाले कान्तिपुरमा खसहरूलार्य घर खेत बीर्ता दिया । फेरि यिनै राजाले तुलजा देवीको अघिको स्थान भक्तपुर हो भन्ने विचार गरी कान्तीपुरमा पूजा गरी नित्य भक्तपुर गै तुलजा जगाउने मन्त्र जपी दर्शन गरी आउने गर्दा रह्याछन् । एक दिन तुलजा देवी खुशी भै आज्ञा भएछ-हे राजन्, म राजा रत्न मल्लका पालादेखि नै कान्तिपुरमा बस्याकी छु । तिमीले नित्य कष्ट गरी यहां आउनुपर्दैन । तिम्रो मनमती भक्तपुरमा देखिने गरी बहुत उच्चा यन्त्राकार गरी त्यहीं कान्तिपुर राजा मल्लले मकन स्थापित गऱ्याका स्थानमा देवालय बनाऊ भन्ने देवीका आज्ञानुसार राजा खुशी भै कालीगढहरू जम्मा गरी देवालय बनाउने लक्षण बताउन लागेका बखत अकस्मात् श्री इश्वरीका इच्छाले एक संन्यासी रूप प्रकट भै कालीगढहरूकन यन्त्राकार देवालयको लक्षण मन्त्रभेद बताई अंतरधान भैगया । तहांउप्रान्त कालीगढहरूले संन्यासीका

आज्ञाबमोजिम गरी ईश्वरीको देवालय यथाविधिले सिद्ध्याई तैयार पाऱ्याको अद्यापि छँदैछ । नेपाल सम्वत् ६६९ माघ शुक्ल पञ्चमी सोमवार रेवती नक्षत्रका दिन श्री तुलजा भवानी भ्रमररूपले देवालयमा प्रवेश गरिन् ।सम्वत् ६८४ साल, माघ कृष्ण दशमी, सोमबार, अनुराधा नक्षत्रमा तलेजुको देवालय प्रतिष्ठा गराया । भ्रमररूप भवानी देवालयमा प्रवेश भयाको राजाले देख्दा अत्यन्त हर्ष उत्साहित भै धेरै ब्राह्मणकन बिर्ता दक्षिणा दी संतुष्ट गऱ्या । त्यस दिनदेखि कान्तिपुरमा प्रजाहरूले ठूलो उच्चा गरी घर बनाउन पाया । फेरि यी राजाले मछीन्द्रनाथ, तुलजा आदि धेरै देवस्थानहरूमा धेरै गुठ पूजा गहना राखी धेरै धर्म कीर्ति गरी शान्त भै गया ।

अस्य पुत्र २ जेष्ठ पत्नी कुन्तीतिरका शिवसिंह मल्ल वर्ष २५ । कनिष्ठ रानीतरफका सदाशिव मल्ल । यी सदाशिव मल्ल दुर्जनका संगले दुर्जन भै घोडा पाली बथान तुल्याई प्रजाहरूका बालीमा छाडी खुवाई नाश गरिदिया र यात्रा हेर्न आउने सुन्दरी स्त्री जनमा बलात्कारसमेत गर्ने गरेकाले प्रजा बहुतै कष्टित भया । यिनका उपद्रवले प्रजा वागी भयाका र एक दिन यी राजा शिकार खेल्नका निमित्त मनहरातर्फ जांदा सदाशिव मल्ल भागी भक्तपुरतर्फ गया । त्यसपछि भक्तपुरका राजा भेटी मदत दिनुभया कान्तिपुरका साथ लड्छु भन्या कुरा गऱ्याछन् । राजाले मद्दत दिन कबूल नगरी प्रवस्ती गर्ने विचार साथ भत्ता र २ चोक दर्वार नोकरसमेत दी सुविस्तासाथ नजरबन्दीमा राख्याका केही कालपछि त्यहीं स्वर्ग भै गया । सदाशिव मल्लको चोक भन्ने अझतक प्रख्यात छँदैछ ।

त्यहांदेखि कान्तिपुरमा सूर्य वंशी राज्य लोप भै गया । त्यसपछि शिवसिंह मल्ल राजा भै ललितपुरका राजा काजी हातमा ली ललितपुरमा पनि रजाई चलाया । केही कालपछि दक्षिणी लम्बकर्ण महाराष्ट्रिय भट्ट आई कुलेश्वरमा पसी कुलेश्वरी जगाउँदा नन्द नाम गऱ्याका दुईजना (?) काठमाडौंका जैसी काजीले यिनीकन लगी राजा शिवसिंह मल्लछेउ भेट गराई गुरु पदवी गरी ललितपुर पाटनमा रजाई चलाई कान्तिपुर ललितपत्तन दुवै शहरमा देउतले स्थापना गराया । फेरि, केही दिनपछि कंडेल चोकभित्र स्वान प्रवेश भयो र राजपुरोशितहरूले यस वाक्यले शान्ति गऱ्या । कडेलचोक अभ्यंतर कुत्ता प्रवेशः शान्ति शिवसिंह मल्ल स्वाहा ।

यस्तो अशुद्ध वचन राजपुरोहितहरूका मुखबाट निस्केको सुनी राजा बहुत चिंतित भया । त्यसपछि देउतलेको प्रतिष्ठा गरी ब्राह्मणभोजनको संकल्प गराउँदा ब्राह्मणभोजमहंकरीष्ये भन्ने मेरा देशमा कोही पण्डितै नभया जस्तो भयो भन्ने विचार गरी

काजीहरूसंग सल्लाह गर्दा देश देशका पण्डितहरू ल्याई राख्ने सल्लाह दिया र वाग्वादिनीले वरदान दियाका तिर्होतिया पण्डित भयाकाले तिरहुतका राजाकन हंस, बाज सौगात पठाई विसंवार, कर्महेलको ढपतर बारख आदि थरका पण्डितहरू मागी ल्याई आफ्ना देशमा राम्रा तौरसंग राखी घर खेत बिर्ता दी बसाया । यस दिनदेखि राजकुमारहरूकन डोला लिन जान्या पनि यिनै तिरहुतिया भया । मैयाहरूका संग आउन्या ब्राह्मणहरू पनि बिर्ता पाई तीनै शहरमा बस्या । फेरि, यिनै राजाले देशरक्षाका निमित्त श्री पचलीभैरव क्षेत्रपाल हुन् भनी यथाक्रमले माटोका कूप बनाई नाना द्रव्य भरी ठूलो मांसाहुति यज्ञ गरी प्रतिवर्ष आश्विन शुक्ल ५ रोजका दिन यात्रा गर्ने प्रथा चलाया । यी राजा शिवसिंह मल्लका पुत्र हरिहरसिंह मल्लले राजा शिवसिंह मल्लका जिंदगीमै शान्त भयाकाले राज्य गर्न पाएनन् । युवराज हरिहरसिंहका जेठा रानीतिर पुत्र जेष्ठ लक्ष्मीनरसिंह कान्छी रानीतिर ऋद्धि नरसिंह मल्ल रह्याछन् । माहिली रानी लालमतीतिर सन्तान भयाको रहेनछ र युवराज स्वर्ग भयापछि माहिली रानी सती जान्छु भनी हठ गर्दा राजा शिवसिंहले माहिली बुहारी गर्भ भयाकीले सती जानु हुँदैन, तिम्रा गर्भबाट छोरी छोरा जे भए तापनि ललितपुरको राज्य दियां । जेठा कुमार लक्ष्मीनरसिंह कान्तिपुरको राज्य गर्न्याछन् भनी बुहारी लालमती रानीकन बहुत तरहले बुझाई सती जान दिएनन् । युवराज हरिहरसिंहको संस्कार जेठा राजकुमार लक्ष्मीनरसिंहबाट गराया । यसपछि माहिली रानी लालमतीका गर्भदेखि पनि पुत्र जन्म भयो र गर्भबाट राज्यसिद्धि गरी पैदा भयाकाले सिद्धिनरसिंह भन्ने नाम प्रख्यात भया । राजा शिवसिंह मल्ल तीनै नाती संयुक्त गरी राज्य गरी रहंदा समय मै ज्येष्ठ कुमार लक्ष्मीनरसिंह मल्ल बेहोस (उन्मादपन) स्वभाव भयाकोले राजा शिवसिंह र गंगारानी बहुतै उदास भया । सोही बखत वनविहार गरी उदास चित्त शान्त गराउन्या निमित्त बुढानीलकंठ जान्या अर्धमार्गमा सुस्थिर गरी बगैंचा बनाई अनेक फलफुलका वृक्ष रोपी रानीवन नाम राखिदिया । फेरि शिवसिंह मल्ल राजाले नाती लक्ष्मीनरसिंह मल्लकन इलाज अनेक औषधि यन्त्र मन्त्र गरी रोग शान्त गराया । आफू वृद्ध भयाकाले कुमार लक्ष्मीनरसिंहकन तुलजा जगाउन्या मन्त्र भने एक जनालाई मात्र दिनू भन्ने तुलजाको हुकुम हुनाले सिद्धिनरसिंहले पायानन् । केही कालपछि लक्ष्मीनरसिंह, सिद्धि नरसिंह दुबे खेल्ना निमित्त रानीवन गयामा तुलजा मन्बका कारणमा झगडा परी लक्ष्मीनरसिंहले सिद्धिनरसिंहलाई रुखमा बाँधी कुटी ठूलो सासना गरी आउँदा राजा शिवसिंह मल्लले थाहा पाई म छँदै यस्तो गऱ्या भनी कोप गरी लक्ष्मीनरसिंहलाई रातमा निकाला गरिदिंदा बाजेका भयले रात्रिविषे लक्ष्मीनरसिंह कान्तिपुरदेखि निस्की

देवपाटनमा कोही १ रजकका घरमा गुप्त गरी रह्या । धेरै दिनसम्म गुप्त भै रहंदा रजिकपुत्री बुरुचो फिकुंचाहरूले बहुत तरहसंग राजपुत्रको सेवा गर्दा यिनीहरूका साथ राजपुत्रको गुप्त कार्यसमेत भै मेरो राज्य भयाको दिन तिमीहरूको जल आदि सबै कर्म चलाईदिउला भन्ने राजपुत्रले प्रतिज्ञासमेत गर्‍याछन् ।

यहांपछि सयनै राजा शिवसिंहका पालामा नित्यानन्द नाम १ षेडसन्यासी ब्रह्मचारी स्वामी दक्षिण देशदेखि आई श्री पशुपतिस्थानमा रह्याका गंगारानीले सुनिन् र रानी आई स्वामीको सम्मान गरी श्री पशुपतिनाथका पुजाहारी गर्ना योग्य हुन् भन्ने निश्चय गरी पुजारी गरी राख्या । यी स्वामी बहुत सामर्थवान् हुनाले राजाका कल्याणनिमित्त इच्छा गरी अघोरनाथका दृष्टि साफै पर्नाले ललितपुरका राजाहरू धेरै वर्ष नरह्याका भन्ने ठहराई दृष्टिदोषनिवारणनिमित्त अघोरनाथका अग्रभागमा कुतूहलक्रिया सम्पन्न गरी उन्मत्त भैरव जगाई स्थापना गर्‍या । यस दिनदेखि ललितपुरमा राजा मन्त्रीहरू बढिया भया ।

फेरि, बालकहरूलाई सिंबुका बुढियाको देवपत्तन भय निवारण गराया । कोही कोही बालखहरूलाई सो बुढिया लागेमा उन्मत्त भैरव पूजा गरिदिंदा पनि शान्त हुने भो ।

फेरि, राजराजेश्वरी जङ्गल ठूलो गरी बनाई श्री पशुपतिनाथ प्रीत्यर्थ चढाया । रानी गङ्गालाई तिम्रा सन्तानलाई दुवै शहरको राज्य स्थित रहला भन्या । यी स्वामीको आशीर्वाद र पशुपतिमन्दिरको छाना बनाउन आज्ञा पाई रानी खुशी भै राजा बक्साई श्री पशुपतिनाथको ३ तले छाना बिग्रेकोले पछि कष्ट होला भनी माझको १ खण्ड झिकी २ तलामात्र कायम राखी धेरै सुन खर्च गरी गजूर छाना बनाई त्रिकोण ईंट पारी देवालय बनाइदिया । सम्वत् ७७५ सालमा त्रिकोण ईट बन्यो । चांगुनारायणको देवालय पनि सम्पूर्ण गरी छाइदिया ।

केही कालपछि एक रात्रिविषे श्री पशुपतिनाथका देवालयका नैर्ऋत्यकोणको सर्प विशब्द गरी करायो र सुन्या मानिसहरूसमेत बहिरा भै गया । त्यसका चौथा दिनमा राजा शिवसिंह मल्ल शून्य पदवीमा गया । गंगारानी पनि सहगामिनी भयिन् ।

## लक्ष्मीनरसिंह मल्ल

अस्य पुत्र लक्ष्मीनरसिंह मल्ल वर्ष ११ । त्यसपछि रजकका घरमा गुप्त रहेका लक्ष्मीनरसिंह कान्तिपुरमा आई राज्य गरी बस्दा भया । यी लक्ष्मीनरसिंह मल्ल राजा अघिदेखि नै बेहाशी स्वभावका, शान्त गराई राख्याका, फेरि उस्तै भै रजकहरूको पानी चलाइदिया र लालमती रानीले अब यहां बसी भलो हुन्या छैन भन्ने विचार गरी अघि राजा रत्न मल्लले भक्तपुरबाट कान्तिपुरमा ल्याइराखेका तुलजा देवी आफ्ना खोपामा

राखी पुत्र सिद्धिनरसिंह मल्ल सौता कान्छी रानी....मती यिनका पुत्र ऋद्धिनरसिंह मल्ल र बुहारीहरूसमेत ललितपुरमा प्रवेश भै राज्य भोग गर्दा भया । यसै वर्ष परापूर्वका दिगंवाराही पश्चिम दिशाकी वाराही नन्दीग्रामका ग्रामदेवी बगाई लैजांदा नन्दीग्रामवासी प्रजाहरूलाई सुनाइ दिनु भयो-हे प्रजा हो, म रुद्रमतीमा बगी जान लागें । संभार गर भन्ने भगवतीको आज्ञा हुंदा पनि प्रजाहरूले वास्ता नराखी वाराही बगी जांदा चौथा दिनमा चौबाहालका नाग आई लान खोज्दा रुद्रमती तीरैतीर बगी बागमतीसम्म पुगेकोले वागमतीका नागले लान नदिई ताहीं अड्कनु भयाको धनतिल वाराही भनी बागमतीका मध्यमा अझतक छँदैछन् । वाराहीबाट बग्ने समयमा नन्दीग्रामवासी मनुष्यलाई जनाउंदा पनि वास्ता नरनखेकोले वाराहीबाट नन्दीग्रामवासीले सुख नपाउन् भन्ने शाप दिनु भयाकोले नन्दीग्रामवासी संधै दुःखी भयाका हुन् । त्यस दिनदेखि नन्दीग्रामको ग्रामरक्षक पीठ नहुंदा राजा बक्साई उत्तर वैष्णवीगणहरूको यात्रा प्रतिवर्ष चलाई धेरै गुठी पनि राखिदिया......

सिद्धिनरसिंह मल्ल

यसपछि ललितपुरका राजा सिद्धिनरसिंह मल्ल आफ्ना राज्यनिमित्त बुह (?) नामले १ ग्राम बसाई श्री पशुपति नाथको मूर्तिसमेत स्थापित गरी शिवपुर नाम राखी तामापत्र गरी श्री पशुपतिनाथकन चढाया ।

फेरि यी राजाले पचली भैरवको कूप नभरिने भन्ने सुनी म भरिदिन्छु भन्ने अभिमान गरी अनेक द्रव्य बोकाई मङ्गलभट्टदेखि पचलीसम्म एक लहर गरी भराउंदा भरिएन र सबै भरियाबाट बागमतीका जल बोकाई दिनदिनभर भराउंदा पनि नभरिंदा राजा आफैं आई अपराध क्षमानिमित्त अनेक विधि पूजा गरी धेरै खर्च र प्रार्थना गरी प्रतिवर्ष एक हंस बलिसहित पूजा गरौंला भन्ने भाकल गरी पूजा गरिराखेको अद्यापि छँदैछ । यस्ता प्रत्यक्ष पचली भैरव हुन् ।

यस वर्ष कान्तिपुरमा भैरवयात्रा गरी ल्याउंदा अर्ध मार्गमा खसी यी कूपको थोर त्यहीं जमीनमा खसी ढुंगाले छोपिराखेको भेलुपाट भनी अझतक प्रख्यात छ । फेरि कान्तिपुरका राजाले धातुका कूप बनाइदिया ।

एक दिन राजा सिद्धिनरसिंह मल्ल कौसीमा बसी कान्तिपुरतर्फ नजर दिंदा कान्तिपुरका दर्बारबाट आगोका ज्वाला उडीं आएको देख्या र घोडा चढी कान्तिपुर जांदा दाज्यू लक्ष्मीनरसिंह राजा लोप भैरहेका रह्याछन् भतीजा प्रतापमल्ल बोलाई तुलजा जगाउने मन्त्र तिमीले पायौ कि भनी सुध्याउंदा बुबाज्यूबाट हुकुम हुंदा कोचा भडेलले छल

गरी मलाई पठाएन नयां गोलफुमा टेकु दोभानको जल भरी मन्त्रसमेत सोही गोलफुमा हाली हान्त हुनु भया भन्ने विनती गर्दा राजा सिद्धिनरसिंह मल्लले भतीजालाई धिक्कारी फर्की महतारी लालमतीमा सबै विस्तार बताउंदा मुमा रानीले देवता मैले खोपामा गुप्त गरी राखेकी छु । मन्त्र पनि कान्तिपुरबाट उडी आयाको तिमिले देख्यौ । अब भवानी तुलजाको प्रवेश ललितपुरमा हुन्छ । तसर्थ तिमीले भवानीको भक्ति गरिरहनु भन्ने विस्तार बतायिन् । फेरि रानी लालमतीले तुलजा जगाउन्या विधान जान्या ब्राह्मणबाट पुत्रलाई दीक्षा दिलाउने विचार गरी अघिदेखिका राजा पुरोहितहरूसित बुझी हेर्दा निजहरूलेसमेत तुलजा विधान भेद मिलाउन नसकी रानी बहुतै चिन्तामा रहनु भयाको बखत स्वप्ना के देख्नु भो भने विश्वनाथ भेट । सो स्वप्ना देखी वैश्यका घर बसेका विश्वनाथ उपाध्यायकन खोजी ल्याई बुझी हेर्दा विश्वनाथ उपाध्यायले भेद बताया र रानी खुशी भै आफ्ना खोपामा रह्याको तुलजा देखाई पुत्र सिद्धिनरसिंह राजालाई दीक्षा दिलाई नेपाली सम्वत् ७४० मा तुलजाकन देवालय बनाई जेष्ठ शुक्ल १० का दिन अस्ता नक्षत्र व्यतीपात योग बुधवासर वृष राशीमा सूर्य भएका दिनमा प्रतिष्ठा गर्दा आकाशमार्गबाट एक अग्निको ज्वाला आई देवालयभित्र बस्याको राजा प्रजा सबैले देखी राजा खुशी भै गुरु विश्वनाथ उपाध्यायकन कल्पवृक्ष दक्षिणा दिन्छु भनी भन्दा विश्वनाथ उपाध्यायले ललितपुरका ब्राह्मणहरू सबै दुःखी छन् यिनै दुःखी ब्राह्मणहरूलाई दिनुहवस् भनी राजासित विनती गर्दा राजाले पनि मंजूर गरी दुइ कल्पवृक्ष तयार गरी गुरु विश्वनाथ उपाध्यायद्वारा सबै उपाध्याय ब्राह्मणहरूको दरिद्र मोचन गराया । यी सिद्धिनरसिंह मल्ल राजाका महतारी लालमती रानीकन हरिहरसिंह मल्ल राजाले मुखै नहेरी श्री पशुपतिका स्थानमा राखिदियाका थिए र काजीहरूले युक्ति गरी सुलग्नमा यी रानी राजाको भेट गराई श्री पशुपतिनाथसंधि दक्षिणपट्टि भैरवका अगाडि संभाग भै गर्भाधान भयाका हुनाले यी राजा सिद्धिनरसिंह मल्ल बहुतै शान्त बानी स्वभाव भयाका हुन् । यी राजाले दर्वार पनि ठूलो बनाई यथाक्रमले भंडारखाल बनाई तीन खण्ड गरी तलेजु देवल देगतले मच्छिन्द्रनाथकन चढाया ।

फेरि यी राजाले आफ्ना वैमातृ भाइ ऋद्धिनरसिंह मल्लकन सौगलटोल १ को राजा गरी चित्त बुझाई राख्या ।

फेरि यी राजाले  दर्वारको ठूलो देवालय बनाई मूर्ति बनाउन लाग्दा श्रीकृष्णबाट राजालाई तैंले अरू मूर्ति बनाउन पर्दैन, मेरो मूर्ति फलाना जग्गामा छ भन्या स्वप्ना हुंदा खोजी हेर्दा बांया पाउको बुढी औंला फुटीगयाको देखी राजाका मनमा मूर्ति खंडित भयाकोले बडो फिक्री गरिरहंदा फेरि राजालाई स्वप्ना भयो-हे राजन् मूर्ति खंडित भएको

होइन । मलाई व्याधाले बाण प्रहार गऱ्याको चिह्न हो । फिक्री नगर-भन्ने श्रीकृष्ण भगवान्को आज्ञा हुंदा राजा खुशी भै देवालय सिद्ध गरी गुरु विश्वनाथ उपाध्याय पुरोहित गरी धेरै द्रव्य लगाई कोट्टयाहुति होम गरी नेपाल सम्वत् ७५७ साल फाल्गुण शुक्लका दिन प्रतिष्ठा गराया । यो कोट्टयाहुति होम गर्दा कान्तिपुरका राजा प्रताप मल्ल र लम्वकर्ण भट्ट दुवै मिली यघमा विघ्न गर्ने नियतले ठूलो काल सर्पका रूप गरी यज्ञमण्डपमा प्रवेश गर्दा विश्वनाथ उपाध्यायले चाल पाई दुवैकन पत्री गोला पारी आफना आसनमनि राखी चल्न नसक्ने स्तम्भनास्त्र प्रयोग गरी पूर्णाहुतिका दिनसम्म पनि कसैले लिन आएन भने सर्पाहुति गरूंला भन्या विचार गरी राखे । फेरी १०।१५ दिनपछि यो अनर्थ हुन लागेको कान्तिपुरका जनमन गुभाजुले थाहा पाई काठमाडौं भुटेश्वर गै धेरै दिन कष्ट गरी त्यहाँका देवता १ मोमहेन्द्र देवता १-२ देवता उठाई पठाया । यी दुवै देवताहरू आई वालकरूप ली भोटोमात्र लाई यज्ञमण्डपका द्वारसंधी बसी नबोली भोटामात्र थापी बस्दास्याबजी आदि सबै समय तयार गरी यिनीहरूलाई दिंदा भोटामा थाप्दै १२।१३ मुठी चिउरा खाइदिया । सो देखी विश्वनाथ उपाध्यायले तिमीहरूको इच्छा के छ भनी सुध्याउँदा मुखले केही नबोली हस्तसंकेतबाट घुँडामनि गोला पारीराखेका दुवै सर्प देऊ भनी भोटा थापिरहंदा सत्य कबुलाई धेरै विनती गराई दुवै सर्प भोटामा राखिदिया । सर्प लगी वागमती र मरुमा बसिरहने जामन गुभाजुलाई सौंपिदिया । त्यसपछि जामन गुभाजुले मन्त्र प्रयोग गरी यिनीहरूकन जस्ताकोतस्तो गरी राजा र भट्ट खडा गरी बहुतै खै गरे । त्यस दिनदेखि राजा प्रताप मल्ल लम्वकर्ण भट्ट दुबैले जामन गुभाजुका मतबेगर केही कर्म गरेनन् ।

यहांपछि विश्वनाथ उपाध्यायले विघ्न टारी निर्विघ्न यज्ञ सम्पूर्ण गरिदियाकाले राजा खुशी भै गुरु विश्वनाथ उपाध्यायकन ललितपत्तनभरका लगापात जजमानी बिर्ता गरी गाबाहालका घर धेरै खेत पनि दक्षिणा दिया । अघि ब्राह्मणहरूका जजमानी बिर्ता थिएन । त्यस दिनदेखि बिर्ता र विश्वनाथ उपाध्यायका सन्तान राखी यी तिम्रा जजमान हुन् । ठूला ठूला कर्म अरू ब्राह्मणले नचलाउनु भनी बंदेज गरिदिया । फेरि यिनै राजाले गोपीकृष्ण नित्य नैमित्तिक गुठी राखी गुरु विश्वनाथकन पूजक गराया । राजाले ज्याउला पोखरी बनाउंदा सात तला सीढी राखी पांच इनार बनाई तयार गर्दा पानी उम्रेन र गुरुछेउ विनती गरी गुरु विश्वनाथबाट पुरश्चरण गरी पांच इनारबाट पानी उमराई पोखरी भरी प्रतिष्ठा गरिदिया ।

केही दिनपछि यी राजाले आफुले बनायाको खाडल देवालय ठूलो हो भनी रात्रिविषे हेरिरहंदा देवालयभित्र गोपीकृष्ण खेलिरहनु भयाको दर्शन पाया र कलियुगका राजाका

चर्मचक्षुले यस्तो दर्शन महाकष्ट गरे पनि पाउन नसक्नेमा श्री राधाकृष्णका कृपाले सहजै दर्शन मिल्यो भन्ने विचार गरी ईश्वरविषे भक्ति चढाई संसारदेखि विरक्त भया ।

केही कालपछि मछीन्द्रनाथको प्रतिवर्षको रथयात्रा गर्दा पुरुष जङ्गलमा नफकीए सोभ्कोे गरी रथ खेतसम्म पुरियो र रथ खेतबाट चलाई ल्याउन नसकी १५।१६ दिनसम्म अड्कंदा कोई २ वर्षका बालकका शरीरमा आवेश भै राजारथी ब्राह्मणले स्वस्तिवाचन गरी छत्र समाई राजगुरु विश्वनाथ उपाध्याय रथमा बसेमा मेरा रथ चलाई रथयात्रा गर्न सकौला भन्या आज्ञा हुंदा राजा सिद्धिनरसिंह मल्ल रथयात्रा गर्न आउंदा गोपीकृष्णको मूर्तिको दर्शन पाया । ती वालकले यस्तो श्लोक पनि पढ्या :-

नमः सवित्रे जगदेकचक्षुषे जगतेप्रसूतिस्थितिनाशहेतवे ।।

त्रयीमयाय त्रिगुणात्मधारिणे विरिंचिनारायणशंकरात्मने ।।

यो श्लोकको अर्थ बुझी आफुले दर्शन पायाको सत्य मानी आज्ञाबमोजिम गरी चलाउंदा रथ चल्यो । यसै वर्षदेखि ब्राह्मणहरू बसी रथयात्रा गर्ने रीत चल्यो ।

फेरि राजाले पुलचोक र ललितपुर एकै शहर गर्न्या अभिप्राय गरी नवटोल नामले ललितपुरका पश्चिमतर्फ शहर बढाया ।

त्यसपछि राजाले कस्ता कष्टसित तप गर्न लाग्या भने गर्मीको बेलामा ७ पाखी खापी अग्निसमीप गरी अन्दर यी बस्थ्या । जाडोका समयमा मनसीलाका पलंगमा ईंटका टुक्रा बिछाई त्यसमाथि आफु सुती एक पातलो पछ्यौरा बढी काट्थ्या । खानालाई पनि एक मुठीदेखि बढाई पाथीसम्म, पाथीदेखि घटाई  एक मुठीसम्म गरी भोजन गर्थ्या । असल मेवा मिष्टान्न त्यागी पायाका जे वस्तु भया पनि खाई पेट भर्ने पनि गर्थ्या । यस्तो धेरै दुःख कष्ट गरी शरीर स्ववश गराई अनेक ज्ञानका कविता गीत बनाई सबै लोक जनले धन्य कहलाई श्री पशुपतिनाथ, श्री गुह्येश्वरी, मच्छीन्द्रनाथ, तलेजु, देगुतले, श्री कृष्ण आदि ठाउं ठाउंका देवस्थानमा अनेक गुठी गहना कीर्ती राखी नेपाल सम्वत् ७७४ सालमा मत्स्येन्द्रनाथका लगनयात्राका दिन कसैलाई नजनाई संसार त्याग गरी देशान्तरमा गया । यी जांदा श्री कृष्णका मन्दिरमा एक श्लोक पनि लेखिगयाका रहेछन् ।

श्लोकः-

यावन्न पतते चक्रं श्री कृष्णस्य च मन्दिरे ।।

तावत्सर्वैश्चिन्तनीयं जीवितोहं न शंसय ।।१।।

पछि मन्दिरमा लेखियाको श्लोकः-

सिद्धिनर्सिंहः सर्वज्ञो जीवन्मुक्तो जितेन्द्रीयः ।
माधवप्रियः श्रीभक्तो योगीश्वरः कवीश्वरः ।।२।।
वीरो यो भवति त्यागी हरिसिंहस्य नंदनः ।
इत्याख्यानं पठेन्नित्यं सर्वपापैः प्रमुच्यते ।।३।।

यी राजा जीवन्मुक्त हुन् । यिनले ललितपत्तनको राज्य ५९ वर्षसम्म गर्‍या ।

श्रीनिवास मल्ल

अस्य पुत्र श्रीनिवास मल्ल वर्ष ४२ । यी राजाले मूल चोक बनाई अघिका महालक्ष्मीपीठमध्यमा गरी सुवर्ण देवालय बनाए । फेरि यसै मूल चोकका ईशान कोणमा आठ कुनाके देवालय बनाई अघि तलेजु र देगुतले एकै देवालयमा रहेकाले तलेजुका आज्ञा पाई त्यहीं आठ कुनाको देवालयमा सारी आफ्ना गुरु बृहस्पति, मधुसूदन उपाध्यायले स्थापना गराया ।

फेरि.....यिनै राजाले दसैंका पूजा गर्ना निमित्त तलेजु देवता मूल चोक दसैं घरमा तल सारी ल्याउँदा मूल चोकका आग्नेय कोण भैरवसहित गरी नवदुर्गा नाच्याको देखी गुरु मधुसूदन उपाध्यायसंग मत गरी तीन थर बांडाहरू डाकी यिनीहरुबाट नवदुर्गाको नाच नचाई दसैंभर नचाइराख्ने रीत चलाएको अद्यापि छँदैछ ।

फेरि आफ्ना बाबाले कार्तिक ५ दिनसम्म कार्तिक नाच चलाइराखेकोलाई कार्तिक भरमैह्ना नचाउने रीत चलाया ।

फेरि नेपाल सम्वत् ८०० सालमा मछीन्द्रनाथका अगाडिका भैरवका मूर्ति जीर्ण भयाकाले नयां बनाई मधुसूदन उपाध्यायबाट प्रतिष्ठा गरी चढाया । यी श्रीनिवास मल्ल राजा नीलकण्ठ जान भनी तयार हुंदा कान्तिपुरका राजा प्रताप मल्लले रोक्नु भयाको खबर सुनी मनमाफिक गरिरहंदा स्वप्ना देखिया र कुंभेश्वरका सात नागका मूर्ति बनाई पोखरीमा राखी नीलकण्ठ स्नान गराया । नीलकण्ठमा बगेका एक जोगीको तुम्बा जोगी कुंभेश्वर आउंदा गौरीकुंडमा पाई नीलकण्ठ निश्चय गरी स्नान गरी प्रतिवर्ष चलाइदिया ।

भाग काजीसंग मत गरी मछीन्द्रनाथका धेरै थिती बांधी शिलापत्र लेखी बसाया । यी भाग काजीले मकवानपुरसम्म लडाईं गरी जिती लिया र फेरि भाग काजीले ठूलो तीन तले सत्तल बनाई शिवलिंग स्थापना गरी मधुसूदन उपाध्याय पुरोहितबाट प्रतिष्ठा गरी गुठी राखी नित्यार्चन चलाया ।

वहांपछि यी राजाले धेरै धर्मकर्म गरी धर्मशालाहरू बनाई शुभनाम दूरको राज्यसमेत चलाई केही वर्षपछि शान्त भै गया ।

## योगनरेन्द्र मल्ल

अस्य पुत्र योगनरेन्द्र मल्ल वर्ष.....। यी राजाले अघिका भीमसेन जीर्ण भयाकाले महान् क्रोधमूर्ति दुःशासनवध गराई महातामस मूर्ति गरी बाउका नाम होम दी कंकाली शक्काली राखी विश्वनाथ उपाध्यायका ज्येष्ठ पुत्र हरिनाथ उपाध्यायबाट प्रतिष्ठा गराई जीवन न्यास गरी नाकका प्वालमा पिउरी राखी फुंकार गराई पिउरी मण्डलका डबलीसम्म गयो । यस्तो जगाई ठूलो देवालय बनाई प्रतिष्ठा गरिदिया । यस्तो उग्र मूर्ति भया भन्या यी भीमसेनका सम्मुख हुन्या बित्तिकै मानिस मरिगया र राजा योगनरेन्द्र मल्ल हरिनाथ उपाध्यायलाई डाकी यी हाम्रा भीमसेन अति उग्र भई प्रजाहरू खान लाग्या । यस्ता भया सबै प्रजाजनको नाश हुनजाला । किंचित् शान्त गरिदेउ भन्दा अघि आज्ञाबमोजिम उग्र भयाकै ठीक छ भनी हरिनाथ उपाध्यायले शान्त गरिदियानन् र राजाले......बाबा कै गुरु विश्वनाथका पुत्र मधुसूदन उपाध्यायकन डाकी धेरै सम्मान गरी विनती गर्दा मधुसूदन उपाध्यायले यिनै भीमसेनको जीव घण्टमा सारी हात मुख खुम्च्याई घंट बागमतीमा बगाई भीमसेन शान्त गराइदिया । यिनै हरिनाथ उपाध्यायका जेष्ठ पुत्र भया पनि बडो कोपी भिकीदार हुनाले राजा श्रीनिवास मल्ले यिनैसंग दीक्षा नलिई माहिला मधुसूदन उपाध्यायसंग दीक्षा लियाकाले राजा योगनरेन्दै मल्लले पनि मधुसूदन उपाध्यायका पुत्र विद्यानन्द उपाध्यायसंग दीक्षा ली मूल चोकका दक्षिणपट्टि देवालय बनाई न्हुल नाम राखी सुनधारा बनाई धारामा अनेक देवताहरूको ध्यान निकाली ठटु लायंकु नाम गरी ढोकाका दाहिनातिर नरसिंह बायां गणेश राखी न्हुदेवलमा आफ्ना नितइ कर्म पूजा गर्ना निमित्त तुलजा राखिदिया ।

फेरि यी राजाले गुरुको आज्ञा पाई बज्रवाराहीका अगाडि शिलाको महिष मूर्ति बनाई लक्षाहुति यज्ञ गरी नेपाल संवत् ८२० मा प्रतिष्ठा गराइदिया ।यी राजाले हरिसिद्धि नाच उठाई ललिपुरका मूल चोकमा नचाउन ल्यायाका दिन नाच सकी मूलचोकका पूर्वपट्टिका कोठामा सुकलागरिरहंदा कान्तिपुरका कवीन्द्र जय प्रताप मल्ल राजा नाच हेर्न आई दिनको नाच सकी रात्रिको नाच प्रारम्भको तयारीमा लागेका अवस्थामा भतीजा योग नरेन्द्र मल्ललाई उठाउन राजा प्रताप मल्ल कोठाभित्र पस्दा राजा योगनरेन्द्र मल्ल साक्षात् हरिसिद्धिको रूप भै खड्ग खप्पर हातमा ली रक्तपानसमेत गऱ्याको मुखमा रक्तमय भै सुकला भैरह्या को प्रताप मल्लले देखी मनले नमस्कार गरी 'क्षमस्व' भनी

बाहिर आउनुभयो । यस दिनदेखि यी राजा प्रताप मल्ले भतीजा योगनरेन्द्रबाट आफूलाई ढोकाउनसमेत बन्द गरी हरिसिद्धिको अवतार ठहराई बरु आफैले उनलाई अंतस्करणले ढोग दिने गऱ्या ।

यी राजा हरिसिद्धिका अवतार हुनाले हरिसिद्धिको बाजा मुखले बजाई दुपातका ज्यापुहरू नचाउन्या गरी हरिसिद्धिको नाच नौलो बनाया । यी नाच बनाउंदाका देवता अझतक न्हुला देवता छँदैछन् । नाच भने यी राजाका पालासम्म चलि रह्यो ।

फेरि यी राजाले तुलजा लगी कीर्तिपुरका क्वाठवो (?) देवालयमा दक्षिणपट्टि अघिको गणेश मूर्ति तल सारी तुलजा स्थापना गरी ठूलो घण्ट चढाई त्रिशुली कीं (?) बनाई राख्याका त्रिशूली वीं (?) अझ तक छँदैछन् ।

फेरि तुलजा ललितपुरमा फर्काई ल्यायापछि घण्ट त्यहीं रह्यो । सो घण्ट अति राम्रो हुनाले राजा पैताप मल्लले चोरी ल्याउने इरादा गरेका थाहा पाई राजाले रातारात घण्ट बोकाई सबैका माननीय मछीन्द्रनाथका देवालयमा ल्याएपछि झुंडाइदियाको अद्यापि छँदैछ ।

फेरि यी राजाले भक्तपुरका बिसक्याट हेर्न बोलाउन पठाएन भनी रिसानी भै आफ्नू दुइ भाजु रथारोहण गरी बिसक्याटको नक्सा ली लिंग ढाली प्रतिवर्ष भेष संक्रान्तिका दिन क्वाथछें बालकुमारीमा रात्रिभर अनेक विधि पूजा गरी मांसाहुति शिलाहुति यज्ञ गरी अमावस्याका दिन घोडा यात्रा गरी बालकुमारी रथारोहण गरी रथ यात्रा चलाया । यिनै दिनमा सिन्कोबहील भद्रकालीमा पनि विधान पूजा यज्ञ गरी रथारोहण गरी यात्रा चलाया ।

फेरि बज्रवाराहीमा पनि चैत्र शुल्ल चतुर्दशीका दिन जात्रा चलाया । बज्रवाराहीको अघिको जात्रा कार्तिक शुक्ल अष्टमीका दिन र बालकुमारीमा पनि माघ शुक्ल पूर्णिमामा हुने हुनाले दुवै कालमा अद्यापि यात्रा चलेकै छ ।

फेरि यी राजाले गुरुसित मत गरी देगुतलेका अगाडि ढुंगाको खम्बा बनाई आफनू सब परिवारको मूर्ति (सालिक) राखी बहुतै भक्ति नियम गरी विद्यानंदोपाध्यायबाट प्रतिष्ठा गराई जगाई बसाया ।

यी राजा धर्मखम्ब प्रत्यक्ष हुनाले भक्तपुरका राजाले सहन नसकी यिनको सन्तानशून्य गराउन्या उपायका लागि दर्वारका दक्षिणपट्टि कोटि लिंग स्थापना गरी देवालय बनाईदिया । (भाग ५ बाट)।

फेरि यी राजा चांगुनारायण दर्शन गर्न जांदा यिनै भक्तपुरका राजाले खाने वस्तुमा विष मिलाई सौगात दिइपठायाकोले सो खाना खाई विषको डाह भयापछि थाहा पाई काजीहरूलाई राजाले भने-हे काजीहरू हो, भक्तपुरका राजाले मेरो डाह गरी आज खानमा समेत विष पारी खुआयाछन् । विषको शान्ति गरी म बाँच्न सक्छु । तर आफ्ना द्रोही रहेका स्थानमा बस्नु छैन तसर्थ म भन्छु-अब मेरो प्राण मुक्त हुने बला भयो । चांडो शंखमूल पुऱ्याफ भनी तमाखु खांदै मूर्छित भया र काजीहरूले चलाकीसाथ पाल्कीमा राखी २ घडीभित्रै शंखमूल पुऱ्यई दिया र राजा शंखमूलमा शान्त हुनु भो । राजा शंखमूलमा शान्त हुंदा बखत घोडा चढी दौडाई राजा हरिसिद्धितर्फ गयाको सबै दुनियांले पनि देखेछन् । यी राजा यस्ता प्रतापी थिया ।

अस्य पुत्र महीन्द्र मल्ल वर्ष ३.......यी बालख गर्भ रहंदा यिनका महारानी बहुलाइन् भनी धपाई दुनियाले अरू राजा गरिराख्या । यी रानी गोर्खामा सरण जाई त्यहीं पुत्र जन्म्या र महीन्द्र मल्ल नाम गऱ्या ।

दुनियांले गरेका राजा इन्द्र मल्ल वर्ष २ । त्यसपछि गोर्खाका राजाले यी ललितपुरका काजी भारादारकन आफ्नु राजपुत्र धपाई अरू राजा गरी भोग गर्न्या पापी हो । लडाई गर्छौं भने तैयार हो भनी ठूलो धम्की दिइपठाउंदा काबू भै फेरि महीन्द्र मल्ल राजा ल्याई गादीमा बसाया ।

यी राजाका महतारी कान्तिपुरमा रहंदा मिलू नाम गऱ्याका काजीले अनेक खेल गरी यिनै रानी मछीन्द्रनाथका देवालयमा ल्याई प्रजाहरूलाई चिनाई प्रजाहरूसमेत भै रानी दर्वारमा पुऱ्याइदिया । तर पुत्रसंग भेट्न पायानन् र मिलू काजीले नबहिलटोलका प्रजा हातमा लिई साइत हुनासाथ यिनले दर्वारबाट बाहिर आउने सनद गरी राजा महतारीका कावमा राखिदी हुकुम चलाया । ती महीन्द्र मल्ल राजाको भोग पनि धेरै वर्ष नभई शान्त भै जांदा सन्तानशून्य भै मूलमा जन्म भयाकाले धपाई ल्याई पाटनमा रह्याका भक्तपुरका राजाका पुत्र योगप्रकाश मल्लकन राजा गराया ।

योगप्रकाश मल्ल राजा पनि बिफरले नेपाल संवत् ८४३ मा शान्त भै गया ।

यसपछि छोरीतिरका सन्तानलाई राजा गराया । यी राजाको नाम विष्णु मल्ल । राज्य वर्ष १९ । यी राजाले चोभार गणेशको देवालय बनाई धेरै ब्राह्मणहरूकन बिर्ता दी प्रतिष्ठा गऱ्या । जयप्रकाश मल्ल त्यहां आई विष्णु मल्ल राजाका सन्तान लेखाई फर्कंदा ललितपुरको कोट २ मा आगो हाली जलाई गया र ललितपुरका प्रजा काजीहरूले गोर्खाली राजा पृथ्वीनारायण शाहकन नुआकोठ तिमीहरूलेजफदी गरिलेऊ । हामी राजा

जयप्रकाश मल्ललाई मदत दिंदैनौ भनी चिट्ठी लेखिपठाउंदा गोर्खाली राजाले चढँई गऱ्या । यसमा राजा जयप्रकाश बहुतै चुकेका हुन् ।

फेरि यी राजाले धर्मको सम्मान गरी श्री पशुपतिनाथमा चांदीका जलहरी चढाया । कुंभेश्वरमा सुनको नन्दी मूर्ति बसाया । शंखमूल जाने बाटोमा पाटी बनाई लक्ष्मीनारायणको मूर्ति स्थापना गऱ्या । फेरि दरवारका दक्षिणपट्टि विष्णु प्रतिष्ठा गरी ठूलो देवालय बनाई नित्यार्चन गुठी राखिदिया । आफ्ना सन्तान शून्य भयाकाले कान्तिपुरका जयजगत् मल्ल राजाका पुत्र राज्य प्रकाश मल्लकन राजा गरी आफू शान्त भया ।

राजा राज्यप्रकाश मल्ल वर्ष १५ । यी राजा बडो भक्तजन शान्त मूर्ति हुनाले प्रधानहरूले राजाका नेत्र बन्द गरिदिया । यी राजाले शालिग्राम धेरै संग्रह गऱ्या । लक्ष्मी नारायणको मूर्ति स्थापना गऱ्या । फेरि दर्वारका दक्षिणपट्टि विष्णु मूर्ति प्रतिष्ठा गरी ठूलो देवालय बनाई नित्यार्चनगुठी राखिदिया । यी राजाले प्रधान काजीहरूको मन नपरी शंमूलमा श्राद्ध गर्न गयाका बखत त्यहींबाट धपाइदिया । यी राज्यप्रकाश मल्ल राजाका पालामा बुबहालको सोध नाम गऱ्याका बांडाले यप्पा वैष्णवीमा कोही बंगाली ब्राह्मणहरूले राजाको जय निमित्त मोहनी साधना गरेको छ प्रधानहरूका खेलले जफ्दी गरी लुटी ल्याई बंगालीहरूलाई समेत भगाया । सबैकन होम गरी नबाहा बड्यो भनी नाम चलाई आफ्आफैं देवता भई मछीन्द्रनाथका पाउको छत्रसमेत लुटी ल्याई आफूले ल्याई सजीव बोल्न्या देवता भनाई सबै देवताको पूजा आफैले ली बडो भोज गरी बस्थ्या । यस्ता बेलामा अब ता अनर्थ भो भनी राजा राज्यप्रकाश मल्लले रोई बाहिर आउंदा कोही एक खालाच भन्याका ज्यापुले राजाकन बुझाई आफू यिनीहरूका पास गै नबोली सिंबुका पीकडो भनी यिनीहरूका देवालय हेरी लुच्चा ठहराई राजासित विनती गर्न आया र राजा राज्यप्रकाश मल्लले पूजा गर्छु भन्या छल गरी दर्वारमा बोलाईचौकी राखी बाटामा लगी दर्वारभित्र पुग्नेबित्तिकै यी सबैकन बांधी देवता भैरहेका बांडाहरू सबै यमलोक पठाइदिया । यी राजा राज्य प्रकाश मल्ल शान्त भयापछि प्रधानहरूले भक्तपुरका राजा रणजित् मल्लकन राज्य गरिराखेका वर्ष १ । रणजित् मल्लकन राजा गरिराख्दा कान्तिपुरका राजा जयप्रकाशले हाम्रा भाइ राज्यप्रकाश मल्लका राज्यमा अरू राजा गऱ्याको क्या कारण हो ? यो मलाई आयाको राज्य हो भनी ठूलो धम्की दिपठाया ।

केही दिनपछि रणजित् मल्ल शंखमूलमा श्राद्ध गर्न जांदा त्यहांबाट धपाई जयप्रकाशकन राजा गऱ्या । वर्ष १।२ मैह्ना ।

यी राजाले हुकुम चलायाको देखी डर मानी प्रधानहरूले टेकु दोभानमा जांदाहुंदि त्यहींबाट धपाई दीया । प्रधानहरूले विष्णु मल्लका छोरी नातापट्टिका विश्वजित् मल्ललाई राजा तुल्याई राख्या वर्ष ४ । यी विश्वजित् मल्ल राजाले धालछेका कालिदास प्रधानकी छोरी स्वास्नी तुल्याया भनी प्रधानहरू हूल उठी आउँदा राजा भागी तुलजाभित्र लुकिराख्याका बखतमा बह्नी (?) का लक्ष्मीनाथ उपाध्यायले छल गरी गाबाहालका ब्राह्मणहरू पनि हूलमा आया देउतलेमा पाउ लाग्नु हवस् भनी फुल्याई बाहिर ल्याई देउतले जाने बाटोमा कालिदास प्रधानका छोरा देवीदास प्रधान दबाई राख्याको रह्या छ र यी प्रधानहरूले त्यहीं देउतले जाने बाटोमा भऱ्याङ मनि राजा विश्वजित् मल्लकन मारिदिया ।

फेरि प्रधानहरू नुआकोट गै पृथ्वीनारायण शाहसित दलमर्दन शाह मागी ल्याई राजा तुल्याया । यी दलमर्दन शाहले ४ वर्ष राज्य चलायापछि यी राजा गोर्खाका हुनाले प्रधानहरूले गोर्खाका राजाले हामीलाई भलो गर्न्या छैन भन्ने विचार गरी दलमर्दन शाहलाई पनि धपाइदिया ।

त्यसपछि अर्कै कोही १ ठकुरी तेजनरसिंह मल्लकन राजा तुल्याया । यी राजाको भोग वर्ष ३।११ मैह्ना । यी राजाका पालामा गोर्खाका पृथ्वीनारायण शाह नेपाल प्रवेश भै प्रधानकन हुल्याहा हुन् भनी सबैकन बांधी मारी निस्कटंक राज्य गर्दा भया । तेजनरसिंह मल्ल भागी भक्तपुरमा गया । प्रधानहरू बांधी सिपाहीहरूले घेरा गरिराख्याका बेलामा एक बाहालका काजी खड्गधर प्रधान १ सबैका सामुन्ने कम्पनीका घेरा नाघी कुदी टेकु दोभानतिर दगुऱ्या । कसैले फेला पार्न सक्यानन् । बांकी प्रधान सबै यमराजका शहर देखाउन पठाया । यिनीहरूका मैजू पनि राजा बक्साई सती गया ।

यो ललितपुर (पाटन) का परापूर्व । राजाको महिमा शुभम् ।

*अब कान्तिपुरको महिमा*

लक्ष्मीनरसिंहले राज्य गरेका समयमा लगन यात्राका दिन कोही एक बिसेतले जात्रा हेर्न जांदा ठूला २ अग्ला २ मानिस ४ जना देखियो र यी ता सामान्य मानिस होइनन्, कहां जाने रह्याछन् भन्या विचार गरी जात्रा सकी यिनीहरूका पछिपछि लागी कान्तिपुरतर्फ जांदा काठमाडौंका डबलीमा नाच हेर्न गया । सो नाच हेरी बस्दा सिकर्मी बिसेतले पहिल्याई छायां देखी वृक्ष ठहराई लस्करभित्र डोरीले घेरा पारी राख्यो । नाच सकेपछि सबै मानिस आफ्ना आफ्ना घर गया । यी चार वृक्षहरू जान सक्यानन् र सत्य कबूल गराई छाडिदिया र वृक्ष चारैको नाम राखी हांगा मात्र काटी काठमाडौं नाम राखी

काठैलेमात्र पुऱ्याई एक सत्तल बनाइदिया । यो सत्तल बनाउंदा वृक्षहरूको कबोल 'प्रतिष्ठा नगरेसम्म बसौंला' भन्यो र सत्तल बनाउने पनि नून एकै भाउ भयामा प्रतिष्ठा गरुंला भन्या कबोल गऱ्याका हुनाले आजतक प्रतिष्ठा भयाको छैन । वर्ष वर्षमा नून सस्तो, तेल महंगो, कहिले तेल सस्तो, नून महंगो भनी सुनाउनुपर्छ । काठलेमात्र पुऱ्याई ईंट माटा नराखी बनायाको हुनाले काठमाडौं भनी नाम राखिदिया । यो सत्तल बनायाको सम्वत् ७१५ सालमा हो ।

फेरि यी राजाले आफ्ना कष्ट कालमा बस्याको सम्झी देवपत्तनका रजक पुत्री पुरुचा फिकुचाकन डोली दी लिन पठाया । डोलीमा बस्ने हाम्रो जातको रीत छैन भनी उसै हिँडी आई राजासंग भेट गरी जलबन्धन भोजन गराया । राजासित मृत्युकाल समयमा सबै जहानकन टोली मागी गुठी राखिदिया । फेरि धेरै खेत मागी गुठी राखी रानीगुठी नामले प्रख्यात गराया ।

यी राजाका काजीका कोही छोरीपट्टिको नाम नाता भाई भीममल्ल भन्या रहेछन् । तिनले राजाको बहुतै सोझो गरी शहरमा महाजन राखी बत्तीस कोठी तुल्याई भोटान्तरमा महाजन पठाई आफूसमेत गै ह्लासामा सबै बेपार गराई चांदीका धारा गराई नेपालमा ल्याया । नेपालका महाजनहरूको भोटान्तरमा बस्याको अपुताली ह्लासा बक्साई ल्याउन्या र नेवारहरूको दण्ड आफ्नु गराई आधा कुती केरुङ्समेत आफ्ना नेपालको गरी राख्यापछि ती भीम मल्ल काजी भोटमा रहंदा कोही दुर्जनले राजाकन श्री पशुपतिका पुजारी स्वामी नित्यानन्द पशुपतिनाथलाई ढोग दिंदैनन् भनी सुनाइदिया र राजा आफै आई हेर्न जांदा स्वामीले अर्थ बुझी केही नबोली नित्य पूजा सकी बाहीर आई चण्डेश्वरी पूजा गरी आई कामदेवकन ढोगदिया र कामदेवका पादुका फुटी खस्या । फेरि दक्षिण दर्वाजाभित्रका शिलामा ढोग दिया र ती पनि दुइ दुक्रा गरी फुटिगया । फेरि भित्र गै हरहर भनी श्री पशुपतिनाथकन ढोग दिन निमित्त आउंदा राजाले स्वामीका पाउ समाती ढोग दी बहुतै विनती गरी स्वामीकन बुझाई राजा फर्की आया । यस दिनदेखि यी स्वामीले नित्य पूजा सकी बाहिर आई नैर्ऋत्यकोणमा खडा भै पकडो ३ भनी तीन फेरा नित्य भन्या गऱ्या । केही कालपछि यी स्वामी शून्य समाधि भैगया ।

फेरि भीम मल्ल काजी भोटबाट फर्की राजाको सोझो गरी धेरै सुवर्ण धन ल्याई भक्तपुरमा बसी श्री पशुपतिनाथको दर्शन गर्न जांदा धर्मशिला फुटिरहेको देखी तामापत्र बनाई छोपिदिया । कान्तिपुरमा आउनकन साइत नभै उसै रहंदा भक्तपुरका दुर्जनले भीम मल्ले धेरै धन ल्याई राख्याको धन पच गरूंला भन्या दुर्मन गरी, राजा प्रताप मल्ललाई

भीम मलल्ले आफै राजा हुनालाई भोटको मानिस सबै ल्याई आफ्नु गरी धेरै धनसमेत ल्याई नेपालमा लुकाइराखेका छन् । यी भीम मल्ल कदापि आफ्ना हुन्यां छैनन् भनी पत्र पठाया छ र राजा प्रताप मल्लले भीम मल्ल काजीलाई गुप्तै गरी मारिदिया । यसै दिनमा एक कोही ज्यापूले यी भीम मल्लकाजी घोडा चढी कान्तिपुरदेखि आयाका बालाज्यूमा भेट हुंदा भीम मल्लले ज्यापूलाई डाकी गुप्तैसंग तिमी दर्वार गै हाम्रा दाज्यू प्रताप मल्ललाई भेटी गुप्तसंग गरी मेरा सिरानमा ताकियामनि रह्याका बही दी हेर्नु भन्न जा भनी एक मोहर ज्यालासमेत दी आफू दगुर्दै नुआकोट तरफ आयाछन् । यो ज्यापू दर्वारमा आई राजा भेटी सुनाएछ र राजा आश्चर्य भै बही ली हेर्दा पछि अर्थ बुझी हाय भीम मल्ल २ भनी बहुतै शोक गरी यी काजीका नाममा एटा टोलमा शिव स्थापना गरी धेरै गुठी राखी नित्यार्चन गराइदिया । यी भीम मल्ल काजीका स्वास्नी सती जांदा यस दर्वारमा कहिल्यै पनि विवेक नहोस् भनी शाप गरी गयिन् ।

यी प्रताप मल्ल राजाले बाबा बहुलाया भनी राजा लक्ष्मी नरसिंहकन बन्धन गराई राख्या । भीम मल्ल काजी भोटमा रहंदा यी राजा बन्धनमा पऱ्याका हुन् । पछि भीम मल्ल मऱ्याका कुरा बन्धनैमा सुनी त्यसै सन्तापले नेपाल सम्वत् ७१९ सालमा बन्धनैमा राजा लक्ष्मीनरसिंह शान्त भै गया ।

प्रताप मल्ल वर्ष ६१ । यी राजाले आफ्ना बाबा बन्धनमा राख्दा पुत्रकन तुलजाको मन्त्र दिनालाई डाक्दा कोच भडेलले बाबा र छोरा मुख देख्यापछि माया लागी हजूरबाट बन्धन फोइदिनुपर्ला । सोपछि बन्धन रीसले ईख गरी हजूरलाई बन्धन गर्नन् भनिदिया र राजा प्रताप मल्ल भेट गर्न पनि नजांदा गोल्फूमा मन्त्र कही लक्ष्मीनरसिंह मल्ल शान्त भै गया । पछि तुलजा जगाउन्या मन्त्र पाउन नसकी सबै दुनियांका आगम खोली हेर्दा पनि पाइएन र यी राजाले मन्त्रका कामनार्थ धेरै पुरश्चरण गर्दा पनि मन्त्र पाउन सक्यानन् ।

यी राजा बडो पुरुषार्थी, समर्थवान्, प्रतापी, महाज्ञानी, प्रतिष्ठावान्, अत्यन्त ठूला हुनाले तिरहुत देशदेखि दुइ रानी ल्याई बिहा गऱ्या ।

यी राजाले ठकुरी राजाका पालादेखि अड्केको लोकेश्वरको रथयात्रा प्रतिवर्ष चलाया । देशी पर्देशी पण्डितहरू बटुलाई प्रन्ध्र जातका अक्षर सिकाई ठूलो पीठमा देवताका स्तोत्र बनाई शिलापत्रका लेखी स्थापना गराया । सो अद्यापि छँदैछ ।

फेरि कविन्द्र शास्त्रपार हुनाले शास्त्र क्रम गरी ४००००००० चार कोटि धन जम्मा गरी दर्वारभित्र बास्तु चक्रका प्रमाणले पृथ्वी तलमा गाडी कोटि १ धजी गरी चार ध्वजा खडा गरी जगम गरी मोहन चोक, सुन्दर चोक बनाया । फेरि भूत प्रेत पिशाचादि डाकिनी

कोटक अगम इनारादि अनेक उपद्रव भय शान्ति निमित्तका ती ध्वजामा हनूमान्नृत्य, गरुडसाधना गरी अगै दृष्टिभागमा आदि स्थलका हनूमान्का मूर्ति मूल दरवाजामा स्थापना गरी हनूमान्को ढोका कहलाई सबै भय निवारण क्रमले ब्रजाद्ध स्थापना गरी सव भय निवारण गरिदिया ।

फेरि त्यसको माथि नै कृपापूर्ण निमित्त तीन तला छप्पर गरी देवालय बनाई पञ्चमुखी हनूमान् आगम गरी बसाया । फेरि नृसिंह नृत्यनाथ २ तामसगण गरी सर्व दृष्टि हुन्या गरी लक्षणक्रमले बनाई नासल चोक नाम गरी दर्वारमा साधना गरी बसाया । फेरि मोहन चोकमा अनेक देवताका मूर्तिकन बसाया । फेरि काष्ठमण्डपसंधि प्राणपीन श्रोतगाकार (?) देवालयभित्रका नित्यनाथका ध्यान निकासा सुन्दर मूर्ति बनाई आफैले कविता बनाई शिलामा लेखी कवीन्द्रपुर नामले ठूलो सत्तल बनाई मधुनासल देव कहलाई बसाया । फेरि पंचलिंगेश्वर भैरवेश्वरको अघिको लामो लिङ्ग छोटो भूमिसम्मको मात्र गरिदिया । "महादेवकन हिंसा गर्छन् भनी कोही विदेशी आयामा ठट्टा गर्नन् भनी भनी" जलहरीले छोप्नलाइदिया । फेरि भण्डारखाल पनि यन्त्र-कर्मयुक्त गरी बनाई बसाई ठूलो एक तलाउ बनाई बीच जलविषे भुजंगसाक्षी नारायण बनाई राख्नेमा इच्छा गरी दिने आदि जलशयन नीलकण्ठ नारायणछेउ गै बक्साउँदा मूर्ति बनाउन प्रभुको आज्ञा भएन र विशालनगर प्राचीन ज्ञानेश्वर संधिका जलमूर्ति उठाई लगी तलाउका वीचमा बसाया । फेरि नारायण उत्तम शक्ति वर्द्धमान निमित्त बूढानीलकण्ठको जल ल्याई राख्ने इच्छाले नीलकण्ठ प्रभुकन धेरै विनती गरी बक्साई कुलो खनी जल ल्याउंदा रानीवन संधि पुग्दा कुलो चलेन र महाकष्ट हुंदा राजाले दुःख पाई धेरै विनती गरी वर्ष दिनसम्म त्यहीं बसी जलसंगमात्र दर्वार जाउंला । जल लैजान सकिन भने राज्य छाडी फकीर भै जाउंला भनी प्रतिज्ञा गरी यी पात्र सबै आदि ताछी (?) गरी धेरै जिमिन माटो बोकाई पुऱ्याई थापनाजोल भनी प्रख्यात गरी पानी ल्याई राजाले प्रारम्भ दिनमा जलसंग आफू आई पोखरीमा पानी राखी जलशयन नारायण ल्यायाका स्थानसंधि पाटका पोखरीमा ठूलो भयंकर मूर्ति शिलाका पोखरी रह्याका छन् भनी राजाले सुनी आफै कालिगडहरूका साथ गै उठाई हेर्छन् ता बडो ध्यानसंयुक्त गरी भीम भैरवमूर्ति देखी राजा खुशी भै सबै प्रजाहरूकन सुनाया कि हे प्रजा हो । द्वापर युगांतमा नेपाल सबै तलाउ भैरह्याको बखत दोलखादेखि आई ढुंगामा बसी तलाउमा खेली जल विहार गर्न्या भीमसेन यिनै हुन् भनी घिस्स्याई ली गै दर्वासंधि पश्चिम दिशामा यथाक्रम विधि गरी बसाया , यी थल काम ध्यानसंयुक्त भैरव बडा प्रत्यक्ष हुन् ।

फेरि विशालनगरको प्राचीन साकुल स्थानमा कालीमथन गरिरह्याका ध्यानले युक्त भयाका श्रीकृष्ण मूर्ति माटोले छोपियाको रहेछ र झिकी गरुडसहित भयाका लगी सुन्दरचोकमा राख्या । गरुडले राजालाई धेरै दुःख दिया र नारायणधाराका नारायणसंधि लगी यथक्रमले बसायाको अद्यापि छदैछ ।

यी राजाका पुत्रहरू दुई रानीतर्फ जनही २।२ गरी ४ पुत्र थिए । तिनको नाम पार्थिवेन्द्र मल्ल१, नृपेन्द्र मल्ल २, महीन्द्र मल्ल ३, चक्रवर्तेन्द्र मल्ल ४ । यी चार पुत्रसहित गरी आनन्दपूर्वक रह्याका समयमा दक्षिण देशदेखि ज्ञानानन्द नाम षडान्यासी स्वामी १ आई श्री पशुपतिनाथमा बस्याका छन् भन्या राजाले सुनी राजा आफै गै यी स्वमीसित मत गरी परीक्षा गर्दा श्री पशुपतिनाथका मित्र प्रवेश गराइदिया । यी स्वामीले राजाकन भेद बताई राजा खुशी भै पांचायन पञ्चनेत्र, पंचवक्र संख्य गरी कांचन छत्र बनाई तदुपरि स्वकविता भुजङ्ग लेखी ल्याई स्वामीकन देखाया र स्वामीले अर्का तांडव मन्त्रसहित गरी महाकालोक्त भागमा रथनृत्यलीला प्रसन्नार्थ छत्रोपरि लेखी श्री पशुपतिनाथकन अधीन भयाका छत्र रजना गरी चढाया । अघिका पुजारी रुद्राक्षका जप मालाले छत्र बनाई चडाउदै थिया ।

फेरि यिनै स्वामीले श्री पशुपतिनाथ प्रीत्यर्थ नीलकण्ठ स्नान मेला ल्याई श्री पशुपतिनाथकन अभ्यन्तर दुई वार नीलकण्ठ भावना राखी श्रावण शुक्ल चतुर्दशीका दिन राजा बक्साई पञ्च मतले देव प्रमाण वाक्य गरी देवालय सर्वत्र साधना गरी सुनले बांधी अलंकार प्रक्षालन गरी सबै भडाऱ्या प्रवेश जम्मा गरी नेम क्रियापूर्वक श्री पवित्रारोहण नाम गरी सूत्र संख्या प्रमाण धार्नी ७ सेर १ राखी श्री पशुपतिनाथकन शास्त्रोक्त प्रमाण गरी चढाया । चतुर्थ दिन पर्यन्त कर्म गरी राजाकन पवित्र प्राद् चढाउनू भनी चढाया । फेरि यी स्वामी बडा हुन् भनी यिनकन नित्य स्वकर्म गर्नाकन देवपत्तनमध्ये भूतले क्रियास्थिरासन जयसिद्धि निमित्त घर बनाई मध्ये उंचो आसन बनाइदिया । यी स्वामी त्यही स्थानसंधि स्वतन्त्र मूल पूर्ति उद्धामनाय आवाहन गरी अर्को घर बनाई यथाक्रमले बसाई पशुपतिनाथका पूजा गर्दै थिया ।

यी राजाले स्वामीसित सोधी आफ्ना पुत्रकन राजकुलमा उत्पन्न हुनाले स्वइच्छापूर्णार्थ वर्ष १।१ सम्म राजा गरी आफूले गादी छोडी मूर्तिकन सुनका कवच बनाईकन यथास्थान दी बसाया । तीन पुत्रले नै वर्ष भोग गऱ्यापछि चौथा कान्छा चक्रवर्तेन्द्र मल्ल गादीमा बस्दा अहोरात्रमात्र भोग गरी शून्य भैगया । यी चक्रवर्तेन्द्र राजाका छाप मोहर बनाउंदा यी स्वामीले त्रिकोण, वाणास्त्र, पाश, शर, चाप राखिदियाका

हुनाले राजा शून्य भै गया पनि स्त्रीजनका प्रसूति कालमा कष्ट हुंदा त्यो मोहर पखालेका पानी पिलाइदिया पिलाउनामात्र प्रसूति हुने भयो । यो अद्यापि छंदैछ । यी राजाले कान्छा पुत्र अभाग हुनाले बडो कल्पना गरी यिनका नाममा धेरै खर्च गरी चारदिशामा गमन गोचर जहांसम्म छ त्यहांसम्म बढाई धेरै तीर्थका जल राखी पात्राकारले बनाई नाग शङ्ख फनी राखी प्रतिष्ठा गरी पुत्रकन उद्धार गराया ।

फेरि यी राजाले आफ्ना गुभाजूसित मत गरी बौद्ध मतका इटुबहालको शोभाचन्द्र बनियां ल्याई इंटुबाहाल बनाया । यिनै राजाले सिम्भूका शान्तिकर वज्राचार्यसित मत गरी सिम्भूका देवता बुझाई यहांदेखि पश्चिम दिशामा पछि पछि राजा प्रजाहरूकन मेघ शून्य भै अनावृष्टि हुंदा कष्ट होला भनी जानी अष्टकुल नागहरू आकर्षण गर्दा १ टौदहका कर्कोटकनाग आयानन् र यिनै वज्राचार्यले कुन्द पुष्प २ मन्त्र गरी राजाका हातमा दी भन्या कि हे राजन् ! टौदहका तीरमा गै नाग डाक्नू आयान भने त्यो फूल टौदहमा राखिदिनु र बाटो देखिएला । सोहि बाटो  गरी गै नागकन बुझाई ल्याउनू बुझेन भने बलात्कार पक्री ल्याउनू नागिनीहरूले तिमीलाई केही गर्न सक्न्न्या छैनन् भनी अराई पठाया र राजा गई डाक्दा आयान र फूल राखी बाटो पाई गै नागकन  समाती ल्याया । यी नाग आयाको हुनाले हो । त्यो नाग यी स्थानमा ल्याई अष्ट नागहरू बुझाई मनोमानसित कबोली रक्त-कर्म गरी रक्तको मसी गरी पुस्तक लेखी गुरुगमन विनाश गरी असम्भव ग्रन्थ बनाई शान्तिपुर नाम सप्त कोठा नौ भूतल क्रमशः राखी शान्तिपुर बनाया ।

फेरि यी राजाले सिम्भूका चैत्य प्रसाद एकको शोभा छैन भनी स्वेच्छाले पाश्र्वस्थ युग्म देवालय बनाउंला भन्या इच्छा भयान र राजा कोप भै ६ महीनासम्म केही नखाई सुत्या र राप गरिदियो र सिम्भू काबु भया । यहापछि छ देवालय बनाई केन्द्रपुर नाम राखिदिया ।  यहां पछि अगम आगम बनाई मध्ये भागमा बडो वज्र स्थापना गरी बौद्ध रूपकन जगाया । यस्ता वीर यी राजा हुन् ।

फेरि यी राजाले यौवनावथा पूरणार्थ स्त्री-भोग लक्ष्य योनि क्रिया पुर्‍याउन्या इच्छाले स्त्रीहरू बुझाई खुशी राजी गरी क्रीडा गर्दा ३००० सम्म पुगेपछि एक बाला स्त्रीसंग भोग भै स्त्री मरण भै गयिन् र यी राजाकन बडो पाप भयो भनी श्री पशुपतिनाथमा जाई तीन महीनासम्म बसी कोटि लिङ्ग प्रतिष्ठा गरी मण्डप पारी बाटुला देवालय बनाई देवालयका बाहिर लिङ्ग प्रतिष्ठाप्रतिको आहुति गरी अघि बिग्रेको श्री पशुपतिनाथको गजूर चडाई सबै परिवारकन दक्षिण दर्वाजामा सालीक ताहीं तुलाका चार खम्बा खडा गरी सर्व

द्रव्यले तुलादान गरी तुलखम्बा चार स्थापना गरी चतुर्थ कर्म गर्दा ग्रामका उत्तरपट्टि धेरै गौचर सङ्कल्प गरी मुठी उखेल कहलाई गया ।

फेरि यी राजाले श्री पशुपतिनाथका ढोका आरम्भ कान्तिपुर पर्यन्त लिङ्गाकारका देवालय बनाई शिवस्थापना देवपट्टनमा एक चिलन (चिलिम ?) प्रमाण राखी बनाई स्थापना गर्‍या । फेरि एकै पताका ली श्री पशुपतिनाथका गजूरदेखि बनाई बाडी मोहन चोकका महादेवसम्म बांधी पाताका चढाई पाप छुटाया । फेरि, महाराष्ट्री लम्ब कर्ण भट्टसंग मतो गरी देगुतलेका देवालय अघिभन्दा बहुत उच्चा गरी तीनै छाना सुनको गरी बडो खम्बा खडा गरी आफ्ना परिवार सबैको सालिक राखी प्रत्यक्ष स्थापना गरी बसाया । यिनै वर्षमा चौबाहालका नगलाबसीका नाम गर्‍याको नागले बागमती बढाई आर्यातीर्थ जल थुनी श्री पशुपतिनाथमा निर्माल्य जाने प्वालबाट भित्र जाई श्री पशुपतिनाथका चोकमा जल भरी देवालयभित्रका दर्वाजा बाट भित्र जाई अनेक द्रव्यहरू सबै जम्मा गरी कवचमा जडयाको एकमुखी रुद्राक्ष चोर्न तयार पार्दा श्री पशुपतिनाथका त्रिशूल हल्ल्यो र वासुकी नाग पनि अगाडि गणमा सबै दुनियालाई देखाई फाल हाली नांगलाई मारी एकमुखी रुद्राक्ष जलहरीमा राखिदिया । त्यो रुद्राक्ष परापूर्वमा मोहनसिंहले कवच बनाउंदा वेलामा एक संन्यासी आई श्री पशुपतिनाथका दक्षिण मुखम चढाऊ, भनी दी गयाका हुन् । यहांपछि सबै दुनियांले गै हेर्न जांदा जलमा रगत आयाको देखी ठूलो ठूलो कल्लोल शव्द गरेको पनि सुनियापछि थुनियाको जल सबै कल्लोल शब्द गरी राजेश्वरीका सन्धि यववरालका (?) संधि केसर जस्तो नाग एक रह्याकोले देवपत्तन श्री पशुपतिनाथका वन सबै दुर्गन्ध भै गयाको राजाले खबर सुनी गुरु लम्बकर्ण भट्टले शास्त्रोक्त ठहराई नागगमन बन्ध गरी वासुकी जगाई अघिका देवालय बिग्रेकाले अर्को देवालय बनाई गजूर चडाइदिया । फेरि रात्रीका चार प्रहरमा बजाउन्या एक बाजा बनाई साधना गरी धंपतीनामा नाम गुठी राखी रक्षा गराइदिया । यस दिनदेखि नागभय निवारण भै गया ।

फेरि यी राजाका पालामा पश्चिम कह्नोजदेखि नृसिंह देवता ठाकुर यो नामको रहस्य के हो भन्नृ नृसिंह देवताको मन्त्र पाई पुरश्च।ण गर्दा तीन वर्षपछि नृसिंह प्रत्यक्ष भै 'वरं ब्रूहि' भनी हुकुम हुंदा यिनले दाहिने हात थापी त्वम् मत्करे भव भनी माग्दा नृसिंह आफै जल भै ब्राह्मणका हातमा बस्न गया र त्यस बेलामा यी ब्राह्मणले आफ्ना हातको जलपान गरिदियाकोले स्वतः सिद्धिनृसिंह ठाकुरन नाम प्रख्यात भयाका हुन् । यी ब्राह्मण आई पचली भैरवका आसन गरी बसिरहंदा केही कालपछि महाकाल संहिता आदि ग्रन्थ हेरी श्लेष्मान्तक वनमा श्री गुह्येश्वरी स्थान खोजी खोजी हेर्दा खड्गी, तेली दुवैका अङ्ग स्वभाव

हेरी विचार गरी त्यही कुण्ड ईश्वरी स्थान खोजी स्थान ठहराई पुरश्चरण गर्दा त्यही कुण्डदेखि ज्योति उठ्यो र खुशी भै राजासङ्ग मतो गरी पीठ जगाउन निमित्त प्रजाहरू ल्याई खनाउंदा धेरै प्रत्यक्ष भै गया र अगाध अगम कुण्ड हुनाले यस्तो प्रकाश गरिराख्ने या होइन भनी बडो यत्न गरी लोहाका थाम दलीन बसाई अष्टदल पद्माकार यन्त्राकार भैरवसहित बनाई कलशाकारले छोपी स्थापना गरी श्लेष्मान्तक बनाई नवदुर्गागण बलिदान निमित्त नृसिंह, क्षेत्रपाल भैरव स्थापना गरी पर्खाल बनाई बाहिर खम्बामा पनि चौघडा बनाई खम्बामा सिंह सालीक राखी आवरण देवताहरू सबै यथाक्रमले स्थापना गरी श्री गुह्येश्वरी महामाकन प्रकाश गराया । यी नृसिंह ठाकुर देवीभक्त हुनाले सबै राजा प्रजाकन रक्षा गरौंला भनिरहंदा बखतमा देवीको आज्ञा भयो । हे नृसिंह ! नेपाल दक्षिण दिशा दक्षिण मसान गऱ्याका १ मेरो पीठ छ त्यहां बांडाहरूले खल्बल्याई महा भयङ्कर भै अगम भै रह्या । त्यहां तिमी जाई नृसिंह भैरव जगाई चार वर्णकन रक्षा गर भन्ने देवीका आज्ञानुसार गरी अभ्यन्तर मन्त्रले नवदुर्गा फुलचोकका दक्षिण कालीगण सबै आवाहन गरी नृसिंह भैरव जगाई साधन जगाई स्थापना गरिदिया । त्यहांउप्रान्त बांडाहरूका पूजा विधान गर्न सकेन र हमगु (?) वज्रयोगिनीमा जाई आफ्ना स्वकर्म चलाया । यस दिनदेखि दक्षिण ।

काली प्रकाश भयाका हुन् । फेरि ठाकुरले फुलचोकका पीठ पनि अगम भै रह्याकोले देवीछेउ धेरै भक्ति गरी विनती गरी बुझाई सदासर्वदा गमन गराया । नेपाल सम्वत् ७७४ सालमा श्री गुह्येश्वरीसित बिदा मागी नृसिंह ठाकुर काशी गई प्राणायाम गरी शून्य समाधिमा गया ।

यी राजाले लम्वकर्ण भट्ट नृसिंह ठाकुरका मन्त्रका बलले अघि लोप भैरह्याका हरिसिद्धिको नृत्य प्रकाश गर्नालाई विधान गर्दा गर्न सक्यानन् र ललितपुर गाबाहालका विश्वनाथ उपाध्यायलाई समर्थवान् सम्झी यिनीकन बोलाई भारा दिन्या अधिकार हो भनी ठहराई भारा अधिकार गरी सूक्ष्म प्रमाण ली यथास्थिति गरी देवीका नाच जगाया ।

फेरि यी राजाले जामन गुभाजुसंग मत गरी जामा नाम गरी इनार बनाई साधना गरी काल-कालमा मेघ-शून्य भै जल वृष्टि नहुंदा इनार चलाउंदा बर्सात भै जान्या साधना गरी सो कूप अघिपछि नहेर्नू भनेका छन् ।

यी राजाले हरिसिद्धि बडा ठूला देवता हुन् भनी भक्तिपूर्वक सेवा गरी फूलचोकका देवीले पत्थर ५ दी पठाईकन कूप बनाई सो पत्थर ५ राखिदिया र यी कूप वर्षा नहुंदा

चलाइदिया वर्षा हुन्छ भनी दिपठायाका हुन् । यी राजाले हरिसिद्धिमा अनेक द्रव्य बस्तु पनि चढायाका छन् ।

फेरि यी राजाले गुह्येश्वरीका अग्र कारणका तेली खड्गी हुन् भनी देवीका सुसारे गरी राखिदिया । फेरि राजाले जामन गुभाजु, लम्बकर्ण यी साथ गरी नेपालका पीठमा जाई देवीहरूकन जगाई अनेक चित्र-विचित्र तमाशा गरी सुखभोग गरिरहंदा एक दिन रात्रिविषे फिर्न जांदा डाकिनीहरू सबै निमीपीठमा पूजा गर्न आयाको देख्या र आज ता घण्टाकर्ण चतुर्दशी भनी राजाले आफ्ना मन्त्रबलले सबै डाकिनी समाती फजिती गर्न्या विचारले शहर घुमाई मन्त्रसूत्रले बांधी दिग्बन्ध गरी देश अगम डाकिनी मन्त्र नाश कर्म गरी राखी तीनै जना फर्की आया । भोलिपल्ट हेर्न जांदा यी डाकिनीहरू सबै देशभित्र जान नसकी चारै दिशामा लोटी मुखमात्र ढाकी रह्याका राजाले देख्या र त्यस बखत आफ्ना पुरोहित सहोदर काजी भारदारहरू अनेक जाति छोटा-बडाका स्वास्नीहरू सबै भै असंख्य डाकिनी जम्मादेखि यो अम्भव कर्म हुन लाग्यो भनी चारै दिशाका पञ्च सूत्र झिकिदियापछि डाकिनीहरू स्वस्थानमा गया ।

फेरि एक दिन फिर्न जांदा ललितपुरका एक घरभित्र बांडा जम्मा भै चचा गाई भोज खाइरहेका बेलामा राजाले तमाशा गर्ने विचार गरी घरभित्र मन्त्र प्रयोग गर्दा अदर भित्रका बांडाहरू सबै रोया । फेरि छिनैमा हांसी छिनमा कल्लोह गरी रुने, फेरि छिनैमा धोती फरिया फुकाली नाच्न लाग्या । यस्ता तरहसंग २ घडीसम्म तमाशा हेरी फेरि आफै शान्ति गरी आया ।

यी राजा बहुत सोची अनेक चरित्र गरी अनेक स्थानमा जाई धेरै धर्मकर्म गरिरहन्या राजा हुन् ।

नेपालमा ४ गणेश वडा प्रत्यक्ष हुन् भन्नाले सो जगाएका गणेश कान्तिपुरका श्वेत विनायक १, चावहिलका रक्त विनायक, भक्तपुरका सूर्य विनायक १, ललितपुरका चन्द्र विनायक १-यी चार मूल आदि गणेश हुन् भनी जगाया ।

फेरि राजाले कान्तिपुरका भीमसेनका दुइ मूर्ति बुझाई यक्षकर्मले बाटोमा पादुकापिछे एक-एक हांस, टोलपिच्छे एक-एक बोका, दोबाटापिछे एक-एक रांगा, बली दी दर्वारसम्म ल्याई द्रौपदीका मूर्ति बनाई जामना गुभाजुबाट जीवदान न्यास मूर्ति गराई न्यास मूर्तिले कन्यादान गराई अघिका २ भीमसेनका मूर्ति मध्य भागमा यथाक्रमले राखी त्यही विधिले मार्ग-क्रम गरी सो स्थान पु-याया , यस दिनदेखि द्रौपदी मध्यमा रहंदा

भीमसेनका उपद्रव शांति भै गया । अघि कोही कारणले २ भिमसेन मूर्ति भयाको १ तामस मूर्ति, १ शान्तमूर्ति हुन् ।

फेरि यी राजाले अघि गङ्गा रानीले सती जांदा स्त्रीहरूकन सारा घर सपारिदिन्या मर्यादा गरी कान्तिपुरका लगायत स्वरमा चलाइदियाका अझतक छँदैछ ।

फेरि यी राजाले श्री पशुपतिनाथका देवालयभित्रका अघि-अघिका तामाका बसाहा पूरानू भयो भनी चाँदीका ढलवटका बसाहा बनाई जीवन्यास गरी राखिदिया । केही दिनपछि सो बसाहाले देवपत्तनका लागपातभरमा ।रात्रीविषे प्रजाहरूको बाली सबै खाई त्रास गराया र यो बसाहा ता उपद्रव भयो भनी ठहराई भंडारमाथि राखिदियाको अझतक छँदैछ । फेरि तामाका बसाहालाई राखिदिया । यी राजा यस्ता विवेकी राजा हुन् ।

फेरि ललितपुरका योगनरेन्द्र राजाले कुम्भेश्वरका देवालय बनाई कोट्याहुति होम गर्दा यी प्रताप मल्ल राजा बडो काल सर्प भै हेर्न जांदा विश्वनाथ उपाध्यायले समाती पूर्णाहुति गरी सर्पाहुति गर्ने विचारले स्तम्भनास्त्र गरी सिह्रानमनि राखिदिया । यो खबर नामन गुभाजुले थाहा पाई भुटेश्वर उठाउने अनेक विधान गर्दा भुटेश्वर उठेनन् बोलीमात्र सुनाया । एक फेरा बल्ल बल्ल बचाई दी ल्याया । अब फेरि उस्तै काम गऱ्या, यी राजा कत्ति गरे पनि नचेत्न्या हुन् । तसर्थ म ता आउंदिन । तिमी सक्छौ भने बचाउ भनिदिया । जामन गुभाजुले अब ता भएन भनी आफै नै अवसर हेरी बसी पूर्णाहुति होम गरी सर्पाहुति होम गर्नालाई सुरामा राखी तयार हुँदा जामन गुभाजू गरुड भै मण्डपभित्र पसी सर्पकन समाती बचाई ली गया ।

फेरि यिनै सालमा १२ वर्षको हरिसिद्धिको नाच उठाई कान्तिपुरका दर्वारमा नचाउन लग्या र सो नाच भैरह्याका वेलामा रात्रिविषेका नाचमा कसैले थाहा नपाई रूप फेरी राजा नाच हेर्न कन जांदा राजाले देवीसित प्रति भक्ति गऱ्याका हुनाले यी राजाकन छल्न निमित्त हिटी चोकका डबलीमा यिनी हरिसिद्धि देवीहरू तीनै मनुष्य सुन्दर रूप मै नाच हेरिरह्याका राजाले देखी राजाले चिन्न नसकी राजा कामी हुनाले मोहित भै यिनीहरूसित हातपात गर्न गया र यी देवीहरूले राजाका हात मिाती अफाली २ दिंदा पनि फेरि फेरि हातपात गर्न गया र यिनै राजाका हात समाती आफ्ना छातीमा भोग लियाका रक्त पऱ्याका छुवाई देखाई आफूहरू पर सरी गया । फेरि २ मोहमा परि चिन्न नसकी हातपात गर्न लाग्या र यी देवीहरू कोप भै राजाकन सुनाई भनिदिया-हे राजन् ! तिम्रो राज्य भोग यत्तिकै भयो । तिमी अति छिनार काम गर्दा रह्याछौ-भनी राजाकन गल गहालाई भूमिमा बसलिदी आफू तीन जना अन्तर्धान भै गया । यी राजा त्यहीं अचेत भै भूमिमा लोटी रगत छादी बसेका

कोही मानिसले देखी बोकी दरवार भित्र पुऱ्याइदियाका २ घडीसम्म बांची यी राजा शून्य पदवीमा गया । नेपाल सम्वत् ७८० सालमा ।

अस्य पुत्र पर्थिवेन्द्र मल्ल वर्ष १७ । यी राजाले मेरा पिताकन विसर्जन गर्न्या देवता भनी हरिसिद्धि नाच मेरा सन्तान-दरसन्तानसम्म कान्तिपुरमा नल्याउनू भनी बन्द गरिदिया । कान्तिपुरका देवता हुनाले कान्तिपुरमा दिनु पर्न्या दस्तूर सबै देवपत्तनका नाचमा दिराखे । यी राजाका पालामा सिंख्याल (घुसिंखेल, मनमैजू ?) को काजीले राजा बक्साई श्री पशुपतिनाथका चारै दर्वाजामा सुनका खम्बा तोरण चढाया । फेरि पञ्चविंशति प्रस्थ प्रमाणले गुठी राखी कार्तिक शुक्ल पूर्णिमाका दिन प्रतिवर्ष महास्नान चढाया ।

यिनै राजाका पालामा श्री पशुपतिनाथका पूजक ज्ञानानन्द स्वामीले आफ्नै इच्छाबाट नेपाल छोडी बिदा भै गया । फेरि यिनीपछि कोही विमलानन्द नाम गऱ्याका षोडन्यासी स्वामी टङ्केश्वरमा आई बस्याका रह्याछन् र राजाले थाहा पाई स्वामी भेटी श्री पशुपतिनाथका पूजक गरिदिया । यी राजाले देवपाटन (सिफल) सालिन्दा असिनाको भय हुन्या हुनाले स्वामीसित विनती गरि असिनाभय निवारणादि श्री पशुपतिनाथका पश्चिम दिशा श्री दक्षिण मूर्ति आवाहन गरी यथाक्रमले थापना गरी अगम मूर्ति भनी गुठी चलाई राखिदी असिनामय निवारण गरिदिया ।

फेरि राजाले देवपाटनमा इटाकाल भन्याका जगामा धेरै झिंगटी ईंट पारी पोली यथक्रमले राजाले आफै ईंट झिंगटी बोकी ली गयाका प्रजाहरूले देख्या र धर्मको काम जानी प्रजाहरू सबै आई अहोरात्रभरमा ईंट झिकी सबै यशस्वी श्री ५ पशुपतिनाथका देवालयअघि गङ्गारानीले बनाई राख्याको बिग्र्यो भनी भुवनेश्वरी रानीसहित भै देवालय बनाया ।

फेरि यी राजाका पालामा तिरहूतका धर्माई झाले श्री चांगुनारायणमा भोजन खुवाउन जांदा गोत्रहत्या गऱ्या र तिनका सर्वस्व सरकार दाखिल गर्दा ब्रह्मस्व खानु छैन भनी धन जम्मा गर्दा ३००००० । भयो र सो धनले भैरवका अग्रभागमा ठूलो लिङ्गाकार पाषाणको देवालय बनाई अष्टधातुका भुवनेश्वर नाम गरी बसाई धेरै खेत गुठी राखी नित्य नैमित्यका चैन गराया । फेरि यसै धनले जीर्ण भयाको सिंभूको लिंग पनि नयां ठूलो सालवृक्ष ल्याई लिङ्ग खडा गरी अघिको पत्थरको बौद्धमूर्ति पांच देवालयदेखि पश्चिमतिर सारी पांचै मूर्ति सुनका बनाई स्थापना गराया । फेरि यिनै धनले श्री पशुपतिनाथका पुजारीसित मत गरी शिवार्चनका शास्त्रका प्रमाणले श्री पशुपतिनाथका वर्षबन्धन अस्यार्थ अगम्यागमन अभक्ष्य वस्तु भक्षण पापक्षयहेतुः कैलास कुसुमारोहण नाम गरी धेरै गुठी

राखी प्रतिवर्ष चलाया ।फेरि यिनै धनले व्रज्रयोगिनी चांगुनारायणका देवालय जीर्ण उद्धार गराया । फेरि जयवागीश्वरीको देवालय द्विपत्र मन्त्राकार गरी बसाया । फेरि यिनै धनले भूखा, प्यासा अभ्यागतकन इच्छाभोजन गराई बांकी रह्याको धन भुवनेश्वरीका देवालयभित्र गाडिदिया । यस्ता विवेकी यी राजा हुन् ।

यी राजाका पालामा अकस्मात् एक रात्रिविषे जयवागेश्वरीका देवालयभित्र चोर पसी सबै गहना चोरी धोक्रामा राखी बाहिर पाटीमा आई बस्दा चोर त्यहां पाटीबाट उठ्न र बोल्न नसकी उसै रह्यो । भोलिपल्ट चिताइदार विसेतहरूले थाहा पाई हाहाकार गरी खोज्दा राजा पनि हेर्न जांदा ता चोर धोक्रो ली बोल्न, उठ्न नसकी रह्याको राजाले देखी चोर मारी देवीको गहना ज्यौंका त्यौं गरी देवीकन लगाई दिया ।

यी राजाका भाई नरेन्द्र मल्ल पितृपक्ष अमावस्याका दिन परलोक प्राप्त भएकाले ब्राह्मणद्वारा कान्तिपुरमा आफ्ना लगायतभर दशमी कर्म देवताको कामलाई दिया । फेरि यी राजाका पालामा कीका सवा जैसीले अश्वमेघ यज्ञका पुण्य अधिक लिन्या हो भनी लडाई गर्न आउंदा खुशी राजीसंग यज्ञमा चाहिने नेपालका चीज-बीज ज्या ज्या पायाको सौगात दी पठाया र सवा जैसी खुशी गराई वैश्य नेपालका राजाका ल्याया । फेरि यी राजाका पालामा झा भन्याका तिरहुतिया ब्राह्मणले गुह्येश्वरीका कवच यन्त्राकार गरी बनाई राजासहित भै चढाया । सो प्रतिवर्ष वालाचतुर्दशीका दिन अझतक राख्दैछन् ।

फेरि यी राजाका पालामा गुह्येश्वरीका भक्तजन हुनाले समन्तभद्र नाम गर्‍याका कोही १ गुभाजू ह्लासामा गयाका थिया र ह्लासाका थान त्यो बांडा गै रहंदा लामाले यी बांडाकन च्या कटौराले छरिदिया र लामाले मैले दियाको च्या नखाई किन फालेको भनी सोद्धा यी बांडाले हात जोरी लामासित विनती गर्‍या-हे गुरुज्यू ! तपाईबाट बक्सेका च्या खान लाग्दा नेपालमा हाम्रो घरमा आगो लाग्याको देखी समन गर्‍याको हो-भनी विनती गर्दा लामाले पनि ध्यान दृष्टिले हेरी निजले भन्याको सत्य ठहराई बांडाकन बहुत सम्मान गर्‍या । सो बखत नेपालमा बांडाका घरमा आगो लाग्दा अकस्मात् मेघ आई ठूलो पानी परी आगो चांडो समन गरिदिया । फेरि बांडा ह्लासाबाट फर्की काशी जांदा काशीका जैनहरूले मिली एक ठूलो चैत्य बनाई प्रतिष्ठा कसबाट गर्न लाऊं भनी यत्नपूर्वक सराजाम गरी बस्दा यी समन्तभद्र गुभाजू त्यहीं पुग्याछन् र यिनीहरूले पनि बडा समर्थवान् पुरुष हुन् भन्या ठहराई सबै जैनहरूले यिनीसंग आई हाम्रा चैत्य बनाइराख्याका छन् । तिनीकन प्रतिष्ठा गरी जगाई देऊ भनी विनती गर्‍या र लौ भनी गङ्गाजल ल्याई चैत्यमा छरिदी 'प्रतिष्ठा भयो' भनी उठी आउंदा सबै जैनहरूले त जान्या हो भनी मनले

ठहराई फेरि भन्या-क्या प्रतिष्ठा गर्‍याको हो ? सरजाम उसै छ । बेश गरी प्रतिष्ठा गरिदेऊ भनी भन्दा यी समन्तभद्र गुभाजूले मैले ता प्रतिष्ठा गरिसक्यां । तिमीहरू नपत्याए यिनलाई ठूला-ठूला डोरी ल्याई बांधी समाती राख्दा यी समन्तभद्र गुभाजूले तीन चुट्की बजाउंदासम्म समन्तभद्र गुभाजूका पछि लागी यी चैत्य आया र यिनले नेपाल कान्तिपुर नघल टोलमा ल्याई स्थापना गरी सिगद्यो कहलाई राख्या । काशीका जैनहरू दुइ चार दिनका बाटोसम्म आई डोरीले छिराउंदा पनि चैत्यकन फर्काई लैजान नसकी आफूहरूमात्र फर्की गया । यस्ता पुरुषार्थीहरूसंग बस्ने राजा नेपाल सम्वत् ७९७ सालमा शून्य भै गया ।

अस्य पुत्र भूपालेन्द्र मल्ल ७ । यी राजाका पालामा विशालानन्द स्वामी श्री पशुपतिनाथका पुजारी छंदा एक राधवानन्द नाम गर्‍याका षोडन्यासी स्वामी श्री पशुपतिनाथका दर्शन गर्न आउंदा विशालानन्द स्वामीले राजा बक्साई राधवानन्द स्वामीकन श्री पशुपतिनाथका पुजारी गर्न योग्य हुन् भनी पुजारी गराई आफू बिदा भै काशी गै शान्त भै गया । यहांपछि यी राघवानन्द स्वामीले राजा बक्साई अघि नभयाको नेपाल रक्षानिमित्त श्री पशुपतिनाथका दमनारोहण कर्म चलाया । फेरि यिनै स्वामीले मन्त्र क्रम गठ बनाई पाताल गंगा साधना गरी आफूले नित्य स्नान गरी लोकले धन्य कहलाई श्री पशुपतिनाथका नित्य सेवा गरी अघिका पवित्रारोहण जगाई स्वामी बस्याका घर प्रतिवर्ष बनाई चढाउन्या रीत भै रह्याकामा आफूले बनायाका घरमा मठ बनाउन्या रीत चलाया । फेरि यी स्वामीले पवित्रारोहण, दमनारोहणका खर्च स्वामीका द्रब्यले चलाउन भनी प्रतिवर्ष चलाया । फेरि यी स्वामी श्रीखण्ड चन्दनमात्र लेखी वडो गुप्तले नित्य लैजाई श्री पशुपतिनाथका ईशानमा राखी नित्यपूजा आवर्ण सहित गरी लैजाई राजा-प्रजा सबैले धन्य कहलाई कर्म चलाया ।

फेरि कान्तिपुरका कोही काचिली नाम प्रजा देशका उत्तरका लुटी इन्द्रायणी पीठमा नित्य २ रात्रिमा गै सेवा गर्दा एक एक रात्रिविषे नेपालेश्वरी वत्सला त्यही पीठमा आई वस्दा वत्सला देख्यो र यी काचिली आई स्वामीकन कंहंदा स्वामीले काचिलीको मनसुवा जानी राजा बक्साई प्रेत चतुर्दशीका दिन प्राचीन युगादिदेखि नाना विधान पूजा गरी राखेका नेपालेश्वरी वत्सलेश्वरी पीठ खुशी गरी यी अमावस्याका दिन प्रधानहरूका जात्रा प्रतिपदाका दिन यी स्वामी आफै आई श्री पशुपतिनाथकन रात्रि भर जगाई ईश्वर ईश्वरी कुतूहल गराई धार्नी ७ सेर १ सिंदुर यात्रा गरी प्रतिवर्ष रथ-यात्रा चलाया ।

फेरि यी स्वामीले राजा बक्साई काचिली नाम नेवारले धेरै द्रव्य खर्च गऱ्यो भनी देवपाटनका प्रधान गरिदिया ।

त्यहांपछि केही दुष्ट जनले यी स्वामीले पशुपतिनाथकन ढोक दिँदैन भनि राजालाई सुनाइ दिया र राजाले यी स्वामीका गुरुकन भनि पठाए र राजाले स्वामीकन डाकी चिठ्ठी देखाउंदा गुरुका चिठी शिरमा राखी आंखा चिम्ली देवपाटनमा मन्त्र खोली देश जलाउंला, श्री पशुपतिनाथकन ढोक दि फुटाई दिउंला भन्या मनमा राखी कान्तिपुरका दर्वारदेखी दगुर्दै आया र यिनै काचिली प्रधानले पाउ समाती बहुतै विनती गर्दा रामेश्वरी सन्धिका देशमा नेत्र खोली दिया र यी देश उत्नै क्षणमा जलिगया । त्यहांबाट ललितपुरमा आई कामेश्वरीकन ढोक दिया र यी कामेश्वरी वञ्चरोले काठ चिऱ्याझैं फुटी गया । त्यहींबाट यी स्वामी आई तीर्थमा गै मजस्ता पाशुपत मन्त्र जान्या स्वामीहरू तिमीलाई चाहिन्छ भन्या मकन वाग्मती वारीतिर राख, स्वामी चाहिँदैन भन्या पारीतिर राख-भनी यी राघवानन्द शून्य समाधिमा गया । राजासित नजीक वस्न्या कोही दुर्जनहरूले स्वामीहरूको समाधि श्री पशुपतिनाथमा राख्नु गारो हो भनी वागमतीका पारी लगी राखिदिया । यिन दिनदेखि नेपालमा पाशुपत मन्त्र जान्या श्वामीहरू आउनमा कम भै गया ।

फेरि वत्सलेश्वरीका यात्रा प्रारम्भ भयाका वर्ष ४ पछि रानीकन स्वप्न भै राजा-रानी आई श्री पशुपतिनाथकन पूजा गरी वक्साई चावहेलका श्वेत विनायकका कवच मूर्ति वनाई धेरै गुठी राखी गणेश वौद्ध प्रिय हुनाले वांडाहरू गुठियार राखी कार्तिक शुक्ल पूर्णिमा र प्रतिपदाका दिन प्रतिवर्ष यात्रा गराया । यी राजाले गणेशका यात्रा गर्न आउंदा रजकहरू सवै मिली विनती गर्दा रजक ऋय बनाइदिया ।

फेरि यी राजाका पालामा प्रेत चतुर्दशीका दिन रानी मरण भै गइन् र कान्तिपुरका देवताका यात्रा आधामा मात्र भै गया । अमावस्याका दिन हुन्या जात्रा सवै मनाई गरिदिया र छोपी स्वस्थानले गया । वत्सलेलेश्वरीका यात्रा ऋमैसित चलाया । मनाई गर्न सकेनन् । सिन्दूर यात्रामात्र देवतालाई गरिदिया । नेपाल सम्वत् ८०४ सालमा यी भूपालेन्द्र मल्ल राजा शान्त भया ।

अस्य पुत्र भास्कर मल्ल वर्ष १४ हुंदा भूपालेन्द्र मल्ल राजा शान्त भयाका हुन । यी भास्कर मल्ल राजा अति चंचल हुनाले धेरै पशु पाली, पन्छी पाली अनेक थानमा फिर्दा एक दिन लावालस्कर सहित गरी दुर्ग वनान्तरको यवनसम्म पुगी हात्तीका शिकार गरी ठूला ठूला हात्ती ७ समाती ल्याई आफ्ना दर्वार पुऱ्याया र सबै पण्डितहरूले यी राजाको

नाउं आजदेखि गजपति महीन्द्र सिंहमल्ल भनी नाम फिराई चलाइदिया । यी राजाले ब्राह्मण पण्डितहरूदेखि सदा सर्वदा खुशी भै आफ्ना लगाभर तऱ्यानीमा हात्ती शिकार जांदा ब्राह्मण पण्डितहरूदेखि धेरै बिर्ता दिया । त्यस बेलामा रथ वनवासी थारूहरू सबै आई यी राजाकन अनेक सौगात राखी कर जोरी खान माग्दा राजा खुशी भै धेरै जग्गा बक्सीस दी भुवार नाम राजा गरिदिया ।

यी राजाले ललितपुरमा पनि राज्य गऱ्याका थिया र यस बेलामा कीर्तिपुरका जजमानी रागोत ब्राह्मणको अपुताली सरकार लाग्यो र गाबाहालमा विश्वानन्द उपाध्यायलाइ सङ्कल्प गरी बिर्ता गरिदिया । यसमा दाता राजा हुन् ।

फेरि यी राजाका विवाहिता रानी २ र मैजूहरू २ थिया । यी चार स्त्रीहरूसङ्ग रसक्रीडा गर्ना निमित्त किम्डोल थानमा सुघर धर्मशाला बनाई सदासर्वदा रससङ्ग क्रीडा विहार गरी बस्द्थ्या । यी राजाको वर्ष २२ को उमेर हुंदा अकस्मात १२० वर्षमा प्रवेश हुने महामारी कान्तिपुरमा प्रवेश भै कर्णसंधि कपालमा अधिक बेथा लागी क्षणमात्रमा प्राण त्याग हुन्या बेथा आई देश भरमा नित्य ३०।४० सम्म मानिस मरण हुंदै गया । कोही कोही ज्ञानीहरु अलिक बेथाले छुन्या बित्तिकै बेगले दगुर्दै आफ्ना तीर्थमा जाई मरण भया । कोही कोही पचली घाटमा कोही कोही विष्णुमतीमा, कोही कालमोचन तीर्थ, कोही दगुर्दै आउंदा बाटैमा मरिजाने गऱ्या । यस्ता डबलले मरण हुंदा वर्ष २ हुन लाग्दा श्री पशुपतिनाथका दक्षिण मुखमा विकट दन्त प्रकाश भै आया । नवग्रह पद्योपट्टि उल्टो बस्न गया । प्रजाहरू पनि दिन प्रति ८०।९०।१०० सम्म मर्दै गया । कोही प्रजाहरू यस भयले त्राहि त्राहि भै शहर छाडी भागिगया । यस वेलामा झगल ठकुल काजीले राजा १, रानी २, टहलुवा १, यिन ४ जनामात्र गरी कीमडोल बाहलभित्र लुकाई खान पुऱ्याई महीना ६ सम्म राखिदिया । यस्तो उपद्रव हुंदा मुर्दा उठाउन नसकी शहरमा धेरै मुर्दा रहन जांदा छानामाथि स्यालहरू मुर्दा खाई २ हिंड्न लाग्या । यस वेलामा यिनै झगल ठकुल काजीले श्रेष्ठ ६ हरूका मुर्दा रहन गया भनी गुठी राखी मरण समयमा सबै भेला भै मुर्दा उठाउन्या रीत चलाया । यहँदेखि श्रेष्ठहरूका मुर्दा किसानीहरूले पोल्न्या रीत चलाया । त्यहींदेखि दस पंडि नगरी डेढ महिनामा पिंडमात्र दिन्या रीत चलाया । फेरि कान्तिपुरमा मुर्दा बोकी लैजाने नोल फर्काई ल्याउन्या रीत पनि भया । असंख्य मुर्दा हुनाले यिनै वर्ष कान्तिपुरमा तीनै कुमारीहरू यिनै बेथाले लै गयो र देवपाटन चाबहीलका कुमारीहरू ल्याई आसनमा राखी कर्म चलाया । फेरि २ महीनापछि सेमा (?) अर्को सायत तुल्याई कर्म चलाया । यी चावहीलमा कुमारीकन सम्मान गरी बस्त्र गहना धेरै दी खुशी गराई फर्काइदिया । यस्ता

मरण भैरह्याका वेलामा एक कोही योगी आई झगल ठकुल काजीलाई सुनाया कि हे गमार काजी। यस्ता तेरा शान्ति स्वामी प्रजाले महामारी देवी शान्ति सन्तोष हुँदैनन् हुन्या छैनन् । देशी परदेशी सबै जनालाई इच्छा भोजन गराइदेऊ । तबदेखि शान्ति होला । श्री पशुपतिनाथ पनि खुशी हुनु होला-भनी योगी स्वस्थानमा गया । यी काजीले जोगीका आज्ञा सुनी शहरवासी सबै जनालाई बोलाई हनूमान् ढोकामा राखी इच्छा भोजन गराइदिया । दिन ४ सम्म अन्नदान पनि गऱ्या । यस्तो गर्दा दिनका दिन मरण भयाको बहुत शान्त हुँदै गयो । यस वेलामा एक दिन कोही एक ज्यापू किंडोल आफ्ना खेतमा काम गर्न आयाको राजाले देखी ज्यापूलाई राजाले बोलाई शहरको खबर के छ, कतिको मर्छन् ? भनी सोद्धा ज्यापूले विनती गऱ्यो हे महाराज, अब ता दिनको ४।५ मात्र मर्छन् । दिनको दिन शान्त हुँदैछ । बहुतै सम्भार भयो भन्दा राजाले मैजूहरू सम्झी त्यही झ्यालबाट फाल हाल्दा रानीहरूले थाम्न सक्यानन्  र राजा दगुर्दै शहरभित्र पसी दर्वार पुगी मैजूहरूसङ्ग बसिरहंदा यिनै रात्रिमा त्यही बेथा लागी राजा शान्त भया । नेपाल सम्वत् ८१२ सालमा भाद्र कृष्ण ३० रोज ७ का दिनमा ।

त्यहांदेखि कान्तिपुरमा सूर्यवंशी राजा लोप भै गया ।

त्यस वेला प्रजाहरू हाहाकार गरी दुइ रानी मैजू सल्लाह गरी प्रजाहरूकन बुझाई आफ्ना सन्तान नहुनाले छोरीपट्टिका सन्तान ल्याई जय जयमल्ललाई गादीमा राखी सबै प्रजाहरूले धन्य धन्य कहलाई रानी २ मैजूहरू पनि राजाका संसर्ग गरी सती गई अग्नि प्रवेश गरी प्राण त्याग गर्दा भया । राजा राजेश्वरीका पाटका राजस्मशानमा अग्नि दाह भैरहेका वेलामा आधा शरीर जलिगयापछि स्मशानमा जेठी रानी उठी कर जोरीकन वचन बोल्न लागिन् हे लोक हो ! पञ्च प्रजाहरू हो ! हाम्रो बडो कष्ट भयो । सन्तान शून्य राजाले सजीवमा धेरै पन्छीहरू पाली बन्धन गरिराखेका पापले राजालाई असंख्य पोखले छोपि राख्या । २ मैजूले राजाका आज्ञा पाई पोख फाल्दैछन् । उकास्न सक्यानन् । हामी २ रानीका सजीवमा कुकुर अति प्यारो गरी कुकुर छोई हात नधोई सबै वस्तु कन छोयाका पापले मुखसम्म सर्व जातका विष्टाले पुऱ्याया नर्कमा गाडी अलिक चल्न्या बित्तिकै कुकुरले खुवाई राख्या । तसर्थ हाम्रा निमित्त केही धर्मशाला बनाइदेऊ । काशीमा पनि ब्राह्मण भोजन गर्न पठाइदेऊ । अब उप्रान्त नेपालमा तीन शहरमा सूर्यवंशी राजा लोप भै जान्छन् । केही वर्षपछि पश्चिम दिशादेखि सो वंशी कहाई हास वृद्धि गऱ्याका राजा आई भोग गर्न्याछन् भनी सती लोटी जली गइन् । यस दिनदेखि महामारी शान्त भया ।

झगल ठगुल काजीले महामारीले मऱ्याको लेखा गर्दा तीन वर्षका बीचमा १८७१४ भयाछन् ।

यहांपछि झगल ठगुल काजीले सतीका वचनानुसार मखन टोलमा श्री जगन्नाथका देवालय बनाई गुठी राखी स्नान गराइदिया । फेरि काशीमा पनि धेरै ब्राह्मण भोजन गराइदिया । फेरि असन टोलका ढोकाबाहिर सतल धारा मूर्ति बनाइदिया । यी महामारीका बेथाले गरी सूर्यवंशी राजा विसर्जन गराया ।

यी भास्कर मल्ल राजापछि जय जयमल्ल वर्ष ४० । यी जय जयमल्लले अघि गुह्येश्वरीमा धेरै सेवा गर्दा यिनकन स्वप्ना देखायो-आजदेखि ४ दिनभित्र मैथिली ब्राह्मण आउन्या छन् । तिनकन भेट गर्नू भन्या स्वप्ना हुंदा खोज्न पठाई भेट गरी स्वप्नाका कथा सुनाउंदा यी ब्राह्मणलाई पनि स्वप्ना भया र यीकन ब्राह्मणले मन्त्र सुनाई आजदेखि ४ दिनमा तिमी राजा हुन्या छौ भनी ब्राह्मण फर्की गया । अकस्मात् दैवका संयोगले भास्कर मल्ल शून्य भै सतीहरूले खोजी यिनलाई गद्दीमा राखिदिया ।

यी जय जयमल्ल राजा ब्राह्मणहरू मेरा इष्ट देवता हुन् भनी धेरै सम्मान गरी आफूसंग नजीक राखी नुवाकोटमा धेरै विर्ता दिया । फेरि यी राजाले गुह्येश्वरीका रथारोहणकन कवच मूर्ति बनाई अखण्ड दीप ज्वाला ली गया वामाविधि निमंत्रण पूजा गरी कान्तिपुर लगी बतीस कोटीका महाजन राखी धेरै खेत गुठी राखी कर्माचार्य गुठियार राखी थरीहरू सबै जम्मा गरी मार्ग शुदी १० का दिन प्रतिवर्ष यात्रा गराया । नेपाल संवत् ८३२ सालमा यात्रा प्रारम्भ ।

यी राजा हुँदा यिनका पुत्र २ भएका थिया । जेठा राजेन्द्र प्रकाश १ कांछा जयप्रकाश २ राजा भयापछि दर्बारभित्र जन्मेका ३ राज्यप्रकाश, चन्द्रप्रकाश, २, नरेन्द्र प्रकाश ३, छोरी कुमुदिनी रानी । यिनीहरूसित सोख भोग गरिरहँदा वेलामा दैवसंयोग आफू राजा भयाका ९ महीनापछि जेठा राजेन्द्रप्रकाश मल्ल शून्य पदवी गया । यी राजा बडो सौक गरी यिन पुत्रका प्रभावले म राजा भयाको हुँ । अब मेरा संतानमा जयप्रकाश राजा भयाका हुँदा ता देव धर्म राज्य केही पनि रहन्या छैन भनी ३ महीनासम्म बाहिर यी रहंदा ४ थरीहरूले राजाकन बुझाया कि हे राजन् ! एक पुत्रका निमित्त यस्तो शोक गर्न्या होइन । अरू ४ पुत्रहरू छँदैछन्-भन्दा यी राजाले आफ्ना मनको दुःख बताया र ती थरीहरूले यस्तो भया हामीले राज्यप्रकाशकन राजा गरूंला, मोहन चोकमा जन्मेका राजा योग्य हुन् भनी राजा रानी बुझाई ती थरीहरू फर्की गया । यस दिनदेखि जयप्रकाशले त्यो कुरा सुनी खस थरीहरूकन बडो दाग राख्या ।

केही कालपछि साँहिला कुमार चन्द्र प्रकाशमल्ल शून्य भया र यिनका निमित्त दरवार पूर्वतिर टुकाचा पारी सीह्म जुजुका पोखरी खनाई यथाक्रमले बसाया । फेरि यिनका नामले एक कोही सुजनकन धेरै गहना लगाई हिलेजात्रा पठाउँदा एक कोही नेत टोलका उदासले ठूलो हास्य गर्‍यो र भोलिपल्ट राजाको जात्रा आउनेलाई मैले ठूलो हास्य गर्‍याँ भनी डर मानी एक थाल भरी सुवर्ण राखी राजाकन चढाउन्याकन आउँदा राजाले नली फर्काइदिया । यस्ता निर्लोभी राजा हुन् ।

यी राजाका पालामा अजयबागेश्वरीका देवालयभित्र चोर पसी गहना सबै चेरी लग्यो र हाहाकार गरी खोजी गर्दा तीन महीना हुँदा पनि खोजी पाउन नसकी देवीसित धेरै विनती गर्दा ५ वर्षको आचार्यको पुत्री कन्यामा देवी प्रवेश भै मेरा चोर त्यही हाँडीगाउँका ढोकाभित्रका पाटीमा ठाउँ बनाईरहेछ भन्दा सबै जनाले हेर्न जांदा ठाउँ बनाई बस्न्यालाई समाती ल्याई राजा बक्साई सासना गर्दा देवीका गहना सबै मिल्या र देवीकन गहना लगाई चोर मारिदिया ।

फेरि यी राजाले दर्वारका अगाडि राधा-कृष्णका देवालय बनाई महाविष्णुका शिवालय बनाई गुठी राखी यथाक्रमले बसाया । यी राजाले मैथिली ब्राह्मणहरू गुह्येश्वरीका ठूला सेवक हुन् भनी यी राजाले धेरै प्रीति गर्दा खसहरूले नसही निरपराधमा हुल उठी तिरहुतिया ब्राह्मणका घर लुटी धन संपत्ति सबै ल्याई खाइदिया ।

यस वर्षमा वर्षा शून्य भैदिया र प्रजाहरू सबै हाहाकार गर्‍याका राजाले सुनी शान्त मूर्ति राजा हुनाले निरपराध ब्राह्मणहरूको सर्वस्व लूट गरेका पापले मेरा पालामा यस्तो उपद्रव भयो भनी प्रजाहरू उद्धारनिमित्त श्री पशुपतिनाथकन महाबलि नाम गर्‍याका गुठी राखी प्रतिवर्ष चलाया ।

फेरी केही दिनपछि यी राजा साधु देखी गोर्खाधिपति श्री पृथ्वीनारायण शाले नुवाकोट आई त्यहीं बसी आफ्नु हुकुम चलाया ।

यहाँपछि यी जय जय मल्ल राजाले मेरा पालामा निरपराधमा ब्राह्मणको ब्रह्मस्वहरण भया, राज्य पनि गयो अब मैले जिउनु व्यर्थ भनी उपाय गर्दा कोही एक दुर्जन इटुं बहालका बांडाले भने हे महाराज मंजुश्वरीका मूर्ति बनाई श्री पंचमीका दिन कान्तिपुर ल्याई जात्रा गराया सिद्धमरण होला भनी भेद बताया र राजाले मनमा राखी पुग्प गरी मंजुश्वरीका मूर्ति बनाई जात्रा गराया र यी जात्रा भयाका तीन महीनामात्र बाँची नेपाल संबत् ८५२ साल यी राजा शून्यमा गया ।

अस्य पुत्र जयप्रकाश मल्ल वर्ष ३६ । यी राजा मकन नसहन्या जात खसहरू एक, जैसी, भडेल, राजलवट यति सबै मिली राज्यप्रकाशकन राजा गंरूला भन्या कुल्याहा हो भनी जयप्रकाश मल्लले राज्यप्रकाश मल्लका बाबाका सुद्धाई नहुँदै बंधनमा राख्ने विचार गरि जांदा राज्यप्रकाश मल्लले थाहा पाई ललितपुरमा जाऊं भनी रह्याका खबर पाटनका विष्णु मल्लले थाहा पाई चांडै हात्ती लिई गई हात्ती चढाई ल्याई हाम्रो संतान नहुन्याका छोरा पायौं, हामीपछि यी राजा हुन्या हुन् भनी हर्ष बढाई गरी दर्वारमा लगी राखे । फेरि यी जयप्रकाश मल्ल राजालाई थरीहरूले नसही हामीहरूलाई नसहन्या राजाका भाई नरेन्द्रप्रकाश मल्लकन बुझाई दर्वारबाहिर ल्याई देवपाटनमा राखी टुकुच पारीका राजागरी बसाया ।

यी नरेन्द्रप्रकाशकन खस थरीहरूले संझाइदिया हे महाराज ! हजूरहरूका पांच भाई शून्यमा गया । एक ललितपुर गया । एक कान्तिपुरमा राजा भै बस्या । अब हजूर पनि राजा योग्य हुनुहुन्छ भनी थरीहरूले संझाइदिई प्रजाहरूको घर-खेत, घरबारी सबै विग्रह गरी लुटी गिराया । त्यहाँपछि चार महीनासम्म यस्तै डबलले विग्रह गर्दा जयप्रकाशले थरीहरूको बदमाशी ठहराई दलसहित गरी आफै भाई नरेन्द्रप्रकाशकन लघारी भक्तपुरमा भगाया । यी नरेन्द्रप्रकाश भक्तपुरमा सदाशिव मल्लका चोबमा पसी बडो लाचार भया । केही दिनपछि त्यहीं शून्य पदवीमा गया । त्यहांपछि जयप्रकाश मल्ल राजाले खेल गर्न्या थरी कोही फेला पारी कायल गराई मारिदिया । कोहीलाई ठूलो सासना गऱ्या । कोही भागी लुकीगया ।

केही दिनपछि भागी जाने थरीहरूले जयप्रकाश मल्लकन बडो दुष्ट हो भनी यिनका पुत्र ज्योतिप्रकाश मल्ल राजा गरी आफूले मोज गरूंला भन्ने विचार गरी यी जयप्रकाशका रानी दयावतीकन गुप्तले भेटी रानीको चित्त बुझाई अठार महीनाको बालककन राजा गरी थरीहरू सबै हुल उठी जयप्रकाशकन बलात्कारले शहरबाट धपाइदिया । यी राजा जयप्रकाश भागी आठ महीना तीर्थमा बस्या । त्यहींबाट पनि थरीहरूले लगारी दी गोदावरीमा बस्नु गया । फेरि त्यहीं गोदावरीबाट पनि लघारीदिया र ललितपुरमा गाबाहाल टोलका उपाध्यायका घरमा बस्न गया र यी दयावती रानीले यी प्रधानहरूलाई गुप्त गरी घूस खुवाई प्रधानहरूले गाबाहालका घरमा घेरा दी कि त जयप्रकाश राजा हामीहरूलाई सौंपी देऊ नत्र तिमीहरूको सर्वस्व लिउंला महाराजको हुकुम भनी घेरा दिंदा शरण आएका मानिसकन हामीले सौंपीदिने छैनौ सर्वस्व लिन राजाको हुकुम भया सबै

खुला छ भनी ताल्चा खोली दी जयप्रकाशकन लुकाइदिया । यिनीहरूको सर्वस्व लुटी थरीहरू र प्रधानले खाइदिया ।

वहांपछि राजा जयप्रकाश राजाले मेरा निमित्त यिनीहरूको सर्वस्व लूट भयो भनी गाबाहालका उपाध्याय कहांबाट क्वछेबाहाल कौमारी स्थानमा बस्न गया । त्यहांबाट पनि प्रधानहरू र चार थरीहरू मिली लघारी धपाइदिया र त्यहांबाट गोकर्ण बस्न गया । त्यहांबाट पनि भैमाल्याहरूले (गोठाटार देखी मूलपानी) हामीहरूलाई अवजय होला भनी बस्न दिएनन् । कहीं बस्ने ठाउं पायानन् । यी जयप्रकाश राजा गुह्येश्वरीमा बस्न गया । यी राजा त्यहां केही दिन बस्दा एक योगी आई राजाका हातमा एक खड्ग दी तेरे कल्याण होला भनी दिया ।

यी राजाकन वनवास वर्ष २।६ महीना बितेपछि एक कान्तिपुरको बांडा जयप्रकाशका बालकदेखिको सङ्गी गुह्येश्वरीको दर्शन गर्न आउंदा राजाका र बांडाका आंखा चार भै बांडाका आंखाबाट आंसु आयो र बांडाका आंखाबाट आंसु आयाको देखी राजाले आफ्नू जप, ध्यान सकी देवीकन प्रदक्षिणा गरी बाहिर खण्डमा आई प्रदक्षिणा गरिरहंदा त्यस बांडाले राजाका पछि गरी हिंड्यो र राजाले कोही नभयाका वेलामा हेरी वांडासित सोध्या हे बांडा, किन आंसु खसाल्याको ? के गर्न सक्छस् र ? भन्दा बांडाले मेरो धन जियले सकेसम्म त गर्छु भनी विनती गऱ्यो । र राजाजयप्रकाशले बहुतै भरोसा देखी ती बांडालाई केही अह्राया । आज भोलि कुमारी तिम्रा छोरी रहीछ । आज रात्रिमा नारान धारासंधि कुमारी तल ल्याई दर्शन देऊ । दक्षिणा पनि ली आउनू । भनी अह्राया । हवस् भनी बांडा फर्की कान्तिपुरमा गया ।

रात्रि विषयमा यी बांडाले आफ्ना छोरी कुमारीकन बोकी पछेउराले छोपी १५० रूपैया पोका पारी नारान धारासन्धि टुकुच वारिका एक पाटीमा बस्न गया । यी जयप्रकाश राजा पनि गुह्येश्वरीबाट एक्लै कसैलाई थाहा नदिई रात्रिमा त्यहीं आई कुमारीका पाउमा ढोक दी आफ्ना दुःख विनती गर्दा कुमारीले आफ्ना शिरका फूल झिकी राजालाई दी आजका चार दिनमा शहरमा आऊ भनी हुकुम भयो र राजा खुशी भै "हवस्" भनी चरणमा दण्डवत् गरी कुमारी फर्काइदिया । आफू पनि खुशी भै फर्की गुह्येश्वरीमा बस्न गया । चार दिनपछि कान्तिपुरका थरीहरू सबै बाटुला भै गुह्येश्वरीबाट पनि जयप्रकाशलाई धपाउंला भनी धेरै लश्कर जम्मा भै धपाउन आयाको खबर सुनी राजा जयप्रकाश गुह्येश्वरीका भित्र खण्डमा गै देवीकन प्रदक्षिणा गरी ईश्वरीका ध्यान गरिरहंदा वेलामा श्री गुह्येश्वरीका कुण्डदेखि "विधान मत्स्यमेकं राज हस्ते प्राप्तः । राज्यं शीघ्रं

भुज्यते" । यति प्रत्यक्ष पाई राजा बाहिर आई खुरासान नाम गऱ्याका घोडा संधै राजाका साथैमा थियो र त्यही घोडा योगीले दियाको खड्ग हातमा ली आफुसङ्ग रहन्या सिपाही ३०-लाई गुह्येश्वरीको सिन्दूर लगाई कुमारीका आज्ञा मनमा राखी साक्षात् वीरभद्र भैरवाकार भै आया र गौरीघाट सन्धी लश्कर पुग्दा लश्करले देख्यो र राजा जयप्रकाशका साथमा असंख्य भैरवाकार लश्कर देखी अरू लश्कर भागी गया । राजाले खेल गरी आई लश्कर नभेट्टाई कोही लश्कर फर्की जयप्रकाशतिर शरण भनी गया, कोही कसाहीसन्धि माऱ्या, कोही हांडी गाउंसन्धिमा माऱ्या र नन्दिसागर पुग्दा यी राजाका साथ शरण भनी आयाका जम्मा ३००० लश्कर पुग्याछन् । यस्तो गरी धेरै दुष्टहरूकन मारी राजा कान्तिपुर पुग्दा यी राजाको मैजू बिगारी मोज गरिरहन्या मिल्दा ती प्रधानले अब ता यी राजाका शरणमा जानु पऱ्यो भनी डोली चढी आउंदा काल भैरवसन्धि पुग्दा सिधीचा नाम गऱ्याका तेलीले डोलीमा चढी आउन्यालाई मारिदिया । मैजू यिनीसङ्ग सती पठाई आफू दर्वारभित्र पसी दयावती रानीका काखमा बस्न्या ज्योति प्रकाशकन लिन पठाउंदा दियिनन् र कोही एक ब्राह्मणले अघि तिम्री रानी हुन् अब ता ब्राह्मणकी स्वास्नी भयिन् तिमीदेखि केको डर छ भनी ज्योतिप्रकाशकन जफ्ती गरी ल्याई राजाका काखमा राखी प्रजाहरूकन सुनाया हे प्रजाहरू ! यो मेरो छोराकन राजा कसले दियाको हो ? भन्दा प्रजाहरूले हे महाराज ! हजूरबाट बक्स्याको हो भनी विनती गरे र यी जयप्रकाशले मैले दियाको रजाई हो भनी फेरी मैले फर्काई लियां भनी हुकुम चलाई छुल्याहाहरू सबै समाती कायल गर्दै खर्च गर्दै समाप्ति गरिदिया । दयावती रानी बिगाऱ्या धन जजु नाम गऱ्याका ब्राह्मणकन चोट लगाई नमर्ने पाठले घाउ लगाई वैद्य पठाई कुहिजाने औषधि लाउन पठाया । दुष्टा दयावती रानीलाई चारै दिशाभित्र पारी बन्धन गराई त्यहीं लोप गराइदिया । यस्ता प्रकारले दुष्ट सबै मारी तिनीहरूका धन सम्पत्ति नाश गरी सुजन ब्राह्मणहरू साथ राखी निष्कण्टक राज्य गरिरहंदा भया ।

केहीदिनपछि बाबाका पालामा गोर्खाली आई नुआकोट लिदिया भनी नुआकोटवासी राजाकन आफै आई लडाई गरी गोर्खाली हटाई नुआकोट आफ्ना गराया ।

फेरि वर्ष ८ पछि काशीराम थापाले गोर्खालीकन ल्याई नुआकोट दिया भनी भैमालेहरूले चुक्ली गर्दा यिनीहरूको चुक्ली सुनी जनैपूर्णेका दिनमा राजा आई चावहिल गणेशका सन्धिमा बसी गौरीघाटमा जनै मन्त्रिरहन्या काशीराम थापाकन जफ्ती गरी बोलाई विवेक नगरी छलकार गरी माऱ्या । यी थापाले आजका चौथा दिनमा नुआकोट भोग गराई दिउंला बुझ्नु हवस् भनी भन्दा नमानी बडो वीर थापालाई मारिदिया ।

राजा जयप्रकाशले अघिका थरीहरू थापा, बुढाथोकी, बिष्ट, रङपाली, बस्न्यात यी सबै मेरा दुष्ट हुन् मकन राजा गर्न्या छैनन् र मेरा बाबाकन कोही दिनमा मार्‍याका थिया भनी ठूलो रीस गरी थापा मारिदिया ।

यी थापा मार्‍याको सुनी पृथिवीनारायण शाहले नुआकोटमा बढी बढाई गरी तिरहुतिया बाहुनका ३२ घर खेत लुटिदिया र नुआकोटमा ब्राह्मणहरू बस्न भएन र आफ्ना सुगम पाई नेपालमा बस्न आया । यी थापा मार्‍याका जयप्रकाश राजाका दुर्बुद्धि भयाका हुनाले त्यस दिनदेखि जयप्रकाशको बिग्रदै गयो । यी थापा मार्‍याको राजाले चुकेकै हो ।

केही दिनपछि जयप्रकाश राजाले “आफ्नो भाइ राज्यप्रकाशका काबूमा बस्न्या छैन पृथिवीनारायण शाहकन सलाम गर्न्या छैन” भन्याका कुरा जयप्रकाशले सुनी देवानन्द उपाध्यायलाई पठाई बडा युक्ती गरी जनैका धर्म दी प्रधानहरू बोलाई बन्धन गरिदिया र भीरख्वा धन काजी १ हीरा खाई मर्‍या । बांकी रहेका प्रधानहरूलाई बन्धन गरी स्वास्नीका पोशाक लगाई पसलपीछे एक मूठी चिउरा मगाई देश घुमाई सासना गरी दिन प्रति यस्तै गरिराख्दा प्रधानका स्वास्नीहरू आई मायाले खुवाउन आउन्या स्वास्नी जति सबैलाई डाकिनीका भेष गराई आफ्ना लोग्नेहरूसङ्ग राखी ढोका ढोकामा बहुत कराई उपमा गरी देश घुमाई बडो फजिती गरी छाडिदिया ।

प्रधानले यी जयप्रकाशको तखत उठाउने जुक्ति गर्न लाग्याको कुरा सुनी पृथिवीनारायण शाहले बडो हर्ष गर्‍याछन् । प्रधानहरूलाई यस्ता उपद्रव फजिती गर्‍याको पनि राजाले चुक्याको हो ।

यी राजाले कसैको खातिर नगरी गुह्येश्वरीघाट बनाइ धर्मशाला २ सत्तल बनाई धन्य-धन्य जयप्रकाश कहलाया ।

फेरि भक्तपुरका दुष्ट वाशीहरूले जयप्रकाशकन दुर्बुद्धि दी चोभार मुनि बामती उत्तर वाहिनी भै बगिरह्याकी सोझो गराई बगाइदियाको पनि दुर्बुद्धि हो ।

फेरि यी राजाले आफ्ना बाबाले, गुह्येश्वरीका जात्रा बनाइदियाको हो भनी जगाई अनेक जातकन भोज खुआई रीत चलाया । बागमती सोझो गरी धेरै खेत तुल्याई गुठी राखी नित्य आरती जगाई प्रतिवर्ष नवरात्रिमा अखण्ड दीप पुरश्चरण शान्ति प्रजा ब्राह्मणद्वारा चलाया ।

फेरि पशुपतिमा पनि ठूलो चौघडा बनाई कोटि पार्थिव पूजा गरी बसाया ।

फेरि लुढीकोटमा पनि बालाज्यू आचारहरू (?) थापना जगाई २२ धारा बनाई गंडकी जल संधित ठहराई धर्मशालाहरू बनाई गुठी राखी धन्य कहलाया ।

यिनै सालमा गंडकी पहिरो आई भत्क्यो र धेरै शालिग्राम ल्याई श्री पशुपतिमा चढाया । केही वासुकीमा चढाया । यिनै दिनदेखि नेपालमा अरू अरू स्थानमा पनि शालिग्राम फिजिगया ।

यिनै सालमा जगवागेश्वरीका देवालयमा चोर पसी गहना सबै चोरी लैगयो र गंगाधर भन्याका काजी दर्वार जाँदा / यट्खा टोलका पाटीमा बस्या एक नेवारकन चोर जस्तो देख्या र समाती लगी राजा बक्साई सासना गर्दा कायल गराई गहना पाई यथास्थिति चढाया ।

३ महीनापछि यी राजाका चमत्कार धर्मशालाहरू बनायाका कुरा सुनी भक्तपुरका राजा रणजित् मल्लले सहन नसकी दुर्बुद्धि मै बांडा चोरहरू पठाई गुह्येश्वरीमा विघ्न गर्न पठाया । यी गुह्येश्वरीमा ठूलो घंट फोरी भित्र पसी भैरवकन उल्टाई मूल कलश चोरी लैजांदा चोरहरूका नेत्र बन्द भै कतै जान नसक्दा कलश जंगलमा कलश मिल्यो र यथास्थिति चढाया ।

फेरि यी राजाले हरिसिहद्धिका र कान्तिपुरका टीका धारीका अधिपति हुं भनी कान्तिपुरमा बोलाई सुनका ३ छप्पर देबालय गुठी राखिदिया ।

यही सालमा फेरि गोर्खाली राजाले ८ प्रधानहरू मार्‍याको सुनी नेपाल कीर्तिपुर संधि आई नेपालमा धेरै लश्कर जमाई लगी बडो लडाई भयो । त्यस वेलामा धेरै लश्कर जमाई लगी बडो लडाई भयो । त्यस वेलामा बाघ भैरवको देवालय झर्झराकार गरी केही स्वरूप वैरीलाई गै लडाई हुने वेलामा यी देवीका प्रभावले महा घनघोर अन्नाधुंन लडाई हुंदो भो । यी लडाईमा कीर्तिपुरका सिपाहीका प्रथम प्रहारैमा सुरप्रताप शाह एकाक्षी भै गया । फेरि यिनै लडाईमा कीर्तिपुरका प्रहारले कालु पांडे पनि परलोक भै गया । घडी १२-सम्म लडँई मै २ पट्टिका पनि लश्कर साफ भै गया । शक्तिवल्लभ सर्दारले मदेसदेखि ल्याइराखेका सिपाहीहरू जम्मा जवान १२००० सबै त्यहीं संहार भै लडाईमा धेरैलाई मारी मर्‍या र पृथिवीनारायण शाहलाई समात्न गयाका वेलामा कसाई १, पुतुखार १-ले राजा बोकी दगुर्दै रातारात गराई दहचोकबाट नुआकोट पुर्‍याया र पृथ्वीनारायण शाहले २ जनालाई अति नजीकै राख्या ।

यी राजा जयप्रकाशले सुखसित अब उप्रान्त गोर्खाली शून्य भया भनी बडो बढाई गरी फर्की आया । विचार नगरी फर्की आयाका राजा चुक्या । यस दिनदेखि वर्ष १८ सम्म गोर्खा हराइराख्या ।

यी राजा जयप्रकाशले सुखसित रहंदा कङ्केश्वरीमा वर्ष-प्रति ढुंगाले हानी खेल्ने रीत गरी चलाई बनाइदिया र रात्रिमा बडो शब्द गरी तीन फेरा करायाको सुनी राजाहरूले बन्द गऱ्याको फेरि खेलाया ।

फेरि जयप्रकाश राजाले कुमारी देवीकन वास्तु चक्राकार प्रमाणले घर बनाई बसाया । फेरि रथारोहण गरी देश घुमाई इन्द्र जात्रामा प्रतिवर्ष रथयात्रा चलाया ।

फेरि नेपाल नष्ट कारण मोहन चोकमा शीतला प्रवेश भै आगममा आवागमन गरी राजपुत्र ज्योतिप्रकाशकन शान्त गराया । यी राजाले कुनै रीत समूल पलं बनाई देवपाटन लगी राजस्मशानमा लगी जलाया ।

यिनीहरूल यी चार थरहरूले तिरौतिया ब्राह्मणहरू साथ रह्याका नसही नुआकोट गै गोर्खालीसङ्ग मिली कान्तिपुरका लगायत सबै गोर्खालीकन चलन गराइदिया ।

यिनीपछि भक्तपुरका राजा रणजित् मल्लले जयप्रकाशका सन्तान शून्य भया, अब कान्तिपुर नष्ट हुन लाग्या भनी विसक्याटको जात्रा हेर्न आयाका कान्तिपुरवाशीहरूलाई ठूलो ठरसा भयो भनी नसही छेकी राख्या । यी कुरा जयप्रकाशले सुनी कोप गरी घुर्कीलाई पठाउंदा रणजित् मल्लका गाउंपट्टि भै केही दिनपछि छाडी पठाया । यो रीस जयप्रकाशले मनमा राखी शतवीज छर्न्या आउन्या मनमती पारका प्रजाहरू सबै छेकी देवपाटनका कोटमा बन्द गरी ६ महीनासम्म छेकी राखी धेरै आम्दानी गरी धपाई पठाया । गुणवन्त नाम यस्ता सोखीन यी राजा हुन् ।

फेरि यी राजाले गोर्खाली हटाउना निमित्त धेरै नागा सिपाही पाली खर्च ठूलो भयो र ललितपुरका विष्णु मल्लले चढाईराखेको श्री पशुपतिनाथका भण्डारभित्रका धन ठाउं ठाउंका देवालय श्रीको जलहरी झिकी लिई खर्च गराया । फेरि पुगेन भनी देवपाटनका मूल महाधंजुले मति दिया र श्री पशुपतिका ठाउं ठाउं भण्डारभित्रका धन, देवालयका गजूर झिकी खर्च गरी मेरो फत्ते भो भने यी देवताका द्रव्य गुठी राखुंला भनी लगी परी आयाको खातिर मानी खर्च गराया ।

फेरि सङ्कल्प गरी पार्थिव पूजा गराया ।

सिम्भूका लिङ्ग पनि बिग्र्यो र नयां लिङ्ग खडा गरिदिया ।

फेरि तुलजाका जग पूरानू भयो भनी फिराई प्रतिष्ठा गर्दा धेरै नाच वाज गरी दर्वारमा भीमसेन आदिहरू धेरै देवतालाई यथाक्रमले यात्रा गराया ।

वहांपछि पृथ्वीनारायण शाहका प्रतापले नेपाल सम्वत् ८८७ आषाढ सुदी प्रतिपदाका दिन वडो रात्रिमध्ये नेपालमा २१ भूकम्प गया ।

त्यहांपछि पशुपतिनाथले पृथ्वीनारायण शाहकन वालकपनामा भक्तपुरविषे कौमारीका प्रसाद् भोज्य सहाय भै पशुपतिनाथले देवपाटन बोलाई माघ संक्रान्तिका दिन सदल राजा सबै आई दर्शन गरी जय जय शब्द् भै गया ।

यिनै दिनमा राजा पृथ्वीनारायण शाहले पशुपतिमा पञ्चामृतविना पूजा हुन्छ भनी सुनेर यिनै राजाले सङ्कल्प गरी पञ्चामृत गुठी राखी नित्यार्चन गराया । अझतक छदैछ । पृथ्वीनारायण शाहको श्री पशुपतिनाथविषे ठूलो धर्मविषे यत्तिकै हो ।

वहाँपछि आठ महीनामा नेपाल संवत् ८८८ साल भाद्र सुदी १४ चतुर्दशीका रात्रिविषे पृथ्वीनारायण शाहका दल बलसहित कान्तिपुर प्रवेश भया ।जयप्रकाश राजाले तुलजामा बसी २।४ घडीसम्म लडाई गरी तुलजामा जगमा धेरै बारुद् विछ्याई कान्तिपुर छाडी भक्तपुर बस्न गया । गोर्खाली दल सबै दर्वारमा बसी तुलजाका देवालयमा गै बढाई गर्न लाग्दामा पाँडे बारुदले पोली मरी यमपुरीमा गया । सिपाहीहरू पनि धेरै पोली नाश भै गया । कौमारीका प्रसाद् पायाकाले पूर्णिमाका यात्रा गरी राज्यको हुकुम चलाया ।

यिनीपछि प्रधानहरूले ललितपुरमा २।४ दिनपछि कान्तिपुर आई पृथ्वीनारायण शाहकन बोलाउन आया र राजाहरूले यिनीहरूका साथ जानु छैन भनी मनमा राखी मनमा बडो क्रोध गरी प्रधानहरूकन मीठो बचन बोली भोलिपल्ट टेकुदोभानमा तिमीहरू सबै बसिरहनू भनी अह्राईपठाया । धालाछेका ८ प्रधान फर्की ललितपुर आया । एक प्रधानले भोलिका दिनमा हामीहरूको संहार हुन्या दिन छ-भनी ज्ञानले जानी ब्राह्मणहरूकन डाकी दानपत्र गरी रात्रिभरमा सर्वस्व दान गरिदिया । भोलिका दिन पृथ्वीनारायण शाह राजा टुंडिखेलमुनि बागमतीमा पुग्दा राजा श्री पृथ्वीनारायणशाहले प्रधानहरू सबै नजर गरी आफ्ना जनहरूकन आँखाको इशारा गरी प्रधानहरू सबै खुशी रह्याका वेलामा भगवाहालका सर्वधन प्रधान वेगले कूच गरी हात बजाई सिंहनाद् गरी जांदा धेरै लश्कर गै लघारी लैजाँदा कसैले पनि नजीक पर्न सकेन । फेला पर्न नसकी लश्कर फर्की आया । खङ्गधर प्रधान काशी पुगी तीथए वर्त गर्न गया । अरू प्रधानहरू सबै छुट्याई मार्न लगाया । यिनीहरूका स्वास्नी सबै राजा बक्साई सती गया । यिनैका छोराछोरीहरू सबै खवास्या तुल्याया । राजाले ललितपुरमा बाहाली गरी हुकुम चलाया । प्रधानहरूको सर्वस्व हरण गर्दा एक प्रधानले अघिल्ला दिन दान गर्‍याको सहीछाप हो भनी थामी बक्स भयाका आज तक छँदैछ । राजाले आनन्दसित हुकुम चलाया ।

यहाँदेखि महीना ८ पछि भक्तपुर गै लडाई गरी दल संहार गरी जयप्रकाश मल्लका पाउविषे गोली प्रहार गरी सबै लश्कर मारी जिती नेपाल संवत् ८९० साल कार्तिक सुदी

९-का दिन दर्वारभित्र पसी चौकोटमा आगो हाली भोटे सिपाहीले लडाई गरूंला भन्दा-भन्दै रणजित् मल्लले आगोलाई सबै खराब गराया । यस्ता तमाशा हेरी श्री पृथ्वीनारायण शाह दर्वारभित्र पसी नजर गर्दा वेलामा तीन शहरका राजाहरू बस्याको देखी पाँच सबै मिली हाँसी ठट्टा गरी बसिरहंदा जयप्रकाशले सुनी महाभयंकर बोली गरी उठी भन्न लाग्या हे गोर्खाली हो ! दुनियाँ सबै मेरो नूनहरामी हुनाले र गोर्खाली राजाले हामीहरूसंग मीत लाई मित्र हो मित्रदोही पाप भयो र यस्तो भयाको हो । तिमीहरू क्या ठट्टा गर्छौं भन्याको सुनेर गोर्खाली सबै जना ब्रत पूर्ण समाप्त भनी गया ।

त्यस वेलामा श्री पृथ्वीनारायण शाहले जयप्रकाशसित संवाद-विवाद हुँदा सबैले धन्य कहलाई जयप्रकाशले बोल्न लाग्या । अहो गोर्खाली ! मेरो थरी भैमाल्या सबै मिली यहाँसम्म गराया यिनीहरूको विश्वासमा पर्नु छैन । सबै नूनहरामी हो । नूनको सोझो गर्न्या फगत तिरहुतिया ब्राह्मण मात्र छन् । अझसम्म पनि मसित २।४ जना छँदैछन्-भनी क्यावात भै गया ।

गोर्खाली राजाले पनि कुरा सुनी तिरहुतिया ब्राह्मणका धन जीव रक्षा गऱ्या । अघि थरीहरूले चुक्ली हाली सर्वस्व ली धपाउनु तयार भएका जयप्रकाश मल्लका वचन सुनी बिचार गरी हेर्दा ठहराई पृथ्वीनारायण शाहले तिरहुतिया ब्राह्मणका धन जीव रक्षा गरिदिया । थरीहरू अनविश्वासी नूनहरामी हुन् भनी टाढा गरिदिया । राजा रणजित् मल्लकन काशी पठाया ।

राजा जयप्रकाश पशुपतिनाथमा केही वार्ता, उत्तर प्रत्युत्तर भैकन घडी २ बाँची शून्य भै दुनियाँलई देखाई अघोरनाथमा मिल्न गया ।

ललितपुरका राजा तेजारसिंह मल्लकन नेल हाली लक्ष्मीपुर पठाई त्यहींबाट मोचन गराया ।

यति गरी पृथ्वीनारायण शाह भक्तपुरदेखि फर्की कान्तिपुरमा आई राजधानीमा पसी तीन शहरका हुकुम चलाई वसन्तपुर नाम बनाई बडो ऊंचो गरी दर्वारभित्र नौ तलाका दरबार बनाई बस्या ।

यी राजाले अघिका गुण सम्झी पुतुवारकन नजीकै राखन्या हो भनी साथै राख्या । कसाहीहरूलाई पनि गुह्येश्वरीका सुसारे गरी राखिदिया । अघि कीर्तिपुरका लडाईमा सूरप्रताप शाहलाई एकाक्ष गऱ्याका ईंखले नेपाल सम्वत् ८६३ अधिक चैत्र शुक्ल तृतीया वार ५ का दिन कीर्तिपुर प्रवेश गरी बाहाली चलाई भोलिपल्ट बाह्र वर्षउंभोका प्रजाहरू सबैले राजाको सलाम गर्न आउनू भनी छलकार गरी बोलाई कोटमा थुनी २।३ दिनपछि

सबै प्रजाहरूका नाक काटिदिया । पछि सबै नाक तौलाई हेर्दा १२।१।६ बाह्र धार्नी १ सेर ६ तोला भया । प्रजाहरू नाक काटियाका सबै जम्मा ८६५, कानमात्र काट्नु भन्याका नाकसमेत काटि दियौ भनी भोटयाहरू जम्मा गरी यमलोक पठाइदिया । जुन कीर्तिपुरका प्रधानहरू ७ वर्षसम्म गोर्खालीहरूकन हटाई लडाई गरी थामी राखन्या यस्ता वीर सिपाही १ लाख काटी खराब गरिदिया । कीर्तिपुरका कोट सबै प्रजाहरूका घर आगोलाई नाश पारिदिया । यस्ता कीर्तिपुरका नाक काट्न्यालाई ६ महीनाअघि चोभारका गणेशको नाक फुटी आयो ।

यी राजाका पालामा रामकृष्ण कंवरले राजा बक्साई श्री पशुपतिनाथदेखि श्री गुह्येश्वरीसम्म शिलाको बाटो बनाइदिया । या बाटो बनाउंदा प्रजाहरू सबै धर्मको काम हो भनी खेताला आई खाजा जांड खाई ज्याला नली भागी जान्छन् भनी रामकृष्ण कंवरले ठाउं ठाउंमा चौकी राखी खाजा खुवाई ज्याला दी पठाउंथे ।

यी राजाले रुद्रमतीका पुल बनाइदिया ।

यी राजाले हीरासिंह काजी पठाई पूर्व विजयपुर, दक्षिण मकवानपुर, पश्चिम काली गण्डकी, उत्तर केरुङ, कुतस्सौँध प्येक्चो वनको तऱ्यानी सबै आफ्ना गरी हुकुम चलाया ।

यिनै पृथ्वीनारायण शाहका छोरा सिंहप्रताप शाहले आचाहरूका छोरीहरू ४।५ जना स्वास्नी तुल्याई हिंड्दा पृथ्वीनारायण शाहले चाल पाई बुझाउंदा बुझाउन नसकी आफु, नुवाकोट गै बसी नेपाल सम्वत् ८९५ साल माघ संक्रान्तिका दिन त्रिशूल गङ्गाका मोहानमा गै तीर्थमा शून्यमा प्राप्त भया । यी राजाले नेपालमा भोग गऱ्याका वर्ष ६।४ महीना ।

अस्य पुत्र सिंह प्रताप शाह वर्ष ३६। यी राजाले नेपाल रक्षिका गुह्येश्वरी भन्ने जानी सवालाख १,२५,००० हंसा-अंड अनेक द्रब्यसहित चढाया । यी राजाले नुवाकोट दुपवाली (?) कान्तिपुरका दर्वारमा लिंगो खडा गरी इन्द्र जात्रा गरी लिंगो ढाली गुठी राखी प्रतिवर्ष जात्रा चलाया ।

फेरि यी राजाले नेपालका रीत मगाई आचारहरूसंग गरी तुलजाका पूजा गरी समस्त कर्म गरी नेपाल संवत् ८९८ सालमा शान्त भै गया ।

यिनै सालमा ललितपुरका भीमसेनको जात्रा प्रारंभ भयो । राजा शून्यमा गयाको बरखी मानी सबैमा हुकुम गरी राख्दा देव देवताका जात्रा चलाउनु भन्या हुकुम भयो र पहिलो जात्रामात्र केही भएन भनी भीमसेनको जात्रा चलाई पछिल्ला सालमा जात्रा गर्न तयार नहुंदा भीमसेन कोप भै हामीलाई तिमीले खेलांची गरेऊ भनी कोप हुंदा प्रतिवर्ष

जात्रा चलाउन तिमीहरू नपत्यायामा म प्रत्यक्ष देखाउँछु । जात्रा गर्ने मेरो मूर्ति अगाडि राखी पूजा गर्दा मेरो ठूलो मूर्तिदेखि फूल खसी जात्रा गर्ने मूर्तिमा नपऱ्यासम्म जात्रा नचलाउनू भनी आज्ञा भयो र आज्ञाबमोजिम गरी प्रतिवर्ष जात्रा गर्न झटा टोलका अघोरहरूले गुठी राखी प्रतिवर्ष जात्रा चलाया । यो आज्ञाबमोजीम अझलतक भैरहेको छँदैछ ।

अस्य पुत्र रणबहादुर वर्ष १९ । यी राजा बडा प्रतापी भया । यी राजाले टीका पाउनेमात्र मेरा बाबाकन स्वल्पायु गरिदिन्या राजामाथि प्रयोग गऱ्यो भन्या ठहराई अचारहरू सबै समाती बाँधी लुटी इन्द्रायणी पीठसंधि लगी लोप गराइदिया ।

फेरि यी राजाले श्री पशुपतिनाथकन चांदीका जलहरि चढाया । वंशराज पांडे मंत्रीकन केही कारण राखी दर्वारभित्र कटाइदिया ।

फेरि लम्जुङ तनहूं आदि २४ राजा तखत मासी नेपाल संम्बत् ९०२ सालमा गंगावार सांध गरी बाहाली गरी हुकुम चलाया । दक्षिण दिशामा अंग्रेजी कंपमान गराइराख्या । पूर्व दिशामा सरूप काजी पठार्य किराती राज्य जिती हुकुम चलाई अमाल राखिदिया । उत्तर दिशामा पनि समा लामालाई बोलाई भेटी, सुनी सिकाउन आदि गरी लश्कर पठाई दीगर्चा लुटी धेरै धन ल्याई चीनका बादशाही तखतसम्म धक्का गरी हुकुम चलाया ।

यहांपछि चीन बादशाहले पनि सहन नसकी धुरिन काजीसित गरी धूम मंत्री पठाई धेरै लश्कर पठाया र धैबुं पुगीरहंदा दामोदर काजी पठाई चीनका लश्कर संहार गर्दा चीनका बादशाहले धन्य बहादुर रणबहादुर शाह भनी पुरुषार्थको हुकुम चलाया । केही दिनपछि चिनियाँहरूले मिलजुल गरी बस्या बढिया होला भनी सलूक गरी दिया । यी रणबहादुर शाहले बडो बादशाह हो भनी नाम गरी राख्या ।

फेरि रणवहादुरशाहले कुमंत्रीका सुनी नेपाल भारत खेत नपायार डाहोली वसुन्धराको अन्तर गऱ्याको पापले बुडिगयो । रणबहादुर शाहले नेपाल हाली बंधन गरी मोचन गराया ।

फेरि यी राजाले बडा-बडा पर्व-काल हुंदा सहस्र गोदान गऱ्या । चाडबाडमा अनेक धर्म गऱ्या । पचली खेलमा ब्राह्मण अभ्यागतहरूकन बारंबार भंडारा खुवाई शनिश्चरवारप्रति श्री पशुपतिनाथका स्थानमा दहीचिउरा लुटाई मगलवारप्रति हनूमानढोकाका हनूमानअगाडि धेरै ब्राह्मणहरू खुवाई भोजन गराया ।

फेरि भरमुलुकका रैतीहरू झारा गरी टुडीखेलका जगन्नाथका देवालय अद्वितीय बनाई सिद्ध भै गयाको उंचो पुग्दैन भनी फेरि यिनै देवालय बढाई बनायाका असम्भव हुनाले सिद्ध गर्न नसकी जगन्नाथमा आगम राख्न बनाई जगन्नाथका पुजारी पनि यिनैलाई गरूंला भनी नाम गराई राखिदिया । यी आगम देवता ललितपुरका पुलचोकका पूर्वपट्टिका कटामा राख्याका अझतक छँदैछन् ।

फेरि श्री पशुपतिनाथका कवच जीर्णोद्धार गरिदिया । श्री बज्रयोगिनी, श्री गुह्येश्वरी, चांगुनारायण, दक्षिणकाली, तीन शहरका तीन तलेजु, देगुतले २, लुमडी आदि देव देवतामा गुजराती बाजा राखी महापूजा सदावर्त अनेक गुठी राखिदिया । ठाउं ठाउं कनेक गुठी राखिदिया ।

फेरि अनेक तन्त्र विचार गरी दर्वारमा अघि अघि काल भैरव आदि स्थापना गरिराख्याका थामी आफूले पनि ठूलो भैरवको मूर्ति बनाई (श्वेतभैरव) बसाया । गुठी राखी इन्द्रजात्राभरमा खोलन्या रीत गरी चलाया ।

फेरि ठूलो घण्ट बनाई दर्वारका अगाडि ग्रह, मातृकाका थान प्रकाश गरी मूर्ति बनाई बसाया । यी ग्रह मातृकाका मूर्ति बसाउंदा यिनी योगिनीहरू उग्र भया र यिनीहरू मान्न निमित्त गाबाहालका श्रीकण्ठ उपाध्यायसित सल्लाह गरी सेठी सती भैरव थापना गरी बलिदान चलाई शान्त गराई दुनियां रक्षा गर्दा भया ।

यस्ता विवेकी धर्मात्मा राजा हुनाले कोही दुर्जनले यी राजाको धर्म नष्ट गर्ना निमित्त मिश्र तिरहुतिया ब्राह्मणका पुत्री ल्याई रानी गरी राख्दा यिनका गर्भदेखि दैवका योगले पुत्र उत्पत्ति भया र शास्त्र हेरी लक्षण ठहराई गीर्वाणयुद्धविक्रम नाम राखी अठाह्र महीनाका बालखकन टीकाका दिन राज्याभिषेक गरी आफूले गादी छोडी पर सरी पूर्णानन्द स्वामी कहलाई ओटु टोलका दिव्यकर भट्टसित पूर्णाभिषेक दी कान्तिपुरका राजधानी छाडी देवपाटनमा बस्न गई ६ प्रकारका बगैंचा बनाई पशुपतिनाथकन चढाया । बगैंचा बनाउंदा वेलामा प्रजाहरूका घर ३२ उजाड भया र प्रजाहरूकन चित्त बुझाया । यहांपछि ब्राह्मणी गमन पापका दुर्बुद्धिले क्यै चित्त छोडी यी देवपाटनमा बस्दा सांढेहरू जुधाई तमाशा आफूमै गर्नु हुन्थ्यो । यहां राज हुंदा बांदरले धेरै दुःख दिया र ती बांदरहरू बन्दूकले हानी मारी धेरै खर्च गरिदिया ।

स्वामी बडा सुन्दर रागी मूर्ति ३ महीना देवपाटनमा बसी त्यहांबाट ललितपुरका दर्वारमा बस्न जांदा भया । ललितपुरमा बस्दा यिनै गीर्वाणयुद्धविक्रम शाहक मुमाज्यूकन बडा रोगले पीडा गर्दा कोही एक जनाले कालपुरुष जगाई दान गर्नुपर्ला भन्यो र कालपुरुष

जगाउन्या कर्म राजपुरोहितसङ्ग स्वामीबाट सोद्धा यिनीहरूले सक्यानन् र ललितपुर गाबाहालका श्री कण्ठनन्दोपाध्यायकन बोलाई अघि देखि यिनका परम्पराका रीत जान्या तिमी हौ त्यो कालपुरुष तिमीले जगाउनुपर्छ हुकुम भै अह्राया र श्रीकण्ठनन्दोपाध्यायले पनि हवस् भनी आफ्ना भाइ अमृतानन्दोपाध्यायलाई सिकाई प्रतिष्ठा गराया र श्रीकण्ठ नन्दोपाध्यायले आफ्नू मन्त्रका बलले ४ दिनमा जगाइदिया र स्वामीज्यूबाट कालपुरुष जाग्याको नजर गरी सर्दार इन्द्रवीर बस्नेत पठाई प्रतिष्ठा भयो भनी थामी दक्षिणी १ ल्याई कालपुरुष दान दिया र दान लिने बित्तिकै सो भट्ट अङ्गारले घसेभैं कालो उत्तिखेरै भै गया । कालपुरुष पनि लोटाउन सक्यानन् । फेरि भट्टको गुरु आइपुग्या । वैष्णवी पीठमा लगी आफ्ना मन्त्रका बलले बसेका ४ दिनमा कालपुरुषकन लोटाई आफ्ना बलले आफ्ना शिष्यकन बचाया । स्वामीले कालपुरुषकन जगायाको देखी श्रीकन्ठनन्दोपाध्यायलाई अघि श्री पृथ्वीनारायण शाह प्रवेश हुंदा हरण भै रह्याको कीर्तिपुरका बिर्ता ३ खेत फर्काइबक्स्यो । फेरि ललितपुरका तलेजु पनि यिनका पुस्ता प्रतिष्ठा गरिराखेका श्री पृथ्वीनारायण शाह प्रवेश हुंदादेखि राख्याका परापूर्वदेखि यिनीहरूका हुन् भनी १८५५ साल भाद्र वदी ८ रोजका दिन फोइबक्सनुभयो ।

यहाँ पछि दामोदर काजीले २ हुकुम मान्नु सक्तिन भनी गीर्वाणयुद्धविक्रम शाहपट्टि लागी स्वामीका हुकुम नमानी काम चलाउँदा स्वामीबाट आफ्ना पुत्र गीर्वाणयुद्धविक्रम शाहपट्टिका सबैलाई नुवाकोट धपाई सबै भारदारसित विरोध गरी तलेजु आदि सबै देवतालाई गुहुका धूप हाली तोडी वैद्यहरू सबै मारी कान्तिपुरका तलेजु देवीकन कसाही बाजाका हाडबाजा बजाउन लगाई मुर्दा लग्याको नक्शा गरी आचारहरू सबै रोआई करवीर मसानमा लगी नाइके अचारले आगो हलाई पोलिदी नर्ककुण्डमा हालिदी फेरि भक्तपुरका वेताललाई पनि बंचराले चिँरीकन नर्ककुण्डमा हालिदिया । यस्ता उपद्रव गर्दा फेरि यसै सालमा कुंभेश्वरीका लिंगमा खटिरा आयो र विनती गर्न जांदा नर्क लेप गरी पूजा गरिदिया । फेरि प्रजाहरू सबै जम्मा गरी सिपाही तुल्याई पुत्रसित विरोध गरी ३ शहरका जनहरू त्राहि-त्राहि भया । दामोदर पाँडे काजीले रणबहादुर शाह स्वामी बहुलाया, नेल हाल्नुपर्‍यो भन्या सल्लाह गर्‍याको सुनी आफ्ना नेवार प्रजा सिपाहीकन पकनाजोलमा पुगिरह्या । आफ्ना पाप निमित्त दामोदर काजीका डरले वाराणसी (काशी) मा प्राप्त हुंदा भया ।

स्वामी काशीमा रहँदा वेलामा माहिला महारानीले हुकुम चलायिन् । कुंभेश्वरमा पूजा बन्द भयाको महारानीले चाल पाई प्राउश्चित गराई पूजा चलाईदियिन् । बन्द भै

रह्याको खोली हेर्दा खटिरा आइरह्यो । यो निको तुल्याउन नसक्दा गाबहालका श्री कंठोपाध्यायले विचार गरी हेर्दा इलाज बनाइदिया र दिनको दिन निको हुँदै गै निको भयाको सम्बत् ९२० सालमा हो । सो अद्यापि छँदैछ ।

फेरि माहिला महारानीबाट हुकुम चलाउँदा नन्दिकेश्वर जगाई तलाउ, धर्मशाला, चौतरा बनाई ३ छप्परको ठूलो देवालय बनाई नित्यार्चन सदावर्त राखिदियिन् । फेरि गोरखनाथ आदि सबै देवता धेरैका स्थानमा ठूला ठूला घंट बनाई चढायिन् ।

यिनै सालका वर्षामा कीर्तिमान काजीले चौतरिया, काजी सर्दारदेखि घांसी, चिरुवादार पौवालीको पजनी गऱ्या र दुष्टजनहरूले नसही निज काजी कीर्तिमानकन दर्वारभित्र मारिदिया र रानी को प भै दुष्टजन खोजी पकडी यमलोक पठाइदियिन् ।

यस्तो धूम मचियो र स्वामी रणबहादुर शाह काशीमा ५ वर्ष बसी फेरि नेपाल आई दामोदर काजी पाँडेले यी बहुलाकन नेल हाली ल्याऊँ भनी चाँदीका नेल बोकाई लगेका चाल पाई थानकोटमा फेला पारी त्यहींदेखि दामोदर पांडे काजीकन कम्पनीका घेरा राखी ल्याई कान्तिपुर पुग्दा पछि आफ्ना रिपुकन अघिको रीस सम्झी मारिदिया । फेरि नाना तरहको सवाल गरी मूल मार्ग बन्धन गरी भरमुलुक कंप गराई आफ्ना मुलुकभरमा ब्राह्मणहरूको विर्ता किनुवा खेत पनि जफती गऱ्या । भरनेपालका देव देवताका गुठी पनि जफ्ती गरिदिया ।

फेरि शीतला काण गरी बालकहरू सबै वनवास गराया । ललितपुर गाबाहालका नीलकण्ठ नंदोपाध्यायले पचली भैरवका स्थानमा पुरश्चरण गराई ठूलो सांग्य गराई कांगडासम्म मुलुक जिती हुकुम चलाया । फेरि काँगडाका राजा संसारचन्द्कन धक्का गरी राजा भगाई चंचलचित्त भैरहंदा वेलामा भैमालमा सबै दुनियाँ ब्राह्मणहरू आई कर जोरी विनती गरी सलूक गऱ्या-हे महाराज ! न विषं विषमित्याहुर्ब्रह्मस्वं विषमुच्यते । विषमेकाकिनं हन्ति ब्रह्मस्वं पुत्रपौत्रकम् -भनी विनती गर्दा पनि विनती लागेन ।

यी राजाले सुनका असर्फीका टक मारी भरमुलुकमा चलाइदिया ।

काँगडासम्म हुकुम चलायाका कुमंत्रीले पश्चिममा धेरै राज्य घटाइदिया ।

कान्तिपुरका शहरविषे एक दिन अकस्मात् जंवू १ दक्षिण दिशाका ढोकाबाट आई मुलुक बजारबाट बडो बेगले दौडी सबै दुनियाकन देखाई हाहाकार गराई उत्तर दिशाका ढोकाबाट आफ्ना थानमा गयो । 'इदं कुराज्यविषये' नेपाल संवत् ९२६ साल वैशाख शुक्ल षष्ठीपर सप्तमी शनिश्चरवार महाभयंकर रात्रि । श्लोकेन किंचित् उक्त्वा-अयं रघुराजः अर्ज्याल लेफ्टेन द्विजेन चातुर्यं कृतं, सुकृतम्-ब्रह्मस्वहरणं, ब्राह्मणीगमनं, सर्वेषां जनानाम्

वास उन्मूलीकरणम्, मूलमार्गबंधनं, नाना देवता भ्रष्टकरणं, देवस्वहरणं, अगम्यागमनं कुलविषये कनिष्ठ भ्राता शेरबहादुर शाह दुष्टेन गोर्खाधिपतिं राज्यकरं तरबारप्रहारेण रणबहादुर शाहः शून्यं कृतम् । यस रात्रिभरमा धेरै भारदार दूध खाने बालक समेत दर्वारभित्र खर्च गरिदिया । गोर्खाधिपतिः पूर्णत चक्रवर्ती, सम्मान्य सेनापति भीमसेन प्रियानुजेन ? पनि समाया 'बलीयसी केवलमीश्वरेच्छा' ।

अस्य पुत्र गीर्वाण युद्धविक्रम शाह । रणवहादुर शाह स्वर्ग भयाका दिन श्री मछिन्द्रनाथ सुनधारामा पुऱ्यायाका रहेछन् । सुध्याईं नभयासम्म रथ त्यहीं थामी सुध्याईं सकेपछि विधिक्रमले गरी रथयात्रा चलाया ।

यी गीर्वाणयुद्ध राजा बडा शान्त मूर्ति हुनाले स्वामीजीबाट वनवास गराइदियाका बालखहरू सबै आफ्ना आफ्ना घर बोलाई राखिदिया ।

यी राजा बडा समदृष्टि, दयावन्त, वैष्णव धर्म प्रबल ब्राह्मणहरूकन मान्या भया । शास्त्र, वेद, पुराणहरू सुन्दा १ हिमवत्खण्डमा नेपालको ठूलो महिमा आया र वाराहपुराणमा विचार गर्दा नेपालभरको मुलुक, वागमतीबराबरको नदी, श्री पशुपतिजस्तो लिंग, गुह्येश्वरी जस्तो पीठ, शंखमूल बराबरको तीर्थ, पृथिवीमण्डलविषे अरू छैन भनी ठहराई शिवरात्रिका दिन व्रत गरी पशुपतिनाथका दक्षिण दर्वाजा गै देवपाटनका सर्व रकम संकल्प गरी पशुपतिनाथलाई चढाया । यी राजाले देवताकन बलिदान दी सोबाहेक अरू जप, ध्यान गर्दै खसी आदि मार हानी खान दर्वारभित्र माकुम गरिदिंदा पनि खसहरूले पनि राजाको हुकुम नमानी खाँदै गऱ्या । गुलेलीले भंगेरा परेवा नहान्नु भनी माकुम गर्दा पनि खसहरूले मिची गुलेली हान्न छोडेनन् र राजाले चाल पाई कायल गरी गुलेलीले हान्यालाई गुलेली भांची उठ्न नसक्ने गरी खांद भनी खांद्ने गर्दा यी राजाको पालाभर परेवा, भंगेरा मार्न माकुम भया ।

यी राजा शान्त मूर्ति हुनाले शीतलाको कारण गरी दर्वारभित्र प्रवेश भै सात रोजका दिन शून्य पदवीमा गया । यी राजा आर्यातीर्थ पुगी नेपाल संवत् ९३८ साल मार्ग सुदी १ रोज ७ का दिन शून्य पदवीमा गया ।

अस्य पुत्र राजेन्द्रविक्रम शाह । यी राजाले भस्मसेन थापालाई भर मुलुम रक्षक जनरल नाम गरी राख्या । यी राजाले टुंडीखेलमा लामपाटी बनाइदिया । मज्जदेवलमा ठूलो कोट बनाई कम्पु नाम राखी धेरै सिपाही फौज तुल्याई बदूक भण्डार क्रम गरी बसाया ।

नेपाल सम्वत् ९३८ साल वैशाख महीनामा मच्छिन्द्रनाथका यात्रा गर्दा रथमा बस्याका मच्छिन्द्रनाथका मुख सबै फुटी चाउरी परिगयो । मच्छिन्द्रनाथ बुगमती लग्याको छ दिन जेष्ठ शुक्ल १० शनिश्चरवारका तेस्रा प्रहरमा बडो उत्पात भूमिकम्प भै २१ पलासम्म भैगयो र धेरै घरवार देवालय असंख्य भत्की धेरै जीवजन्तु नाश भै गया ।

यसै सालमा दशैंलाई ल्यायाका बोका, राँगा भेडा पनि झुली धेरै मरिगया ।

काली गण्डकीमा पहिरो आई २ महीनासम्म थुनियो र तलतिर असंख्या भांडावर्तन गहना पाइयो । २ महीना त्यस्तो भएपछि आफै खोलिई गयिन् ।

यिनै साल यमपञ्चक प्रारम्भ भयाका रात्रिमा अहोरात्र १७ पल्ट भूमिकम्प भै १ महीनासम्म पनि अलि अलि गरी दिनको ७।८ रात्रिमा ७।८ फेरा भूमिकम्प भै गया ।

यिनै राजाले दुनियाँ रक्षानिमित्त धेरै धन धर्म गरिदिया । नेपालको उपदैव शान्त भै गया ।

फेरि यिनै राजाले श्री पशुपतिनाथ, श्री गुह्येश्वरीका प्रथम दर्शन गर्न जांदा अघि नभयाको दिन प्रति १।१ रुपैयां चढायाको रीत अझतक चलेको छँदैछ ।

यिनै राजाका पालामा महावारुणी जोग पर्दा लोकरक्षा निमित्त धेरै धर्म कर्म दान गरिदिया ।

फेरि यिनै राजाका पालामा जेनरल भीमसेन थापाले राजा बक्साई टुंडीखेलमा भीम भक्तेश्वर नाम वाणलिंग प्रतिष्ठा गरी अनौठा तरहको देवालय बनाई सुनको गजूर चढाई नाना तरहको सुन्दर बगैचा बनाई सुन्दर धर्मशाला बनाई सुनधारा सुन्दर तुल्याई धरहरा बनाई अति मनोहर अति रमणीय स्थल बनाई बाग नाम राखी चलाया ।

फेरि गोकर्णेश्वरमा पूल, घाट धर्मशाला बनाया ।

फेरि स्वामीका रानी त्रिपुरसुन्दरी देवीले गोकर्णेश्वरका देवालयमा तीन छप्परका छानामा माथिल्ला छाना सुनको बनाइदियिन् । फेरि यिनै राजाले बागमतीका किनारमा त्रिपुरेश्वर नाम राखी शिव स्थापना गरी देवालय घाट बनाइदियिन् ।

जनरल भीमसेन थापाले राजा बक्साई पाटन जाने बागमतीको ठूलो पुल, छाउनी जाने विष्णुमतीको ठूलो पुल बनाइदिया ।

टुंडीखेल गणबहालमा निज जनरलका भतीजा कर्णेल माथवरसिंह थापा बडा कर्णेलले पनि लगन टोलमा जग्गा किनी सुन्दर घर बगैचा बनाई सदावर्त गुठी राखी दिया । यिनले पनि सीपामा रणवीरेश्वर नाम गरी बाण लिङ्ग स्थापना गरी देवालय बनाइदिया ।

फटिकको गजूर पनि राखिदियाको छ । बडा बांका धर्मी हुन् । यिनले धेरै धर्म कर्म तीर्थ व्रत गरेका हुन् ।

जेनरल भीमसेन थापाले बोर्लाङ्मा फलामे सांघु र चुंकोटमा पनि ठूलो सांघु, घाट बनाई भीम भक्तेश्वर नाम राखी बाण लिङ्ग स्थापना गरी पत्थरका देवालय बनाई चौघडा समेत धेरै धर्मशाला बनाइदिया ।

कर्णेल उजीरसिंह थापाले १४ वर्षका उमेरमा अंग्रेजसङ्ग बडो लडाईं गरी अंग्रेजलाई जिती, जीतागडी भन्ने नाम राखी आयाको गढी अझतक छँदैछ । निज कर्णेल उजीरसिंह थापा १७ वर्षका उमेरमा नेपाल आई श्री पशुपति आर्याघाट पाई शून्य पदवीमा गया र निजका मुखेनी २ जना सती जांदा निज सतीहरूले छरी गयाको रुपैयां १,२५,००० भयो । यी उजीरसिंह थापा बहुत बांका शूरा जमामर्द बुद्धिमान् हुनाले सबैले निजलाई बुद्धिमान् ठहरायाका थिया ।

फेरि अंग्रेजसित पर्साका लडाईंमा घा गरी भित्र घा बांधी १८७२ सालदेखि नेपालमा अंग्रेज बोलाइ ठमेलमा राख्या ।

यिनै राजाले सुवर्णका सिंह खम्बायुक्त गरी श्री गुह्येश्वरीमा चढाया । मोहनचोक पुरानु भयाकोले रंगमहल गरी यथाक्रमले बनाया । फेरि श्री पशुपतिनाथका प्रतिमुखारविन्दमा छत्र बनाई चढाया । आफ्ना भरमुलुकका ब्राह्मणहरूकन झारा, बेठ, बेगार माफ गरिदिया ।

सम्वत् १८४९ साल पौष शुक्ल ११ का दिन सबै बगैचाका सुन्ताला जम्मा गरी एकै दिन १,२५,००० पुऱ्याई श्री पशुपतिनाथकन मुखारविन्दमात्र बांकी राखी भित्र खण्ड देवालय छोपिगयो । श्री पशुपतिमा र श्री गुह्येश्वरीमा आम्रात फल, स्थूल मेहेल फल आदि अनेक फलफूलहरू बारंबार चढाउँदै गर्थ्या ।

यिनै राजाका पालामा सम्वत् १८५० सालमा क्षय मास भै पौष मास क्षय भैगयो र पौष मास हुनलाई आश्विनमासमा दसहीं कर्म चलाया । यसै क्षय मासका फलले नेपालवासी मनुष्य जाति, छोडा बडा पशु पन्छी, जलवासी मत्स्य जन्तु धेरै मरिगया ।

यहांपछि यी राजाको वर्ष १८, चौतरियाको वर्ष ३८ जनरल भीमसेन थापाको वर्ष ५८, यस्तो अष्टाङ्ग संख्या मिल्दा विशूची नाम व्यथाले मन्त्री धेरै मनुष्य मरण भै गया र नेपालेश्वरी वत्सला देवीमा ब्राह्मणहरूले पुरश्चरण शान्ति गराउंदा देवीले शान्ति गराइदियिन् ।

फेरि यिनै वत्सला देवीको जात्रा हुन्या दिनदेखि ४ दिन अघिका एकादशीका दिन श्री स्वामिनी बडा महारानी स्वर्ग भयिन् र परंपराका रीत विचार गरी वत्सलेश्वरीका जात्रा चलाइदिया । अरू अरू पीठको जात्रा भएन । फेरि सुध्याईं सकेपछि ५ दिन बिताएर चैत्र सुदी १४ का दिन जात्रा चलाया ।

यी राजाका नुवाकोट र ठवहिलमा वारुद्खानामा वज्रपात भै जली गयो ।

फेरि सम्वत् १८५३ साल अधिक भाद्र सुदी १२ रोज सोमवार आषाढा नक्षत्रका दिन संध्याकालदेखि भूमिकम्प प्रारम्भ भै अहोरात्र भरमा ४२ फेरा उत्पात भयो । मच्छिन्द्रनाथ, जगन्नाथको देवालय भत्किगयो । श्री पशुपति, श्री गुह्येश्वरी, ललितपुरकी श्री चण्डेश्वरी, श्री पूर्णचण्डी, श्री मीननाथका देवालयको घण्ट पनि हल्लेन । यो भूमिकम्प उत्तर कुतीसम्म, पूर्व विजयपुरसम्म, पश्चिम गोर्खासम्म, दक्षिण मकवानपुरसम्ममात्र भयो । यी भूमीकम्पले ललितपुर क्वाछे बाहालका कौमारीका देवालय भत्की देवालयले कौमारी थिची आंगभरि घाउ पाकी भूमिकम्प भयाका २१ दिनपछि कौमारी गयिन् । कुमारी सरह कलश १ राखी कौमारीका मुकुट गहना कलशमा राखी काम चलाई दशैंमा सोही तुल्याइदिया । यस्तो उपद्रव श्यामसिंह राजाका पालामा भै गयाको थियो । सो अब यस सालमा पनि भयो । यिनै राजाका पालामा पचली भैरवका आगम कुम्भ जीर्ण भया र सुवर्णको नयां बनाइदिया ।

यी राजा ब्राह्मण पण्डितका सम्मान गरी शास्त्रबमोजिम गर्न्या हुन् ।

फेरि यिनै राजाका पालामा सम्वत् १८५५ साल आश्विन् शुक्ल पूर्णिमाका रात्रिविषे ठूलो पानी परी द्वितीया दिन टीकाभैरव बगाई लगी बागमतीका पुल पनि ढल्कन तयार भयाको चोभारका नागले थामी निज नागले आसन गरी राख्याको पत्थर आधा पारी खेतमा राख्याको कुन्यू धेरै बगाई लग्यो । पहाड पनि धेरै पहिरो गई बगाई लगे । प्रभावती, विष्णुमती, रुद्रमती, चक्रमती, भानुमती आदि सबै खोलाबाट माथि गई असरङ्गीका (?) नागले धेरै जग्गा बिगारिदिया । बागमतीका नागले शङ्खमूलदेखि माथि जान दियानन् । शङ्खमूलदेखि माथितिर बागमतीतिर सक्यानन् ।

फेरि यस वर्षदेखि ४ वर्षपछि दशैंमा ठूलो पानी परी अघिकै जस्तो उपद्रव गरी टीकाभैरव बगाई लग्यो ।

सम्वत् १८५८ सालमा शङ्खमूलका कोटेश्वर लिङ्ग १० घडी दिन चढ्दा १० पलासम्म हल्लिरहेको सबै दुनियांले देखी आश्चर्य मानी राजासङ्ग विनती गर्न जांदा राजाबाट केही हुकुम भएन । उसका १० दिनपछि यी राजाका कान्छा साहेबज्यूकन पाटनका भाजुमान

वैद्यले  इलाज चढाउंदा इलाजमा विष पारी सो विष परेको इलाज परी २।४ घडीमा यी कान्छा साहेबज्यू शून्य पदवीमा गया । सबै कारणको तत्व बुझी निज भाजुमान वैद्यलाई बडो सासना गरी वैद्यका परिवारसमेत सासना गर्दा भीमसेन थापाले र एकदेउ वैद्यलेदियाका इलाज चढाउनू भनी अह्राया र मैले चढायाको हो भनी पोलिदिया र भीमसेन थापाका परिवार गोतियारसमेतलाई नेल हाली बन्धनमा राखी तिनीहरूको सर्वस्व सर्कार दाखिला गराया । फेरि भाजुमान वैद्यलाई चारपाटे मुडी पठाया । यस्तो गर्दा पनि जनरल भीमसेन थापा एकदेउ वैद्य कायल नहुंदा एकदेउ वैद्यका भाई एकसूर्य वैद्यले केही औषधि बनाई श्री जेठा बडामहारानी साम्राज्यलक्ष्मीकन चढाउंदा महारानीका मनमा शङ्का परी कोही एक भारदारकन औषधी खुवाई हेर्दा मरिगया र श्री जेठा महारानी कोप भै वैद्यको २ भाईकन धेरै सासना गरी नेल हाली सबै जातको नर्क राखी टुंडीखेलमा नर्ककुण्ड बनाई सोही नर्ककुण्डमा डुबाई दिनप्रति यस्तो सासना गरी हिलम्बु पठाइदिया । अघिल्ला सालमा मारिदियाको भाजुमान वैद्यको परिवार सबैकन नाक काटी छाडिदिया । छोरा भतीजाहरूलाई कैदखानामा राखी सुताई पाखीले छोपी छातीमा मक्कल राखी खोर्सानीको धुआं खुवाई २०।२५ दिनसम्म यस्तै सासना गराया । यहींबाट भागी जाउंला पोखरीमा फाल हली मऱ्या ।

भीमसेन थापा जनरलका परिबारहरू सबैको मत्तो एकै-एकै हो भनी फेरि नेल हाली बंघनमा राखिदिया । आज टुंडिखेलमा गैह्रपल्टन बोलई तिम्री कान्छी मुखेनीलाई भंडारा दिन लागे भनी राजा-रानीबाट हुकुम भयाको कुरा कुलराज पांडे दलबहादुर पांडेले भीमसेन थापालाई सुनाउँदा भीमसेन थापा जनरल आफ्ना गला आफैले रेटी मरिगया । यी थापा मऱ्याका ३ महीनापछि कुमारी चोकका सभामा बसिरह्याका विचारी गुणकर्ण उपाध्यायलाई झगडिया बोलाई कोटीलिंगका कृष्णेश्वर उपाध्यायलाई कुखुरीले हानी मारिदिया । यस्ता उपद्रव सबै भैगया र यिनै राजाले विचार गरी शान्ति स्वस्ति गरी भिमसेन थापाका सबै परिवारकन छाडिदिया ।

सम्वत् १८५५ साल आषाढ सुदी २ शुक्रवार रात्रिका १२।१३ घडी जांदा ठूलो पानी परिरह्या वेलामा श्री हरिसिद्धि माईका गजूर टुप्पामा आगो ज्याला जस्तो तेजको ज्योति बत्ती १।२ घडी रह्याको हो । आदि च्यामुल्माले देखाई त्यस दिनदेखि ९ दिनपछि आषाढ शुक्ल शनिश्चरवारका दिन भीमसेन थापा जनरलले गला सेरे । उसका १० दिनपछि श्रावण कृष्ण तृतीया सोमबारका दिन ६।७ घडी बांकी छंदा भीमसेन थापा मरिगया । यिनै थापा मर्ने २ दिन अघिदेखि २ दिनपछिसम्म दिनमा ताराको दर्शन भैगयो ।

फेरि यी राजाका पालामा महावीर कुलदीप भयाका सुब्बा कुलानन्द भाले राजा बक्साई श्री पशुपतिनाथकन पश्चिम, उत्तर, दखिन बाहिर खंडमा नवसंख्या चांदीका दर्वाजा बनादिइयाको सम्बते १८९१ साल माघ सुदी १० रोजमा लोकमा धन्य कहलाया ।

फेरि यी राजाले कौनै अरू राजाले नजान्याको नेपालका वृद्ध वृद्धा बोलाई राजाका हजूरमा हनूमानढोकामा राखी यथाक्रमले भोज गराई वस्त्र दक्षिणा दीकन यी राजाले वृद्ध वृद्धाको असंख्या आशीर्वाद लिया । वृद्धावृद्धको वर्ष संख्या ७० देखि १०० वर्षसम्मका स्त्रीपुरुष जम्मा हुन आया, श्रावण संक्रान्तिका दिनमा ।

फेरि यी राजाले आर्यघाटमा जीर्णोद्धार गरी सतलसमेत बनाया । सम्बत् १८९७ साल चैत्र शुक्ल अष्टमी, वृहस्पतिवारका दिन काठमाडौंका सेता मच्छिन्द्रनाथ रथमा राखी जात्रा गरी ल्याउँदा रानीपोखरीका पूर्वपट्टिका बाटोमा रथ पुग्दा रथका मैंमनि खस्या । पूर्णिमाका दिन ठूलो बतास आई नुवाकोटका भैरवको सुनको छानाको सुनको पाता दुवैपट्टिका समेत बतासले उडाई लगी ६।७ पाता उडाई असौ बारीसम्म पुऱ्याया । वैशाख शुक्ल तृतीया सोमबारका दिन सुरेन्द्रैविक्रम शाहका विवाह गर्न कान्तिपुरदेखि साइत गरी बालाज्यू पुगी जन्ती पर्सन तयार भयाको वेलामा ठूलो बतास आई ठूला ठूला असीना पानी परी धूमधाम भयो । यसै बतासले ललितपुरका दिगुतलेका छाना ५।६ सुनका पाता उडाई भंडारखालसम्म लग्यो । फेरि खास्ती चैत्य पूर्व र दक्षिण दुइपट्टि उखेली खसालिदियो । वैशाख शुक्ल ७ शुक्रवारका दिन मच्छिन्द्रनाथ सुनधारा पुगी पश्चिम मोहडा हुंदा पांग्रा फेराउँदा रथमाथिका नामोल (?) राख्याका काठ

भांची खसी भैमा पर्न गया । मीननाथको पनि रंग उडिगया । श्री सुरेन्द्रैविक्रम शाहका विवाहका दिन बालाज्यूदेखि महामारी प्रवेश भैं कसै कसैको कपाल दुःखी कोही मुटु खायो भन्दै कोहीले भाडा बांता गरी कोही हिंड्दा वाक्-वाक् गर्दै मरिगया । सो बखत कान्तिपुर शहरमा दिनको १०० सम्म मरिगया ।

भीमसेन थापा जनरलले आफ्नो गलामा आफैले सेरी मऱ्यापछि पांडेहरूले मुखत्यारी चलाउनलाई कहिले रणजंग पांडेले पाउन लाग्या, कहिले अरूले पाउनन् भनी वर्ष दिनसम्म रहंदा यिनै पांडेहरूले नपाउँदा जेठा गुरुज्यू रंगनाथ पंडितले ९६।९७ सालमा मुखत्यारी काम चलाया । संवत् १८९७ सालमा पल्टन गैह्र सिपाहीहरूको खान्गीमा रैबन्दी गर्नु भनी यिनै पांडे र गुरुज्यूहरूको कौशल हुंदा अघि भिमसेन थापाबाट बांधियाको खानगीमा रैबन्दी गऱ्या, यिनै भारदारहरूलाई नमारी छोड्न्या छैन सिपाही ८००० पल्टन गैह्रले एकै कतो बांधी टुंडीखेलमा गैह्र पल्टन शामेल भै बसिरहेका थिया ।

त्यस बखतमा २ रात २ दिनसम्म पानी परी अधोर झरी लाग्यो र २ रात र दिन त्यहीं बसी उसको भोलिपल्ट गैह्र सिपाहीहरूले बांधी पहिले लैनमा गै अंग्रेजलाई मारी यहाँपछि भाइ-भारदारहरूका घरघरमै गै मारुँला भनी लैनमा जाइलाग्दा अंग्रेजले अघिबाटै थाहा पाई ब्रमंडीका हुलमा थानामा भागी लुकी रह्यो र लैनमा अंग्रेजलाई धपाई त्यहाँबाट फर्की नारायणहिटी चौतरिया पुष्कर शाहका घरमा लूटपीट गरी झ्याल ढोका फोरी बिछ्यौनामा आगो सल्काई त्यहाँबाट फर्की शहरमा आई कुलराज पांडे, रणजंग पांडे, रंगनाथ गुरूज्यूका घरमा र अरू भाइ-भारदारका १०-१५ घरमा झ्याल-ढोका फोरी मालमत्ता झ्यालबाट फाली दोसल्ला तेल-घिउमा डुबाई आगो लाई अरू धेरै नै नोक्सानी गर्दा यिनै भारदार, यिनका मुखेनी छोरा छोरी चाकर बाकरहरू कोही झ्यालबाट कोही छानाबाट फाल हाली भागी गै लुकि रह्याका थिया । यस्तो  धूमधाम भैसकेपछि फेरि गैह्र सिपाही टुंडिखेलमा शामेल भै बसिरह्याका थिया । उसका भोलिपल्ट श्री ६ महाराजाधिराज राजेन्द्रविक्रम शाहबाट हात्तीमा चढी टुंडीखेलमा सवारी भै गैह्र पल्टनका सिपाहीहरूलाई सुनाया-तिमीहरूको खानगी अघि जेनरल भीमसेन थापाले जसो बांधेको छ सोहीबमोजिम तिमीहरूलाई छंदैछ । यसमा रैबन्दी हुंदैन सनदको लालमोहर यही हो भनी आफ्ना बाहुलीको पन्जाको छाप लगाई बाची सुनाउंदा गैह्र पल्टनले पछि लागी राजालाई दर्वारमा सवारी भित्र्याई कोट कोटमा बन्दूक राखी आफ्ना घर घर गया ।

फेरि १८९८ सालमा मुक्तियारी चौतरिया फत्तेजङ्ग शाहले पायापछि श्री ५ महाराजा राजेन्द्रविक्रम शाहका दुइवटी रानी मध्ये साम्राज्य लक्ष्मी देवी शून्य पदवीमा गै गोर्खाभर राज्यमा दुनियांहरूलाई वर्ष दिन वर्षी बार्न लाया ।

उसै सालमा श्री ५ श्री ५ महाराजाधिराज राजेन्द्रविक्रम शाहले जङ्गबहादुरलाई लगन टोलका इनारमा फाल हाल भन्ने हुकुम भै फाल हाल्या । फेरि त्रिशूली गङ्गामा पनि फाल हाल्न लगाया । २,४ हजार बक्स पाया । फेरि सर्दार मान पनि पाया ।

त्यहांपछि जेनरल भीमसेन थापालाई बेहुकुममा यिनै छुल्याहाहरूले ज्यान मराया भनी कुलराज पांडे १, करबीर पांडे २, रणजङ्ग पांडे, कनकसिंह महत ४,  इन्द्रवीर बस्न्यात् ५, रणवम थापा ६, जनालाई नेल ठोकी छाउनी सिलखानामा लगी थुनी राख्याको थियो । लाहोरमा गयाका जङ्गी जेनरल माथवरसिंह थापालाई गोर्खा सरकारबाट तिम्रा जेठा बाबा जनरल भीमसेन थापालाई नभयाका कुरा लगाई ज्यान मार्न्या छुल्याहाहरूलाई पनि यहां बन्दीखानामा थुनिराख्याको छ, तिमीले पनि चांडै चांडे गरी आउनू भन्या बोलाहटको लालमोहर जांदा लाहोरका राजा रणजीत सिंहसंग बिदा भै सम्वत् १८९९ साल फाल्गुण

महीनामा हात्ती, घोडा, ऊंट, जीव जन्तु र शालदुशाला ताश किनखाफ जात जातका बिरुवा, चरा, सारस, मुजूर इत्यादि मजबूत सौगात ल्याया । नेपालभरका छोटा बडा लोग्न्या स्वास्नी सबैले बुगमतीदेखि शहरसम्म दोहरा बसी तमाशा हेर्न गयाका थिया । निज माथव।सिंह थापाले हात्ती चढी ढाल तरवार भिरी गैह्र दुनियां छोटा बडालाई भला कुशल वार्ता गरी दर्वारमा पुगी श्री ५ महाराजाधिराज राजेन्द्रविक्रम शाहको दर्शन गरी धन्य धन्य माथवरसिंह थापा भनी कहलाई अघि सर्वस्व गऱ्याको पनि फिर्ता गराई पाया ।

त्यहांपछि मुख्तियारी काम चौतरिया फत्तेजङ्ग शाहलाई खोसी माथवरसिंह थापालाई प्रायमिस्टर (प्राइममिनिस्टर) नाउं राखिदिया । एकदेव वैद्यको र एकसूर्य वैद्यको पाटनका भाजुमान वैद्यको पनि सर्वस्व फिर्ता गरी आफ्ना नाम पदवी पनि पाया । यिनै जनरल भीमसेन थापालाई नभयाको हामीले कुरा लगाई ज्यान मरायाको हो भन्या कायल गराई कुलराज पांडे १, रणजङ्ग पांडे २, करवीर पांडे ३, कनकसिंह महत ४, इन्द्रवीर बस्न्यात् ५, रणवम थापा ६ जनालाई सम्वत् १९०० साल वैशाख वदी ३० रोजका दिन विष्णुमती पारी भाचाखुसीमा लगी काटिदिया । भोलिपल्टका दिन रणजङ्ग पांडे साह्रै विरामी भै असाध्य भयाका हुनाले झुत्रो १ पाखीमा राखी चारैछेउ चारै जनालाई समात्न लगाई झ्याली पिटाई पुर्णेश्वरमा फाल्न लगाया, उसै दिन मरिगया ।

यिनै सालमा छाउनी सिलखानाका घर भत्काई टुंडीखेल छाउनी घर बनाउनलाई राजालगायत भाइ भारदार सिपाही गैह्रले ईट झिंगटी छाउनीबाट बोकी टुंडीखेलसम्म ओसार्न लगाया । फेरि योलघामा रणमुक्तेश्वर विष्णुमती पारी भीमभुक्तेश्वरका शिवालय बगैंचा बनाई शिव स्थापना गरिदिया ।सम्वते १९०१ सालका मङसीर महीना मध्येसका तऱ्यानीमा पथरघट्टासम्म दर्वारका राजा रानी गैह्र अरू भैभारदार सिपाही जङ्गी, निजामती गैह्र सवारीका साथ जानू भन्या हुकुम भयाको थियो र सवारीमा पलटनका जमदार गङ्गासिंह, सिपाही जना १७ ले केहीं केही बोल्न लाग्या भनी वानादारहरू लगाई काटी मारिदिया । त्यहांबाट फाल्गुण महीनामा सवारी फिरी केही दिनमा माथवरसिंह थापा प्राय (प्राइम?) मिनिस्टरले चलाया ।

१९०२ साल वैशाख सुदी ११ रोजका रात्रि घडी १२।१३ जांदा श्री ५ कान्छा बडामहारानीका गाथमा आराम भयान र चांडो आयनू भनी डाक्न पठाई हनूमानढोका पञ्चझ्याल राजाका खोपीमा दोनाली बन्दूकले हानी मारिदिया । उसका भोलिपल्ट माथवरसिंह थापालाई सिपाहीले बोकाई पशुपति आर्यातीर्थमा लगी पोलिदिया ।

यिनै माधवरसिंह थापा मर्नु ४ दिनअघि सिम्भूका वनको रूख र पशुपतिका वनको रूख ठूलो बतास आई सडकमा रह्याको रूख ढलिदियो । तलेजूका देवलका सुनका छानाको पाता उडाई ४।५ पाता मखनटोलका गल्लीमा पुर्‍यायो ।

यिनै थापा मर्‍यापछि ४ जनरल गर्‍या-गगनसिंह १, अभियान सिंह राना २, जङ्गबहादुर कवर ३ जनालाई जनहीं ३।३ पल्टन तैनाथी गरी बांकी पल्टन गैह्र तैनाती गरी चौतरिया फत्तेजङ्गशाहलाई मुख्तियारी गरी दी केही दिन चलाया । सो चलायाको १७ महिनापछि १९०३ साल आश्विन वदी १० रोजका रात्रि २।४ घडी चढ्दा जनरल गगनसिंहले राजा रानीको चाकरी गरी आफ्ना घर गै पूजा कोठामा सन्ध्या गर्न गयाकोलाई आंखेझ्यालबाट बन्दूकले हानी अचकिल्टो पार्‍याको राजा रानीबाट थाहा पाई श्री ५ कान्छा बडामहारानी बहुतै कोप भै उत्तिनै खेरै उर्दी दी सबै भाइ भारदारहरूलाई कम्पूका कोतमा शामेल गराउनू भन्या भै शामेल गराई राख्याका थिया । त्यहांपछि गगनसिंहलाई बन्दूकले हानी मार्न्या पत्ता नलगाई तिमीहरू गैह्र भारदारहरूको कौशल गरी रह्याका रातको ९।१० घडी बांकी छंदामा चौतरिया फत्तेजङ्ग शाह, जेनरल अभिमानसिंह राना, चौतरिया खड्गजङ्ग शाह, अरू अरू चौतरिया ७।८ जना र काजी, सरदार, मेजर, कप्तान, लप्टन सुब्बाहरू गरी जम्मा जना ६६ लाई त्यसै कम्पुकोतका शिशामहलमात्र बाहिर गरी जङ्गबहादुरका ७ भाईले काटी बन्दूकले हानी मारिदिया । उसका भोलिपल्ट कोही पाटन जान्या बागमती पारी बाटामा, देवपाटन जाने धोवीखोलामा गरी २।३ जनालाई काटी मारिदिया । मुर्दा आफ्ना पल्टनका सिपाहीहरूले बोकी पशुपति आर्याघाटमा लगी पोलिदिया , सोही काटियाका भाइ भारदारको सर्वस्व ली स्वास्नी, छोरा छोरी, कमारा कमारीलाई मध्येसतर्फ धपाया । यस्तो धूमधाम भयापछि मुख्तियारी पदवी प्राइम मिनिस्टर नाउं राखी २ दिनपछि जङ्गबहादुरले पाया ।

सोही साल कार्तिक महीनामा फेरि यिनै जङ्गबहादुरलाई दगा दी मारूं भन्या भै श्री ५ कान्छा बडामहारानीबाट हुकुम दी दर्वारभित्र नङ्गी तरवार ली ठाउं ठाउंमा लुकिरह्याका थिया । सो मार्न्या खबर अघिबाटै थाहा पाई आफ्ना ७ भाइ भारदार आठपहरियाहरूले कसैले बन्दूक, कसैले खुकुरी, कसैले गोली भर्‍याका बन्दूक, नङ्गा तरवार ली दर्वार जांदा यङ्गाल टोल नवहील गणेशथान बम्बाहालका बाटोनेर काजी वीरध्वज घोडा चढी डाक्न आयाकालाई भेट्टाई त्यहीं बन्दूकले हानी धीरशमशेरले मारिदिया । त्यहांबाट पनि दर्वारभित्र पसी पल्टनका सिपाहीहरूले दर्वारबाहिर घेरा दिन लगाई आफूहरूलाई दगा दी

मारूंला भन्या जति काजी, सर्दार, कप्तान, सुब्बाहरू जना १७ लाई बन्दूकले यही दर्वारभित्र खुकुरी तरवारले हानी मारिदिया ।

त्यहांपछि मंसीर महीनामा श्री ५ बडामहारानी र साहिंला साहेबज्यूहरूलाई अंशवण्डाको भनी १३ लाख रुपैयां ली काशी बस्न पठाया । उसका केही दिनपछि श्री ५ महाराजधिराज राजेन्द्रविक्रम शाह पनि काशी बनारसतर्फ सवारी भयो । त्यहीं बनारसमा २।३ महीना राज भै नेपालतर्फ आउनलाई फिरिबक्संदा अलौमा आइपुग्दा भगुवा भारदारहरूको कुरा सुनी जङ्गबहादुरलाई दगा दी मारी आउनू भनी बराबर लालमोहरको सनद दी मानिस पठाउंदा बदमाश उल्लू भनी समाती कसैलाई काटिदिया, कसैलाई झुण्ड्याई मारिदिया, कसैलाई पल्टनका किल्लामा छाडी खबर पाया र काजी बमबहादुर राणालाई अख्तियार गरी २ पलटन खटाई पठाउंदा अलौमा रह्याका भगुवा भारदार सबै भागी गया । १।२ जना राजाका साथमा खैरख्वाहीका निमित्त रह्याका अघिका र यहांबाट गयाकालाई समेत गरी ५११६० जनालाई पल्टनका सिपाहीहरूले बन्दूकले हानी खुबुरीले काटी मारिदिया र राजालाई थर्काइदिंदा राजाका पूजा गर्न्या सालिकराम बोकिराख्ने अघि जो पृथ्वीनारायण शाहलाई मकवानपुरबाट ल्याउन्या राधावल्लभ काजीका नाती चन्द्रकान्त पण्डित अर्ज्यालाई देवता बोकेकोमा गुरुज्यू हुने यही हो भनी नांगो पारी पाता फर्काई काट्न तयार हुदा मेरा देवता बोक्ने बाहुनलाई नमार केही कसूर छैन भन्दा बाहुन बांची गयो । त्यहांपछि राजाको सवारी नेपालतर्फ फिराया ।

यही १९०४ सालका जेष्ठ वदी १३ रोजमा श्री ५ महाराजधिराज सुरेन्द्रविक्रम शाहलाई गादीमा राखी हुकुम चलाया । आफूहरूलाई पनि राणाजी भन्या पदवी गराया ।

फेरि यिनै सालमा महामारी प्रवेश भै हैजाका बेथाले उखाल पखाल भै नेपाल शहरमा रोजको २।३ सयसम्म मरिगया र शान्ति स्वस्ति गर्नु भन्ने र टोल टोलना तोप पडकाई ठूलो खट बनाई १ मुरी भात राखी उहीमाफिक अरू सरजाम बनाई मानिस १ समेत राखी कसाही बाजा, कहार बाजासमेत बजाउन लगाई देश घुमाई टेकुदोभानमा बलि फाल्न पठाया र अलि अलि शान्त भै गयो । दसैंमा शान्त भै गयो ।

यिनै जङ्गबहादुर प्राइममिनिस्टरले १९०७ सालमा आफ्ना माहिला भाइ कर्णेल बमबहादुर राणालाई जेनरल ना गरी मुख्तियारी काम सौंपी आफू अंग्रजसङ्ग सलूक गरी कर्णेल जगते शमशेर राणा, कर्णेल धीरशमशेर राणा बहादुर २ भाई र अरू भैभारदार सिपाही केटा खवास्या गैह्र जम्मा ३१ जना विलायत पुगी अंग्रेजका बादशाह भिक्टोरियासङ्ग मसलाकात गरी धन्य जङ्गबहादुर प्राइममिनिस्टर भनी कहलाई १ महीना

त्यहीं बेलायतमा बसी त्यहां बादशाहले बिदा दी चीजबीज ली फर्की आया । बादशाहसित मुलाकात गर्ने दिन पोशाक धेरै सल्लाह भै सफेद पोशाक लायाको अति बुद्धि पुऱ्याया ।

फर्कदा १९०८ साल फाल्गुण महीनामा नेपाल आइपुग्दा पछि ४।४ पल्टन दी जगत् शमशेरजङ्ग राणालाई पाटन शहरमा र धीरशम्शेर राणालाई भादगाउंमा राखी अघिका दर्वार भत्केबिग्रेको बनाउन लाया ।

फेरि दर्वारमा रह्याका तोसाखाना, कंडेल चोक ठाउं ठाउंका रकम खारेज गरी ऐन बनाई राजकाज चलाइरहंदा माहिला साहेबज्यू नरेन्द्रविक्रम शाह, माहिला जनरल बम बहादुर राणा, साहिंला जनरल बद्रीनरसिंह राणा, जनरल जयबहादुर राणा ४ ले सल्लाह गरी जङ्गबहादुरलाई दगा दी मारूंला भन्या मतलब भयाको पछि माहिला जनरल बमबहादुर राणाले दाज्यूसङ्ग गै पोलिदिया र महिला साहेबज्यू नरेन्द्र विक्रम शाह, साहिंला जनरल बद्रीनरसिंह राणा, जनरल जयबहादुर राणा जना ३ उत्नि खेरै पक्री ल्याई कम्पुका कोतमा राखी कुटपीट गरी मारूं भन्या गोत्र हत्या लाग्न्या भयो भनी अंग्रेजसङ्ग सल्तनत बांधी प्रयागका किल्लामा कैद गर्न पठाया । ४।५ वर्ष कैद गरी फेरि झिकाई साहिंला जनरल बद्रीनरसिंहलाई पाल्पा अड्डा पठाया । माहिला साहेबज्यूलाई र जनरल जयबहादुरलाई पहिले नेपालमा राख्या ।

त्यहांपछि यिनै जङ्गबहादुर प्राइममिनिस्टरले रानीपोखरीमा र टौदहमा केही दौलथ होला भनी शंकाले पल्टनका सिपाही लगाई कुलो खनाई पानी सुकाई हेर्दा केही पायानन् ।

फेरि १९११ सालमा सिपाहीले र आफूले ५ सरकारको वैरी स्वाहा गर्नैपर्छ भनी धेरै जना सिपाही लगी भोटसंग ठूलो लडाईंगरी जिती ह्लासाका सेते काजी भन्नयाले नेपाल आई "वर्षको १० हजार रुपैयां कर तिर्छु" भनी बन्दोबस्त बांधी गयाको अझसम्म वर्षको १० हजार रुपियां कर लियाको छंदैछ । यी सेते काजी नेपाल आउंदा अनेक तमाशा बांकी नराखी देखाई पठाया । भोटमा यी जङ्गबहादुरलाई उड्न्या काजी भनी नाउं चलाया । सो लडाईंमा धेरै रुपैयां खर्च भयो भनी आफ्ना गोर्खा राजभरमा त्रिखंडी भनी मुलुकभर जागिरिया साथ गैह्र दुनियालाई बिर्ता गुठीबाट रुपैयां भराई ढुकुटी दाखिल गराया ।

श्री ५ महाराजधिराज सुरेन्द्र विक्रम शाहका छोरी मैयांहरू पनि श्रीका छोरा साहेबज्यूलाई पनि विवाह पात पनि चलाया ।

१९१३ सालमा महामारी प्रवेश भै हैजाका बेथाले नेपाल पहाड पर्वत मधेसमा असंख्य मर्न गै हाहा परी नेपालमामात्र रोजको ३।४ सय मर्न जांदा १९०४ सालमा गऱ्याबमोजिम टोल टोलमा तोप, गल्ली २ मा बन्दूक पड्काउंदा महामारी कोप भै झन

धेरै मर्न जांदा सरकारबाट टोलटोलमा देवताहरू पूजा गर्नू भनी रुपैयां दी टोलटोलमा पूजा पाठ लगाउंदा नामेट भै गया ।

वैशाख सुदी ५ रोजका दिन आफ्ना सालीक सुनको बनाई टुंडीखेलका माझमा ढुंगाको ठूलो मण्डप बनाई त्यहीं स्थापना गऱ्या ।

कास्की लम्जुङ्को राज्य गरी राजा पद्वी नाउ राखी श्री ५ सरकारबाट जङ्गबहादुर प्राइममिनिष्टरलाई दिया । त्यस दिनदेखि श्री ३ महाराज भनी नाउं चलाया । मुख्तियारी काम आफ्ना भाई बमबहादुर राणालाई दिया ।

केही दिन चलायापछि १४ साल ज्येष्ठ सुदी ३ रोजका दिन प्राइममिनिस्टर बमबहादुर राणा शून्य पद्वीमा गया र फेरि मुख्तियारी काम काहिंला भाई कृष्णबहादुर जेनरलले पाया ।

यही सालका ज्येष्ठ सुदी १५ रोज १ का दिन श्री मछिन्द्रनाथ जाउला पोखरीबाट बुगमती लैजादां रातका २।३ घडी जांदा भूमिकम्प भै २ घडीभित्र ५ फेरा हुंदा आधारातमा १ फेरा जम्मा ६ फेरा गयो ।

यही सालमा अंग्रेजलाई हिन्दुस्तानमा आफ्नै फौजका काला सिपाही उठी ठाउंठाउंमा अंग्रेज मारी हाहा पारि राख्दा श्री ३ महाराज जङ्गबहादुरसङ्ग मदत मागी २२ पलटन र आफूसमेत गै कालासङ्ग ठाउंठाउंमा लडाईं गरी धेरै फौज मारी तोप खोसी लखनउ, जिती हीरा मोती लूटपीट गरी अंग्रेजलाई बाहाली गराई धन्य जङ्गबहादुर राणा कहलाई असंख्य खुशी गराया र अंग्रेजले २।३ लाख रुपैयां उठ्ने नयांमुलुक पश्चिमतर्फ १९१७ सालमा दियाको अझतक छँदैछ ।

फेरि १९१९ सालमा श्री मच्छिन्द्रनाथको १२ वर्षे मेलामा बुगमतीबाट रथ यात्रा गरी ल्याउंदा वैशाख सुदी ३ रोजका दिन त्यहीं बुगमतीका उकालोमा घिसारी ल्याउंदा बायांपट्टि रथ ढली गयो र फेरि १५ दिनपछि अर्को रथ तयार गरी जात्रा चलाउंदा ज्येष्ठ वदी १० रोज ६ का दिन लगन जात्रा गरी माजुसीका १ फेरा घुमाईराख्याका उसै रात्रिको ८।९ घडी चढ्दा अकस्मात् रथमा आगो लागी २ घडीभित्र यी रथ देवतासमेत जली गया र पछि देवता झिकी यथाक्रमले शान्ति स्वस्ति गरी अर्को जात्राको रथ बनाई चलाया ।

फेरि यिनै राजा जङ्गबहादुरले श्री पशुपतिनाथका देवालयका सिंडीमा पीतलको ढलौटे ईट बनाई छापिदिया । चारै दर्वाजाका अगाडि ठूला ठूला ढलवटका ४ पानस बनाई बत्ती बाल्न्या गुठीसमेत राख्याको अझतक छँदैछ । मृगस्थलीमा पनि ठूलो देवालय बनाई

ढलवटका विश्वरूप स्थापना गऱ्या । प्रतिष्ठाको आहुतिका समेत नित्यार्चन गुठी राखिदिया ।

यिनै राजाका काहिंला भाई कृष्णबहादुर राणा १९२० साल श्रावण वदी २ तृतीया ९ रोज ७ का दिन शून्य पदवीमा गया र मुख्तियारिया काम ठाहिंला भाई रणोद्दीपसिंहलाई दिया ।

१९२२ साल फाल्गुण वदी १० रोज २ का रातसम्म ठूलो पानी परी सारा नेपाल खाल्डा र पहाड पर्वत घुंडा तिघ्रा तिघ्रासम्म हिउं परी ८।१० दिनसम्म नपग्ली रहन गयो ।

फेरि २३ साल ज्येष्ठ प्रथम सुदी ९ रोज ४ का दिन घडी ९ बांकी छंदा ठूलो भूमिकम्प भयो र फेरि राजा जङ्गबहादुरले श्री गुह्येश्वरीमा अघिका चौघडा पर्खाल भत्काई नयां ठूलो गजको ढुंगाको पर्खाल बनाई भित्र खण्डका थानमा कुण्ड भैरव आदि सुनका पाताले छापीकन ठूला नौरत्न जडाउ गरी चढाया । चारैतिर चांदीका शेरका मूर्तिका पानस श्री ५ कान्छा बलिहद्बाट चढाया ।

सम्वत् १९२३ सालमा श्री मछिन्द्रनाथका जात्रा वैशाख सुदी ९ रोज ६ का दिन गाबाहालबाट जात्रा चलाई दर्वारनेर यो रथ पुग्याको थियो । त्यसै दिन केही रात गयापछि श्री मछिन्द्रनाथका रथमा श्री मीननाथका रथमा अकस्मात् आगो सल्की जलिगया र देवतामात्र केही भयानन् । झिक्न पाई केही शान्ति स्वस्ति गरी अर्को रथ बनाई जात्रा चलाया ।

फेरि यिनै राजा जङ्गबहादुरले २५ सालमा भादगाउं जान्या धोबीखोलानेर पुल ३ र थानकोट जान्या विष्णुमतीको पुल १, सांखु जान्या बागमतीको पुल १, बुगमती जाने नखुको पुल १ गोदावरी जान्या बाटोमा पुल १ जम्मा पुल ८ र ठाउं ठाउं नयां सडक बनाया । थापाथलीमा पनि ठूला ठूला हवेली रङ्गशाला बगैंचा, घांटहरू बनाया । शहरका दर्वारमा पनि ठूला ठूला हवेली बनाया । फेरि कालमोचनमा पनि ठूला देवालय बनाई धातुका श्री लक्ष्मीनारायण मूर्ति स्थापना, घाट चैघडा बनाई अघि टुंडीखेलमा राख्याका सिंहहरू ४ रै आफ्ना सालिकसमेत ल्याई देवालयका चारै कुनामा सिंह राखी आफ्ना सालिकअघिल्तिर खम्बामा राखिदिया ।

दान गर्दामा पनि वेला वेलामा गौदानको जाहुति, यज्ञ, तुलादान, ब्राह्मणभोजन बहुतै गर्थ्या । गरीब प्रजामा पनि दृष्टि खूबै थियो ।

शिकार खेल्दामा पनि १९०६ सालदेखि १९३३ सालसम्म वर्ष २८ खेल्दै थिया । बर्सेनि मध्येस तऱ्यानि, चितौन, मोरङ, नयाँ मुलुक, महाकालीसम्म हात्ती खेदा गर्दा ठूला

ठूला हात्ती धेरै पकडी गैंडा, बाघ, बन्देल इत्यादि वनजन्तु असंख्य पक्डी मार्थ्या । यी राजाले खेले भैं शिकार अरू राजा, वजीर कौनैले खेल्न सक्यानन् । नाउंमा पनि यसो चीन, यमो बेलायत जिल्ला लखनउ, देश देशमा बहुतै चलाई चीनका बादशाहकहांबाट र बेलायतका बादशाहकहांबाट नाउं र तकमा पाया, चारधाम पनि गऱ्या ।

यी राजाले सोख गर्नामा यति कुराको यति थोक बांकी छ भन्या केही कुराको केही बांकी भयान, यी राजाले गरे जतिकौनै राजा बजीरले गऱ्यानन् , हात्ती, घोडा, पहलमान, जात जातका चिडी बाघ, हात्ती, बगैंचा, धर्मका कुरा राख्या । बहुत समर्थी, प्रतापवान् हुनाले ३२ वर्षसम्म राजकाज चलाई गया ।

यिनै राजाका साहिंला भाई पाल्पामा रह्याका वद्रीनरसिंह जनरल राणा ३१ सालका वैशाख महीनामा अयोध्या धपाई शून्य पदवीमा गया ।

तकुती तीर्थका नीलवाराही जात्रा अधि नभयाको राजा बक्साई ३२ साल चैत्र सुदी १ रोजदेखि ज्यापूहरूले रथयात्रा चलाया ।

श्री ५ महाराजाधिराज सुरेन्द्रविक्रम शाह कांछा बडामहारानी दुबै जना ३३ साल भाद्र सुदी ८ रोजका दिन शून्य पदवीमा गया र आफ्ना राज्यभरका प्रजाहरूलाई १३ दिनसम्म आशौच बार्न लगाई ३५ दिनमात्र बर्खी बार्न लगाया । इन्द्रजात्रा पनि १५ दिनपछि चलाया ।

फेरि राजा जंगबहादुरले पूर्व कासीसम्म हात्ती, बाघ, गेंडा, वनजन्तु इत्यादिको शिकार खेली नेपालतर्फ आउनलाई सिमरोनगढको तऱ्यानीमा पुग्दा अकस्मात् वेथा लागी १९३३ साल फागुण सुदी १२ रोज १ का दिन शून्य पदवीमा गया । निजका बहादुरी पदवी पायाका रानीहरू पनि धर्मशास्त्र थामी गयिन् । "मरणं पतिना सह"बचन थामी बडामहारानी हिरण्यगर्भ कुमारी १ पुतली महारानी २ श्री श्री महारानी ३ समेत सहगामिनी भै सत्यलोकमा अग्निप्रवेश भैगया ।

यिनै राजा जंगबहादुरका ठाउँमा साहिंला रणउदीप सिंह राजा भया । मुख्तियार काम जंगबहादुरका जेठा छोरा जगत् शमशेर जंगले पाया ।

त्यस ३४ सालका इन्द्रजात्रा भादै सुदी १५ रोजमा जात्रा गरी माथिल्ला टोल घुमाई ल्याउँदा केलटोल पुग्दा अकस्मात कुमारी रोइन् । यहाँदेखि रुँदै रुँदै दर्वारमा पुग्यापछि रुन छाडिन् ।

त्यसै ३४ साल चैत्र बदी १२ रोजका दिन तेस्रो प्रहरमा श्री ५ महाराजधिराज सुरेन्द्र विक्रम शाहका जेठा छोरा साहेबज्यू श्री ५ वलीहद महाराज त्रैलोक्यविक्रम शाहलाई

अकस्मात् शूलका बेथा लागी शून्य पदवीमा गया र अघि भैगयाको देवपाटन वछ्वला देवताको जात्रा आशौच सकी चलाया । घोडाजात्रा र अरू पीठका देवताका जात्रा आशौच सकी बैशाख सुदी १ रोजमा चलाउन लगाया । दुनियादारहरूलाई १३ दिन आशौच बार्न लगाया । ४५ दिनसम्म बर्खी बार्न चलाया ।

राजा जंगबहादुरका जेठा छोरा जेनरल जगत् जंग राणा बहादुरले श्री पशुपतिनाथका पश्चिम दर्वाजाका अघिल्तिर मण्डप बनाई ठूला सुनका बसाहा बनाई ३६ साल वैशाख सुदी १५ रोजका दिन यथाक्रमले प्रतिष्ठासमेत गरी चढाएका अलि देवताको मुहार छेकेको हुनाले दुनियाँको चित्त नबुझेको सांचो हो । कम्यान्डर इनचीफ जगत्शमशेर जंग राणा बहादुरलाई अकस्मात् सूजको बेथा लागी ३६ साल जेष्ठ वदी ६ रोज १ का दिन श्री पशुपति आर्यघाटमा पहिले पृथ्वीनारायण शाहका सर्दार शक्तिवल्लभ अर्ज्यालका नाती कांछा ब्रह्मज्ञानीका मुखबाट शास्त्रोक्त ब्रह्मज्ञान सप्ताह सुनी शून्य पदवीमा गया र पछिबाट मुख्तियारी काम जेनरल बीरशमशेरले पाया र ३६ साल जेष्ठ सुदी ५ रोजका दिन दर्शन गऱ्या ।

कोही दक्षिण देशतर्फबस्न्या ठूलै आदमीकी छोरीबेटी माता भै नेपालमा आई देवपाटनमा बस्याकी थिइन् । ४।५ वर्ष बसेपछि तिनै माताले राजासंग बक्साई आर्यघाटमा गंगाकारले ढुंगाको देवालय बनाई त्यसै देवालयमा देशबाट गंगामाईको सेतो मूर्ति झिकाई स्थापना गरी सुनको गजूरसमेत चढाई प्रतिष्ठा गरी जात्रासमेत चलाई उही जात्रा चलाउनलाई कुमारीका रथको आकारले ३ छप्परका छाना बनाई ३६ साल आषाढ सुदी ३ रोजका दिन तिनै धातुका गंगामाई राखी देवपाटन शहरमा घुमाई रथयात्रा चलाया ।

यही १९३६ साल आश्विन महीनामा मलमास पर्न जांदा हैजाका बेथाले श्रावण महीनादेखि काठमाडौं शहरमा रोजको ९०।१०० सम्म र भादगाउँ र पाटन शहरमा रोजको ५०।६० सम्म मर्न जांदा दुनियां गैह्र डराया र पछि-पछि शान्त भै कार्तिक महीनासम्म रोजको ३।४ सम्म मरी शान्त भै गया । दशैं कर्म शुद्ध आश्विनमा चलाया । वर्षाकालको बरसात पनि बहुत भैगया ।

श्री ५ महाराजधिराज सुरेन्द्रविक्रम शाहका पालामा यिनै मुख्तियारी राजा रणउद्दीप सिंह राणाले श्री पशुपतिका देवालय बाहिर खण्डमा संगमर्मरका प्रमाणका सेतो ढुंगाले छापिदियाको १९३६ सालमा बनायाका सोही साल आर्यघाटमा श्री गुह्येश्वरी जान्या बाटालाई अघि यिनै राजा रणउद्दीप सिंहका बाजे रामकृष्ण कम्बरले नेपाल गोर्खाली राजा

पृथ्वीनारायण शाहले मार्दा राजासङ्ग बक्साई बनाई गयाकोमा मजबूतसङ्ग ढुंगाले छापी बनाइदिया । नारायणहिटीको आफ्ना दर्वारहरू पनि मजबूतसङ्ग बनाया ।

यिनै राजाले मध्येस तराईको जिल्ला जिल्लाबाट भीमफेदीसम्म गाडामा वसारी वहांबाट नेपालमा वसार्नलाई भर नेपाल ३ शहरका गाउंले, दुनियां, जागीरे, ढाक्रे, गैह्‌ले घरपिच्छु एक-एक धोक्रा बोक्नू भन्या उर्दी भै कसै कसैले २ सुका ज्याला दी भरियालाई बोकाउन लाया ।

यिनै राजा रणउद्दीपसिंह राणाले चार धाम गर्न्या हो भनी श्री ५ बलिहद महारानी र आफ्ना रानी अरू लगायत भै भारदार, सिपाही, चाकर, दुनियां जम्मा ८।९ सय लस्कर ली ३७ साल मार्ग रोजमा नेपालबाट सवारी भै पहिले श्री जगन्नाथजीको दर्शन गरी वहांबाट श्री रामेश्वरको दर्शन गरी ३ धामको दर्शन गरी देश देशावरका तमाशा हेरी नेपालतर्फ सवारी फिर्दा नाराहिटी दर्वारबाट शहरका दर्वारबाट त्रिपुरेश्वरसम्म चित्र विचित्रका ढोका बनाई सडकका वरिपरि १०।१० हातका बीचमा रङ्ग रङ्गको ध्वजा राखी ३ शहरका नाच राखी त्रिपुरेश्वरका सडकदेखि नारायणहिटीसम्म वरिपरि सौगात राखी महाजनहरू गैह्र सडकका वरिपरि राखी अबीर, लावा, फूल धूप बाली सिंदूर जात्रा ३७ साल चैत्र सुदी ९ रोज ५ का दिन रातको १ घडी चढ्दा दर्वारभित्र प्रवेश गऱ्या ।

यिनै सालमा नेपाल खाल्डाभित्रका दुनियांदार जागीरे गैह्‌लाई रानीपोखरी सफा गराउन्या र धान राख्ने गोदामघर बनाउनलाई काठहरू बौक्नू भन्या मै घरही १ सुका पैसा उठाई लिया ।

यसै सालका चैत्र महीनामा नुवाकोटका देवीजात्रा पूर्णिमामा नुवाकोटका लिङ्ग खडा गर्दा खडा गराई उठाइसकेको अकस्मात् आधा घडीपछि लिंङ्गो ढलिगयो र फेरि लिंङ्गो खडा गऱ्या । केही दिनपछि श्री ५ महाराजाधिराज सुरेन्द्रविक्रम शाहलाई आराम नभै ग्रहणीको भाव लागी अकस्मात् बेथाले १९३८ साल वैशाख सुदी ११ रोज २ का घडी २।४ बांकी छंदा सारा अफिसर भै भारादार गैह्र पल्टन सामेल गराई सुख पालमा राज गराई आसा, गुर्जा, चंवर, पंरवा र बादशाही बाजा बजाउन लगाई श्री पशुपतिमा सवारी चलाई सारा दुनियांदार गैह्‌ले हेर्न जांदा सबै दुनियांदारले आंसु खसाई शहरबाट लगी श्री पशुपति पांचायनमा राखी दान प्रदान पनि बहुतै गऱ्या । शहरबाट सवारी चलायाका ९ दिन भयापछि ज्येष्ठ वदी ४ रोज ३ का दिन १४ घडी ४५ पला बांकी छंदा श्री पशुपति आर्यातीर्थमा सचेतसित श्री ईश्वरको स्मरण गर्दै जलयोग पाइए ३४ वर्षसम्म गादीमा राज भै हुकुम चलाई ५३ वर्षका उमेरमा शून्य पदवीमा गया र उसै दिन १० घडी बांकी छंदा

आफ्ना जेठा छोरा श्री ५ बलिहद् महाराज त्रैलोक्य विक्रम शाहका जेठा छोरा, नाती बाबु, साहेबज्यू पृथ्ववीरविक्रम शाह पांच वर्ष नाघी ६ वर्षका उमेरमा, उनै साहेबज्यूलाई गादीमा राखी हुकुम चलाया । आशौच साविकबमोजिम बार्न लाया । त्यसमा ब्राह्मण उपाध्याय र जैसीलाई ४ दिन अरूलाई १३ दिन आशौच बार्न लगाई ४५ दिनसम्मबर्खी बार्नु भन्या भै झ्याली पनि उसै दिन शहरमा पिटाया ।

फेरि केहि दिनपछि श्री ५ महाराजाधिराज राजेन्द्र विक्रम शाहका गाथमा पनि आराम नहुंदा बेथाले द्बाई ल्यायो र यही ३८ सालका आषाढ सुदी १२ रोजका रातको ८ घडी बांकी छंदा श्री पशुपति आर्यघाटमा सवारी चलाई ४ दिनपछि श्रावण वदी १ रोज ३ का दिन रात्रि ६ घडी बांकीमा आर्यघाटमा जलयोग पाई ६९ वर्षको उमेरमा ३० वर्ष गादीमा राज गरी हुकुम चलाई शून्य पदवीमा गया र सारा आफ्ना भरमुलुकका दुनियांदारलाई अघि भयाबमोजिम आशौच बार्न लगाई ४५ दिनसम्म बर्खी बार्नु भन्या उर्दी दिया । यीनै राजाले आफू गादीमा राज गर्दा धेरै मन्त्रीहरूलाई बेहकमा खराब गरिदिंदा आफूलाई पनि रहुन्ज्याल केही कुराको सुक्षेम पनि हुन गयान । कौनै राजा वजीर भए तापनि अर्कालाई बेहकमा अपराध गऱ्यापछि त्यो कुरा आफैले भोग गर्नुपर्छ भन्या धर्मशास्त्र छ । यो भाग पनि निश्चय गर्न पर्दो रहेछ ।

३२ सालमा पाटनका मच्छिन्द्रनाथका जात्रा चलाइसकेपछि न्हुगल जात्रा गर्दा दर्वारमा अलि नपुग्दै रथ बिग्ऱ्यो र फेरि रथ बनाई लगन पुग्दा श्री ५ सुरेन्द्र विक्रम शाह स्वर्गे हुंदा १३ दिनसम्म जात्रा चलाई १३ दिनपछि ज्येष्ठ सुदी १ रोजमा रथमा राखी द्वितीयाका दिन रथयात्रा गरी न्हुगल जात्रा र लगन जात्रा ज्याउला पीसाले (?) गर्ने जात्रा गर्दा ठाउंमा २।४ हात नपुग्दै अकस्मात् रथको आधा आधीमा भांचियो र फेरि अर्को रथ बनाई तयारी गरी राख्याको थियो । फेरि श्री ५ महाराजाधिराज राजेन्दैविक्रम शाह स्वर्गे भै बक्सनुभयो र १३ दिनको साइत पारी श्रावण सुदी २ रोज ४ का दिन जात्रा चलाई श्रावण सुदी ४ रोज ७ का दिन वुगमती लै गया । यिनै ३८ सालमा उत्तरखण्ड र पश्चिमखण्डका आग्नेयतिर धूम्रकेतु पनि आषाढ महीनामा देखिया र १ महीनासम्म रही गयो । श्री ५ महाराज गादीमा राज गराउनलाई राजा रजौटा चौधरी महन्त पहाड मधेस गाउं गाउंका ३ सयसम्म उपजनी हुन्या बिर्तावाल छाप माना चांवल फिकदार जो छन् सबैले आउनू भन्या उर्दी भै ३ शहरका महाजन र बाजा गैह्रलाई पनि आउनू भन्या भै ३८ साल मार्ग सुदी ९ रोज ४ मा श्री ५ महाराज पृथ्वीवीरविक्रम शाह बहादुरलाई शहरका दर्वारभित्र नासलचोकका सुनका सिंहासनमा राज गराई अभिषेक दिया र उसका भोलिपल्ट सारा

भैभारदार गैह्रले हात्ती घोडा चढी दर्वारबाट निस्की काठमाडौं गणेश प्रदक्षिणा गरी नरदेवी घुमी कीलागलको बाटो गै इन्दैचोक पुगी टुंडीखेलमा सवारी चलाई वहां गादीमा राज गराई सारा जेनरल, कर्णेल, राजा, रजौटा, भैभारदार निजामती गैह्रलाई कुर्चीमा बसाई सबेले रुपैयां असर्फी राखी दर्शन गरी बहुतै तमाशा भया । फेरि रातविषे पनि बत्तीको र आतसबाजीको बहुतै तमाशा भै गयो ।

यही ३८ साल पौष सुदी १० रोज ७ का दिन २ घडी बाँकीमा भुईंचालो भै फेरि पौष सुदी १५ रोज ४ का रातका तोप भयापछि भुईंचालो गयो । यही माघ महीनामा राजा रणउद्दीप सिंहलाई र कम्यान्डरइन चीफ जेनरल बीरशमशेर जंग राणाहरूलाई गादीसम्म दगा दी मारौं भन्या दुर्मन्त्रणाको सल्लाह भै भारादारहरूको मतलब गऱ्याको मतमा दैवका योगले अड्न नसक्दा त्यसै सल्लाहभित्रका कर्णेल गगनसिंहका नाती लेफ्टेन उत्तरध्वज भण्डँरीले भित्री संक्षेपसित कम्यान्डर इन चीफकहांसम्म संक्षेप विंती पारी उसै दिनका रात्रिमा सबै जनाका घर घरैमा सिपाहीले घेरा दिन लगाई पकडी ल्याई नेल गलबन्दी राखिदिया । कोही भागी गया र फेला पार्न नसकी रह्याको थियो ।

यही साल पौष महीनामा श्री ३ महाराजको सवारी चितौनमा हात्ती, गैंडा, बाघको शिकारमा सवारी भयाको थियो । यस्तो धूमधाम हुन जांदा सोही खबर कम्यान्डर इन चीफबाट श्री ३ महाराजाका हजूरमा लेखी विनती पार्दा माघ वदी ११ रोज १ का रातको १०।१२ घडी चढ्दा नारायणहिटी आई पुगी उसै रातभरमा जति पक्रियाका सबै भारदारहरूलाई कायल गरी कायलनामाको जमानबन्दी गराई उसका भोलिपल्ट माघ वदी १२ रोज २ का रात दिन १०।१२ घडी बांकीमा कम्पु राजदल १, महीन्द्र दल १ पल्टनका सिपाहीले नङ्गी तरवार काढी घेरा दिन लगाई पाता फर्काई बांधी भाचाखुसीमा मेजर कप्तान संग्रामसूर विष्ट १ लेफ्टेन छत्रध्वज शाही १ सूबेदार जङ्गविक्रम पाण्डे १ कप्तान रंगध्वज अधिकारी १, ऐंटन बांका खत्री १ जम्मा ५ र टेकु दोभानमा लेफ्टेन कर्णेल अम्बरविक्रम सिंह थापा १, कप्तान अम्बर विक्रम थापा १, कप्तान वखुआर शाही जम्मा ४ र भादगाउं जाने धोबीखोलामा सूबेदार पहलमान कार्की १, छेत्रबहादुर १, कप्तान फौदसिंह गुरुङ १ मेजर कप्तान शमशेर जंग थापा १ जम्मा ४ र खस्याङ्खुसुङ खोलामा कप्तान समर विक्रम थापा १ रणमान थापा १ इंसायन रणदल कार्की १ जम्मा ३ र शंखमूलमा कर्णेल इन्द्रै सिंह टंडन १, लाहोरियाका वीर १, कप्तान नरबहादुर बिष्ट १, रणकेसर बिष्ट १, जम्मा ४ जवान समेत २० लाई पोडे लगाई काटी मारी दिया । कर्णेल अमृत अधिकारीलाई पनि उसै दिन काट्नू भनी लै गयाको २ फेरा फर्काई नारायणहिटीमा

नै केही दिन कैद गरी छाडे । यही भित्र सूबेदार शेरजङ्ग पांडे केहींदिन लुकी आफैले बिख खाई टेकु दोभानमा मरिरह्याको सबै दुनियांले केही विघ्न ठहराया । फेरि सर्दार शिवप्रसाद अर्ज्याल १, मुलुकी सुब्बा दिग्विजयोपाध्याय १, होमनाथोपाध्याय १, टङ्कनाथोपाध्याय १, कामनामतंतिको पूजा गर्ने भट्ट १ जम्मा जवान ५ लाई माघ सुदी १४ रोज ५ का दिन चारपाटे मुडी सुंगुर झुण्डयाइएका गोडामा नेल हाली पाता कसी झ्याली पिटाई काठमाडौं शहर घुमाई उसका भोलिपल्ट भादगाउंमा घुमाई झेलखानामा केही दिन राखी पछि यिनै पांच जनालाई पश्चिमतर्फ धपाई रिढीमा शिवप्रसाद अर्ज्याललाई त्यहीं बस्नू भनी त्यहीं राख्या । अरू ४ जनालाई पाल्पा झेलखानामा कैद गरी राखिछोडया । केही दिनपछि सर्दार शिवप्रसाद त्यहीं रिढिमा मरिगया । अघि लुकी रह्याका कर्णेल वीरमान सिंह बस्न्यात १, सुबेदार लोकबहादुर थापा १, पक्रिए र कायल मुकायल गरी फाल्गुण वदी २ रोज १ मा यिनी कर्णेल वीरमान सिंह बस्न्यात १, सूबेदार लोकबाहदुर थापा १ कर्णेल अमृत सिंह अधिकारी १ जम्मा ३ लाई सिपाहीहरूले नंगी तरवार काढी घेरा लगाई पाता कसी शङ्खमूलमा लगी पोडे लाई काटी मारिदिया । जैनरल पद्मजङ्ग राणा र चीफ कर्णेल भक्तबहादुर बस्न्यात् यिनै दुवै जनालाई केही दिन कैद गरी पद्मजंगलाई नुवाकोट र भक्तबहादुर बस्न्यातलाई धुलीखेलमा धपाई २।३ महीना त्यहीं राखी वरी बोलाहट भै आफ्ना आफ्ना घर घर बस्न दिया । माहिला साहेबज्यू र जनरल बमविक्रम राणालाई पनि केही दिन यहीं नारायणहिटीमा कैद गरी ३९ सालका वैशाख महीनामा अंग्रजसङ्ग सलूक गरी चन्द्रागढी भन्ने ठाउंमा कप्तान् लेफ्टेन सुबेदार, सिपाहीहरू १ पट्टि खटाई कैद गर्न पठाया । मुखिया जनरल जगत्जङ्ग बहादुर राणा आंखाको औषधि गर्न भनी यहां राजासङ्ग बक्साई बिदा भै तोपको सलामी ली कलकत्ता गयाका थिया । पछि यिनै पक्रियाका भै भारदारहरूले यिनी जनरल पनि सल्लाहभित्र अलि अलि थाहा पाउन्याहरू पनि ४।५ जना त्रिहूली पार गरी धपाया ४।५ जना ६।६ वर्षको कैद गर्न्या हो भनी झेलखानामा राखिदिया, यिनी काटियाका, मुडियाका भाइ-भारदारहरूका मुडियाका, काटियाका सर्वस्व नगदी, जिन्सी, मुना, चांदी, हीरा, मोती भांडा-वर्तन सबै नली उनैका जहानलाई नै दी कागत र खेतमात्र सरकार लाग्यो भन्य भै यिनका जहान बस्दा सबै जहान पहाड पर्वतमा घर छ वहीं वहीं पठाइदिनू भन्या भै पहाड पर्वतमा पठाइदिया । यस्तो धूमधाम भयापछि ३९ सालदेखि काठमाडौं शहरमा र पाटन, भादगाउं तीनै शहरमा पुलीसको अड्डा अघाडि टोल टोलमा राख्या ।

त्यहां उप्रान्त वीरशमशेर जनरलको महिमा बताइन्छ । यहांसम्मको बयान भैसकेपछि पटनामा बस्याका मुखिया जगत् जङ्गलाई बोलाहट गर्न श्री ३ महाराज रणउद्दीप सिंहले चुकेकै हो । तर, दयावन्त धर्मात्मा दुबै हुन् । ब्राह्मण, साधु, स्वामीहरूमा र आफ्ना वंशको खुबै दया गर्ने हुनाले बोलाहट भै आयाका मुखिया जनरललाई केही दिनपछि मुख्तियारीमा प्राइम मिनिस्टर नाउं राखी दिनाको मतलब केही जीतजङ्ग राणा कानको औषधि गर्न ४१ सालमा बम्बई गया । त्यहांपछि हिन्दुस्तानबाट अंग्रेजले दिल्लीमा कवाज देखाउन भनी चिठी पठाउँदा पल्टन ४ वज्रबहादुर १ रैफल १, कालीबख्श १ देवीदत्त १ जम्मा ४ को अफिसर मुख्य जनरल वीरशमशेर १ कर्णेल हर्षजङ्ग ब, अरू अफिसर ४ पल्टन खटी टुंडीखेलमा पाल हाली बस्याका थिया । सम्वत् १९४२ साल कार्तिक .........॥

१.काठमाडौँ उपत्यकाका प्रसिद्ध तीन सहरमध्ये सबैभन्दा पुरानो पाटन सहर जसलाई प्राचीनकालमा युपग्राम, यल, मनिङ्ल, ललितपत्तन, ललितापुरी आदि नामले बोलाइन्थ्यो ।